Nepal, Gorakha Kingdom

GORAKHA READING SERIES NO. 8.

# Sankshipta Ramayan

1916.

श्रीयुत,

अनेकोपपदमंडित, विद्वत्समाजभूषण,

नीतिसदाचारनिरत,

नामदार न्यायाधीश

काशीनाथ त्र्यंबक तेलंग,

मुंबई एथील युनिव्हर्सिटीचे व्हाइसचान्सेलर,

यांना,

हा ग्रंथ,

फारादिवसांच्या स्नेहाचें स्मारक म्हणून,

परमादरानें अर्पण

केला असे.

Nepal, Gorakha Kingdom.

"Education Department."

GORAKHA READING SERIES NO. 8.

# Sanksipta Ramayan.

( In Gorakha Language. )



PUBLISHED

*under the authority of the Government.*

COMPILED BY

The Gorakha-Bhasha-Prakashini-Samiti, under the supervision of NAIB SUBA PANDIT, RAMA MANI, A. D. Superintendent, Department Education, NEPAL.

PRINTED AT THE BOMBAY VAIBHAV PRESS,

BOMBAY.

1916.

Price { Nepal Pice. 75.
British As. 9-6.

नेपाल, गोरखा-राजधानी.

" गोरखा-शिक्षा-प्रचारक विभाग. "

---

गोरखा-शिक्षा, संख्या ८

# संक्षिप्त रामायण.

( गोरखाली बोलीको )



नेपाल-सरकारका हुकूम बमोजिम तयार भयेको

यो

गोरखा-भाषा-प्रकाशिनी-समितिका अध्यक्ष, नायब सुब्बा पण्डित राममणि आ. दी. का अध्यक्षतामा सम्पादित भई.

---

तद्द्वारा

बम्बई-बम्बईवैभव प्रेसमा छापी प्रकाश गरीयो.

---

सम्वत् १९७२ साल

---

मूल्य { नेपाली पैसा. ।।७५.
अंग्रेजी आना ।।=)।।



श्री ३ महाराज.

H. H. the Maharaja Lt. General Sir, Chandra Sham Sher Jung Bahadur Rana G. C. B.; G. C. S. I.; G. C. V. O. and D. C. L., Thong. Ling. Pimma. Ko. Kang. Wang. San. Primminister and Marshal of Nepal.

# समर्पण.

नेपालदेशका उन्नतिमा हरसमय विचार राखी बक्सने, नेपालको भाग्य-विधाता, हाम्रा प्रभु, स्वस्तिश्रीमदतिप्रचण्डभुजदण्डेत्यादि श्रीश्रीश्रीमहाराज, आनरेरि लेफ्टिनेन्ट जनरल, सर, चन्द्रसम्सेर जङ्ग बहादुर राणा, जि. सि. बि., जि. सि. यस्. आइ., जि. सि. भि. ओ, एण्ड डि. सि. यल्., थोङ्. लिङ्. पिम्मा. को. काङ्. वाङ्. स्यान्. प्रायम्मिनिष्टर एण्ड मार्शलका जुनाफमा समितिका मेम्बरहरूले सादर चढायेको.

नेपाल
माघ १९७२.

स्वामि भक्त,
गोरखा-भाषा-प्रकाशिनी-
समिति—
का कर्मचारी गण.



# भूमिका।





जुन देशवासीले वीर र सच्चरित्र आफना पूर्व—पुरुषको जीवन—चरित्र पढेको छैन; तेस्ता मानीसमा धर्म—ज्ञान, व्यवहार—ज्ञान र पटुता आदि शुभ गुणको उदय सर्वथा हुन शकदैन, आजकल सर्वत्र यही विचारका प्राबल्यको प्रचार भयेको छ. हुन पनी विचार गरदा स्पष्ट ज्ञान हुन्छ कि आफनू प्राचीन इतिहासको उन्नति न भयेको देश कुनै पनी छैन. इतिहासको अवलोकनले मानीस सझरित्र हुन लागद्छ. कर्त्तव्याकर्त्तव्यको विचारमा पनी तेसबाट ठूलो साहाय्य मिल्दछ. इतिहास हेरनाले रामचन्द्रको जस्तो पितृआज्ञापालनादि काम गरनू. रावणादिको जस्तो परदारहरणादि नीच काम नगरनू भन्ने यस्ता अनेक असल शिक्षा पायिन्छन. तेसरी ज्ञान—पूर्वक काम गरदा तेसले सम्पूर्ण काममा सफलता पनी प्राप्त गरदछ. तेसको चित्त—वृत्ति पनी निर्दोष र सर्वदा उचित कर्ममा नै लागेको हुन्छ. फेरी इतिहास द्वारा नारायणका स्तुति पाठादिले धर्म पनी हुन्छ. तेसले पछीबाट आफनू कल्याण पनी गरदछ. यसैले इतिहास द्वारा मानीसको ऐह-

लौकिक र पारलौकिक सबै कार्यहरू सथन्छन, यस कुराको हाम्रा शास्त्रमा पनी विस्तारपूर्वक—विवेचना गरेकोछ.

हाम्रा प्राचीन इतिहास धेरै नै छन. तर ती सबमा रामायणको र महाभारतको स्थान अत्यन्त ऊचो छ. उनका अक्षरमा पनी हाम्रो देववत् निष्ठा छ. फेरी यसका एक एक अक्षरलाई हामी बडो पवित्र पनी संझन्छौं. यथार्थमा हामी आर्यहरूका धर्मको सर्वस्व नै इनेलाई भने पनी हुन्छ. ती ग्रन्थ सब संस्कृतमा हुनाले र संस्कृत नजाननेहरूलाई पूर्णतया तेस्ता महान् ग्रन्थको रसास्वाद हुन नशक्ने हुनाले आज यस रामायणको गोरखाली बोलीमा संक्षिप्त र सुंदर अनुवाद गरेको हो. यसमा महाप्रभु रामचन्द्रका स्वच्छ चरितामृतको वर्णन छ.

परिवर्तन—शील संसारमा सृष्टिका आदि देखी आज सम्म असङ्ख्य प्राणीहरूको जन्म भयो, फेरी नाश पनी भयो. तर तेसमा इक्ष्वाकु-कुल-दीपक रघु-कुल-तिलक श्रीरामचन्द्रको र अरू भरत-लक्ष्मणादिका चरित्रको कथा अझ सम्म पनी नाश भयेको छैन. किन भने तिनीहरूको चरित्र निर्दोष छ, अतएव अमल छ. अमल कुराको नाश सर्वथा चाँहि हुँदैन. फेरी इनीहरूको जो चरितामृत छ, सो धर्ममय र शिक्षा—जनक पनी छ. तेस्तो सर्वाङ्ग-सुन्दर चरित्रको वर्णन भयेको इतिहास संस्कृतमा कदाचित् अरू-कोही होस, अथवा तेस्तो इतिहास यस संसारमा दुर्लभ छ भने पनी हुन्छ. यसका एक एक अक्षरमा पितृ-धर्म, मातृ-धर्म, भ्रातृ-धर्म, स्त्री-धर्म, मित्र-धर्म, आपद्धर्म, राज-धर्म र युद्ध-धर्मको शुद्ध स्वरूप मूर्तिमान् भई खडा रहेको छ. असलाई जे कुराको अवलोकनमा मन हुन्छ, उसले यो ग्रन्थ पल्टायेर हेरे सो सब यसैमा पाउने छ. यसैले यसको उच्चतामा सबले मुग्ध हुनु परेको हो.

यस रामायणका नायक नायिका र तदानुषङ्गिक परिवार मध्ये यस्ता एक पनी पात्र छैनन जसका उदात्त—गुण अनुकरणीय नहुन. पहिले रामचन्द्रका

गुणको नै किञ्चित् उल्लेख गरिन्छ. यस्तो धर्ममय, दयामूर्ति, सत्यशील, विचारवान् र क्षमी पुरुष, यस संसाररूप रङ्ग-भूमिमा अवतीर्ण भयेका अरू कोही पनी देखियेका छैनन. फेरी धैर्य, साहस, प्रताप, गाम्भीर्य इत्यादि शुभ गुणको निरन्तर सन्निधान पनी उनमा बाहेक अरूमा प्रायः पूर्णतया देखिंदैन. इनै सब कारणले उदात्तगुण—सम्पन्न उज्ज्वल उदाहरण रामचन्द्र नै हुनू हुन्छ.

जुन रामचन्द्रले राज्य गर्दा एक कुकूर पनी दुःखी थियेन. सारा अयोध्या सम्पूर्ण—गुणले भरियेको थियो. राम—राज्यको प्रभाव अझ सम्म जन—साधारणमा व्याप्त छ. सब भनद्छन, के आजकल राम—राज्य भयेको छ ?. हेर यो ता राम—राज्य होयिन. अहा !!! राम—राज्यलाई पनी बिर्साई दियो." इत्यादि •

सीताजीको पति—निष्ठा र पति—प्रेम पनी अलौकिक थियो. अझ पनी मानीसहरू स्त्रीजातिलाई सीताजीको दृष्टान्त देखाउँदछन. राजाकी छोरी, राजाकी बुहारी, सुकुमाराङ्गी सीताजीले पति—परायणताको दृष्टान्तलाई जगा—उनाका निमित्त नै दुःसह दुःख सहन गर्दै पतिका साथ वन जानलाई प्रस्तुत हुनू, रावण जस्ता सर्वैश्वर्य—शाली सर्व-शक्तिमान्का हातमा परेर पनी, राज्यबाट निकाला भयेका, वन वन हिंड्ने, गरीब पतिको भक्तिलाई न छोडी तेस्तो विकट समयमा पनी आफनू स्त्री-धर्मलाई खडा राखनू, फेरी शुद्ध चित्तले रावणका घरमा बसदामा आफूमाथी पतिको पातिव्रत्य धर्ममा केही शङ्का भयेको देखी तैसै वेला अग्निमा प्रवेश गेरर पातिव्रत्यको सत्य—स्वरूप सबलाई देखाई दिनू, फेरी अयोध्यामा आये पछी पनी पृथिवीलाई एक वम चिरी उनका गर्भमा प्रवेश गरी पतिव्रताको अखण्ड र अक्षय कीर्ति मात्र छोडेर परम पदमा जानू, इत्यादि कुराले यथार्थ थाहा हुन्छ कि पतिव्रता स्त्रीहरू के गरन शकदैनन ? उस्ती सती—शिरोमणि सीताजीको अलौ-

किक पातिव्रत्य गुण अनुकरणीय र आदरणीय किन नहोस ? यस्तो उदा-हरण अन्यत्र पाउनु कठिन छ.

महात्मा भरतजीको आदर्श पनी सब भन्दा श्रेष्ठ छ. उनको धर्म—ज्ञानमा समता गर्ने आदर्श रामायणभरमा अर्को छैन. आदिदेखी अन्त्य सम्ममा कहीं पनी उनले आफ्नू मनोवृत्तिलाई बदलिन दियेनन. यो कस्तो मनोनिग्रह हो ? भरतका आदर्शमा कुनै अंशमा पनी केही व्यभिचार देखिदैन. व्यावहारिक-दृष्टिले विचार गर्दा रामायण भरमा सब भन्दा ठूलो आदर्श चरित्र भरतैको छ भने पनी हुन्छ. दाज्यूका निमित्त आफूले पायेको राज्य पनी छोडनु, वहाँका खराऊको पुजा गरनु, फेरी वहाँका निमित्त ब्रह्मचर्य लिई चौध वर्ष सम्म जङ्गलमा गयेर मुनिवृत्तिले काल-क्षेपण गरनु, रामचन्द्र आउनाका साथ वहाँलाई राज्य सुम्पनु, इत्यादि उच्च आदर्श के अरू व्यक्तिमा देखिन्छ ? इनका विषयमा सब कुराको विवेचना गरौं र इनका आदर्शको यथार्थ वर्णन गरौं भने अर्को येउटा किताबै बनदछ.

लक्ष्मणको आदर्शमा पनी अद्भुत चमत्कार देखिन्छ. जुन वीरले आफना दाज्यूको तन, मन, धनले सहायता गरे. दाज्यू जङ्गलमा जान्छन भन्ने समा-चार सुनदैमा आफू पनी दाज्यूको अङ्ग रक्षक भई जङ्गलमा घूमन प्रस्तुत भये. जङ्गलमा गयेर पनी दाज्यू सुतेका बखतमा आफू रातभर खडा रहेर पनी वहाँको रक्षा गरे. जुन वीरले चौध वर्ष सम्म ब्रह्मचर्यको अखण्ड पालना गरी दाज्यूको एक निष्ठाले सेवा गरे. यो काम पनी सामान्य होयिन.

शत्रुघ्नको आदर्शमा पनी रामायणमा कहीं केही व्यभिचार देखियो को छैन. इनले दाज्यूहरूको सेवा निश्छल भावले गरेका छन. दाज्यूहरूलाई पिता बराबर देखी इनले पनी उनीहरूको काय—वचन—मनले सेवा गरे.

भक्त-शिरोमणि हनुमानको आदर्श पनी अपूर्व छ. उनी जसको सेवक भये उसका सेवामा उनले कहिले पनी त्रुटि हुन दियेनन. यस अनादि संसा-

रमा स्वार्थी सेवकहरू धेरै नै भयेका छन. आफनू स्वार्थसाधनाका निमित्त प्रभुको जस्तोसुकै हानि भये ता पनी उनीहरू केही विचारै नगरकी तेस्ता काममा पनी प्रवृत्त हुन्छन, जसले गरदा प्रभुको ठुलो हानी हुन आउछ तेसमा उनीहरू केहीमात्र पनी संकोच गर्दैनन. यस्ता सेवक संसारका इतिहासमा लाखौं देखिन्छन, पायिन्छन, सुनिन्छन तर हनुमान् जस्तो सेवक पाउनू कठिन छ. जसले आफना प्रभुको सेवा गरदा ब्रह्मचर्य व्रतलाई कतैबाट पनी खण्डित हुन दियेन. उनले मालिकको एक-निष्ठाले सेवा गेर, आफना प्रभुको महिमालाई कतै बाट पनी रती भर घटन दियेनन. आदिदेखी अन्त्य सम्म सेवक-तत्परताले—आफनू शरीर शुकाये. मालिकको काम गरन जाँदा उनले भोक प्यासको परवाह राखेनन. अनेक सङ्कट परी आउँदा पनी बडो निर्भीक-चित्तले ती सब सङ्कट पार गरे, यसरी आत्म-निरपेक्ष भई गरेका सेवाको फल ( इनाम ) स्वामीको कृपा देखी अर्को कुरा उनले केही मागेनन, यस्ता स्वार्थ-त्यागी, स्वामि-भक्त सेवक अन्यत्र सर्वथा पायिंदैनन. इनको आदर्श सकल सेवा-वृत्तिवालाले अनुकरण गरन योग्य छ. स्वामी र सेवकको आद-र्शमा यो बराबर आदर्श-चरित्र अरू पाउनू कठिन छ.

विभीषण र सुग्रीवका मैत्रीको आदर्श पनी अनौठा छ. इनैका सहा-यता द्वारा श्रीरामले आफना सम्पूर्ण शत्रुको संहार गरनू भयो. यस कारण हाम्रा हिसाबमा इनीहरू पनी आदरणीय र स्तुत्य छन.

महाराज दशरथको आदर्श पनी अनौठा छ, किनभने आफनू जीवनको अन्त्य हुने थाहा भयेर पनी उनले आफनू सत्यनिष्ठा छोडेनन, रामलाई बनमा पठाये. सत्यप्रियताको यो उज्ज्वल उदाहरण छ.

—प्राणप्रिय पुत्रलाई पनी एक सानू प्रतिज्ञामा बनमा पठाउनू यो के सामान्य इतर जनमा हुन शकछ ? जुन रामचन्द्रले अयोध्या छोडेका केही दिन पछी महाराज दशरथको स्वर्गवास पनी भयो.

यस रामायणमा जुन कुराको उदाहरण खोजे पनी पायिन्छ. सङ्गगुणले मानीसको कार्य पनी उस्तै हुन आउँछ. पापी मानीसको सङ्ग भयो भने सो सङ्ग गर्नेका मनमा पनी पापवृत्तिको उद्गम हुन लाग्दछ. यो पनी देखियेके कुरा छ. सारांश यो हो कि सङ्गका गुणले ठूला मानीसको प्रवृत्ति पनी बद्लिन्छ इतर जनको ता कुरै फाक छ. मानीस चिनेर मात्र मित्रता गर्नू योग्य छ. रामचन्द्रको पनी कहीं कहीं केही भूल हुन गयेको रहेछ भने त्यो सब सङ्ग दोषले नै भयेको हुनू पर्दछ. कारण "**संसर्गजा दोषगुणा भवन्ति**"

अर्काकी स्वास्नी हर्दाके हुन्छ ? यस कुराको प्रत्यक्ष उदाहरण रावण छन. फेरी उनले ज्यादा बढी ऐश्वर्यका घमण्डमा लागेर सारा देवता दानवलाई ता मिथ्यार्थे भने मेरा अहारा जस्ता वानर र मानीसले मलाई के गर्न शकद्‌ छन भनी शत्रुको उपेक्षा गर्दा, आफनू कुल समेत भस्म पारी रावण स्वयं बिग्रे. यसले शत्रुको कदापि उपेक्षा नगर्नू. फेरी दिमाग पनी कसैले नलिनू भन्ने कुरा यसबाट प्रत्यक्ष झलकन्छ. मानीसले अधिक स्त्रैण ( स्त्रीको वश्य ) पनी हुनू हुँदैन. तेसले गर्दा आफनू जीवनको समेत अन्त्य हुन्छ. जस्तैः-महाराज दशरथको देहान्त भयो. दाज्यू भाईको परस्पर भरोसामा रामलक्ष्मणको चरित्र र दाज्यू भाईको परस्पर प्रेममा राम र भरतको चरित्र प्रशंसनीय छ. यस्ता अनेक अनेक शिक्षा-प्रद उदाहरणहरू यसमा पायिन्छन, यसलाई मनन-पूर्वक हेरनाले सब आफैं ज्ञान हुनेछ.

रामायणका मुख्य पात्रको संक्षेपले आदर्श—चरित्र पनी लेखियो. यद्यपि रामायणका अरू अरू पनी धेरै नै पात्र छन, तर ती सबको नाम लेखेर यसै गरी एक एकको वर्णन नगर्नाको कारण यही हो कि रामायणको यो भूमिका हो, भूमिकामा मुख्य मुख्य दुई चार व्यक्तिको मात्र केही चारित्रको उल्लेख गरी प्रकृत ग्रन्थको परिचय पाठकवर्गमा गराई दिनू पर्द छ.

हामी हरूको यस रामायणमा यस्तो विश्वास छ कि, यसको पाठ गरनाले चाँडो विद्या-बुद्धि बढी कालन्तरमा सो मनुष्य ठूलो प्रतिष्ठित पण्डित हुन्छ. यसैले बालककालमा " **मा निषाद प्रतिष्ठां त्वं** " भन्ने श्लोक बालकलाई पढाउँछन, जसमा बालकले सो श्लोक भनन शक्यो भने तिनका माताहरू यस बालकको उदर्क ( भविष्य ) असल छ, यो ठूलो विद्वान् हुनेछ, भन्ने विश्वास मानद्छन. यसैले पनी रामायणका उपर जनसाधारणको विद्यादायकत्वमा उच्चाभिलाष देखिन्छ. रामायण विद्या-दायक छ भन्ने ख्याति भयेका र हालमा हाम्रा देशका युवक-गणलाई मातृ-भाषा द्वारा शिक्षा दिलाउनाका निमित्त अनेक शिक्षा-प्रद पुस्तकको रचना गरने कामको प्रारम्भ भयेको हुनाले, पहिले रामायणलाई नै प्रकाश गराउने यत्न गरियेको हो.

जो मूर्ख छन, उनीहरू पनी चाहे धर्मज्ञानले होस, चाहे श्लोक मात्र भट्याएर भनमाका निमित्त होस, दोबाटा दोबाटामा रामायण भनद्छन. रामायणको यहाँ सम्म प्रचार भयेको छ कि रामायणको पुस्तक रद्दी भये पनी मानीसले लियेका छन. अहिले सम्म नेपाली रामायण कयौँ लाख प्रति बिकिसके होलान, अझ पनी बिकदै छन. तेसमा कसैको पनी अरूचि देखिंदैन. धेरै मानीस यहाँ रामायणका प्रसादले धनी भयेका पनी छन. रामायणको प्रचार नभयेको कहीं छैन, के नेपाल, के बङ्गाल, के बम्बई, के मद्रास, के अवध जहाँ पनी रामायणका सुन्दर पुस्तकको प्रचार देखियेके छ. तुलसीदासको रामायण ता करोडौं प्रति बिकी सक्यो होला, अझ पनी बराबर बिकदै छ. यसैले रामायणका उपर जन-साधारणको ठूलो विश्वास देखिन्छ.

यस्तो—सर्व लोक सम्मत रामायणको कथा हाम्रा नवीन छात्रवर्गहरूलाई पनी शुभ-दायक हुने छ भन्ने विचारले गोरखाली बालकहरूलाई कक्षा कक्षामा पढने पुस्तकका निमित्त यस पुस्तकको रचना भयेकोछ. यो पुस्तक पढने विद्यार्थीहरूले चाँडै व्युत्पत्ति बढाउन शकुन भन्ने हेतुले ठाउँ ठाउँमा केही

क्लिष्ट गराउनाका निमित्त धेरै संस्कृत शब्दको समावेश पनी गरीयेको छ. यो किताब, शक्तेसम्म बालक र विद्यार्थीहरूको ज्ञान-वृद्धि होस भन्ने विचारले यथाशक्य तदुपयोगी नै बनेको छ. सारांश यो हो कि बालकहरूको उपयोगी बनाउनालाई यथासम्भव यत्न गरियेको छ.

प्रस्तुत पुस्तकको महत्त्व अति ठूलो छ. यसको बराबरी गर्ने पुस्तक कदाचित् संस्कृतमा पनी अरू कुनै होस. यस्तो अद्वितीय पुस्तकलाई केही साधन पनी ठीक नभयेको गोरखा भाषामा लेख्नु र तेसमा उनै सब विषयहरूलाई यथावत् संक्षिप्त गरी ल्याउनु मा‍ै कठिनको काम छ. फेरी लेख्नमा पनी कहीं कहीं भुल परेको होला. नयाँ उठानको काम हुनाले लेख पनी विशेष रुचिकर होइन, यस उपरान्त प्रियपाठकहरू सँग सविनय प्रार्थना छ कि यदि उक्त कुरामा कुनै तरहको भूल रहन गयेको रहेछ भने, सबले क्षमा राख्नु पर्छ. पछी पछी यथासम्भव सब ठीक हुँदै जानेछ.

यस्ता अत्युत्तम पुस्तकहरू प्रकाश गराउनका निमित्त श्री ३ महाराज बाट गोरखा–भाषा–प्रकाशिनी–समिति खडा गराइ बक्सेको हुनाले हामी नेपाली मात्रले तन, मन दियेर हुने सम्म सरकारको अक्षय अभ्युदयको उत्तरोत्तर वृद्धिका निमित्त श्रीपरमेश्वरसँग प्रार्थना गरनु पर्दछ.

यो पुस्तक लेख्दा वाल्मीकीय रामायण, क्षेमेन्द्रकृत रामायण मञ्जरी, भानुभक्तीय रामायण, वीर भ्राता लक्ष्मण, महात्मा भरतजी, प्रयागको बाल रामायण, सीताचरित, इत्यादि पुस्तक बाट धेरै साहाय्य लियेको छ. यस उसले इनका कर्ता लाई पनी सहस्रशः धन्यवाद् छ.

आज उनै भक्तवत्सल भगवान् रामचन्द्रका कृपाले यो सानु पुस्तक,– जसमा भगवच्चरणारविन्दको गुणगान भरियेको छ–लेखी सज्जनहरूका करकमलमा उपस्थित गरेको छु, आशा छ वहाहरूले यस पुस्तक द्वारा आफनू ज्ञान-वृद्धि गराई मेरो उत्साहलाई सफल गरनु हुनेछ.

यो पुस्तक बालकहरूले गोरखा शिक्षाको चार पाँच पुस्तक पढी शके पछि पढन ठीक हुने गरी बनेको छ. आशा छ कि यस पुस्तक द्वारा बालकहरू आफ्नू ज्ञानवृद्धि अनायासै गर्न शकने छन.

यस पुस्तकलाई समितिका सुयोग्य मेम्बरहरूले सब तरहबाट जाँची ठीक गरेको हुनाले यो पुस्तक छपाउने प्रबन्ध भई छापियेको हो. मेम्बरहरूका रायमा यो पुस्तक बालकहरूले पढनालाई उपयुक्त ठहरियेको छ.

अन्त्यमा पाठक–हरूका उपर वाल्मीकि–रचित एक श्लोक द्वारा आशीर्वाद वितरण–पूर्वक यस भूमिकाको समाप्ति गरिन्छ.

" पठन् द्विजो वागृषभत्वमीयात्
क्षत्रस्तथा भूमिपतित्वमीयात् ।
वणिग्जनः पुण्य-फलत्वमीया–
ज्जनश्च शूद्रोऽपि महत्त्वमीयात् ॥ "

गो. भा. प्र. स.
नेपाल
१३–१०–७२

पं. राममणि आ. दी.
नायब सुब्बा ।





# मुखबन्ध.



## रामायणको संक्षिप्त परिचय.



“ ज्येष्ठो जयति वाल्मीकिः सर्गबन्धे प्रजापतिः
यः सर्वहृदयालीनं काव्यं रामायणं व्यधात् ”



काव्यरूप अपार संसारको सृष्टिचक्र चलाउने आदिकवि महर्षि वाल्मीकिलाई सहस्रशः नमस्कार छ, जसका परिपूर्ण कृपाकटाक्षदेखी जगत्पूज्य भगवान् रामचन्द्रको चरित्र रामायणात्मक आदिकाव्यको प्रादुर्भाव भयो. जुन रामायणात्मक काव्यका पठन–पाठनले हामीहरू आफूलाई पवित्र संझन्छौं.

महात्मा मुनिवर उनै वाल्मीकि एक दिन आफना आश्रममा आनन्दपूर्वक बसेका थिये. तस बेला अव्याहत-गति देवर्षि नारदजी पनी तहाँ आए.

अकस्मात् आयेका ती नारदलाई देखी नमस्कारका अनन्तर अत्यन्त प्रसन्नताका साथ वाल्मीकि ले आसनादि द्वारा उनको सत्कार गरे. यही अवसरमा प्रसङ्गवशात् वाल्मीकिले नारद सँग प्रेमपूर्वक सोधे, " हे ऋषीश्वर ! यस लोकमा सर्वैश्वर्यसम्पन्न, पुण्यात्मा, आत्मज्ञानी, क्षमी, तेजस्वी र महापराक्रमी पुरुष को छ ?, कसको कीर्ति चन्द्रमाको किरण झैं सारा जगत्मा प्रकाशमान छ ?, भूषणादिले सुन्दरी स्त्रीलाई झैं राजलक्ष्मीले कसलाई भूषित गरायेकी छन ?, लताहरूको वसन्त ऋतु झैं प्रजाहरूको जीवनाधार भयेर रहेको को छ ?, रत्नको समुद्र झैं गुणको खानी बनेर बसेको को छ ?. "

वाल्मीकिका इत्यादि प्रश्न सुनेर नारदले भने, " मुनीश्वर ! तपाईंले बडाया कुरा सोधनु भयो, तर तपाईंले सोधे जस्तो मानीस श्रीरामचन्द्र बाहेक अरू पाउनु कठिन छ. यस लोकमा रामचन्द्र जत्तिको गुणी, पुण्यात्मा, सत्य सन्ध, जितेन्द्रिय, कीर्तिमान्, ज्ञानी र पवित्र पुरुष कुनै छैन. रामचन्द्रको महिमा अपार छ. यस त्रिभुवनमा राम जस्तो राजा अरू भयेन. राजाहरूका मध्यमा रामचन्द्र शिरोमणि हुन." यसरी रामचन्द्रको ठूलो प्रशंसा गरि नारदजी आफना धाममा गये. महर्षि वाल्मीकि पनी उनका वचनामृतपानले प्रसन्नचित्त भई रामचन्द्रको प्रशंसा गरन लागे.

एक दिन वाल्मीकि तमसा नदीमा स्नान गेरर आफना शिष्यका साथ वनमा घुमन लागेका थिये; तैसे बेला अकस्मात् आफना अगाडी कामातुर क्रौञ्चपक्षी (कन्याङकुरूङ) लाई कोई व्याधाले बाण हानी मारेको देखे. सो देखदा वाल्मीकिका मनमा करुणारसको प्रवाह चलन लाग्यो. उनी शोकले व्याकुल भयेर मनमा विचार गरन लागे कि अहो ! यस निर्दयी व्याधाले बडो मर्म-विदारक कर्म गन्यो. यसले निरपराध यस पक्षीको व्यर्थ ज्यान लियो. हाय ! आज मैंले यस्तो के देखनु पन्यो ? यस्तो विचार गरदा गरदै वाल्मीकिका मुखबाट अकस्मात् श्लोकरूप भयेर यो वचन निस्कयो:—

"[१]मा निषाद ! प्रतिष्ठान्त्वमगमः शाश्वतीः समाः
यत्क्रौञ्चमिथुनादेकमवधीः काममोहितम्."

यसरी आफना मुखबाट अकस्मात् श्लोक निस्कदा वाल्मीकिलाई आफै आश्चर्य लाग्यो. उनी उही श्लोक बराबर पढेर शिष्यहरूलाई सुनाउँदै बनमा घूमन थाले. तेसै बेला तेस श्लोकबाट प्रसन्न भयेका ब्रह्माजी तहीं आउनू भयो. वाल्मीकिले पनी पाद्यार्घ्यादि पूजाले वहाँलाई प्रसन्न गराये.

यती भये पछी, ब्रह्माजीले वाल्मीकि सँग प्रसन्नताका साथ भननू भयो, "मुनीश्वर ! व्याधाले मारेको क्रौञ्चपक्षीलाई देख्दा करुणापूर्ण भयेका तिम्रा मुखबाट जुन श्लोक निस्क्यो त्यो सरस्वतीको प्रसाद हो. तेसै श्लोकका प्रभावले तिमी बडा कवि हुनेछौ. अब तिमी श्रीरामचन्द्रको चरित्रलाई सर्गबद्ध काव्य बनाऊ. तिमी सँग सरस्वती कृतार्थ होउन, तिम्रो वचन कुनै पनी बेरसको र बेकामको नहोस. तिमीले बनायेको काव्य सबै पढ्ने छन. उसले सबैका मनलाई आनन्दित गराउनेछ. त्यो काव्यरूप तिम्रो कीर्ति आकल्पास्थिर रहने छ. अब ढीलो नगरी चाँडैने रामायणात्मक आदिकाव्यको निर्मा प्रारम्भ गर. रामचन्द्रको सारा चरित्र आँखिले देखे झैं गरेर वर्णन गरने शक्ति तिमीलाई हुनेछ. सो काव्यरचनामा तिमीलाई केही पनी परिश्रम परने छैन, सजिलै सँग समाप्त गरौला " यती भनी ब्रह्माजी अन्तर्धान हुनू भयो.

ब्रह्माजीको यस्तो वरदान पायेर वाल्मीकि अत्यन्त गद्गद् भये. उनी रामचन्द्रको सारा चरित्र झल झली देखन थाले. तेसरी स्वयं रामचन्द्रको चरित्र ज्ञान हुँदा, उनी ब्रह्माजीका अज्ञानुसार रामायणात्मक आदिकाव्यको निर्माण गरन लागे. केही कालमा सो काव्य समाप्त पनी भयो.

---

१ सो रामायण अत्यन्त ठूलो छ. उसको सङ्ख्या शत कोटी छ भनन्छन् "शतकोटिप्रविस्तरम्" तर सब रामायण कहीं पनी पाइँदैन. खाली लव र कुशले गायेके रामायण २४००० मात्र पाइन्छ.

आफूले बनायेको आदिकाव्य वाल्मीकिले आफना आश्रममा बसेका रामचन्द्रका पुत्र लव र कुशलाई लय र ताउका साथ शिकाये. उनीहरूले पनी आफूले पढेको यो काव्य ऋषिमुनिहरूका आश्रममा गई गाउन थाले. एवंरीत्या राजसभाहरूमा पनी उनीहरूले गाये. केही दिनमा तिनी-हरू आफना पिताजी रामचन्द्रका यज्ञमा पनी गुरु वेषले गुरुका साथ पुगे. वहाँ पनी रामचन्द्रका आज्ञानुसार दुवै भाईले सारा ऋषि मण्डल र राजवर्गका अगाडी रामायण गाउन थाले. ( रामायणको प्रारम्भ यही हो. )

श्रीरामः शरणं समस्तजगतां रामं विना कागती
रामेण प्रतिहन्यते कलिमलं रामाय कार्यं नमः ।
रामात्त्रस्यति कालभीमभुजगो रामस्य सर्वं वशे
रामे भक्तिरखण्डिता भवतु मे राम ! त्वमेवाश्रयः ॥ ''






# गोरखा संक्षिप्त रामायण ।

## बालकाण्ड ।



गद्दीमा बसि कालमा नियममा सीताजि लाइ लिई,
भाइ तीन र वायुपुत्र संगमा राखेर खुशी भई;
सारा लोक सुखी कसा गरि भर्ना सल्लाहमा सुस्थिर,
पुण्यात्मा रघुनाथका भजनमा होऊँ सदा तत्पर,

अवधप्रान्तमा सरयू–नदीका किनारामा अति अत्यन्त राम्रो र ठूलो अयोध्या नामक सहर थियो. यहाँका ठूला ठूला रमणीय र विचित्र महलहरूले अपूर्व कालीगढीको दृष्टान्त दिई

रहेका थिये. अयोध्यावासी प्रजाहरू पनी एक एक बुद्धिमान, विद्यावान्, परिश्रमी र उत्साही थिये.

तेस बेला अयोध्या सहर शिल्प, वाणिज्य र विज्ञानहरूको वासस्थान भई रहेको थियो. वहांका ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र, ई चारै वर्ण आफना आफना काममा प्रवृत्त थिये. उनीहरूलाई विधर्मीहरूले दुःखा उन पाउँदैन थे. प्रजाहरूमा विद्वेषको चिन्ह पनी देखिँदैनथ्यो, उनीहरू सधैं शान्ति–देवीका काखमा आनन्दपूर्वक रहेका थिये.

हुनता आजकल पनी अयोध्या नगर छँदैछ, तर उस्तो राम्रो र ठूलो छैन, जस्तो पहिले थियो. यसैले इक्ष्वाकु–वंशी राजाहरूको मुख्य राज-धानी पनी यही सहर भयेको थियो.

इक्ष्वाकु-वंशमा ठूला प्रतापी शूर वीर अनेक राजाहरू उत्पन्न भये. राजा रघु पनी यसै वंशका हुन. तिनका छोरा अजबाट इन्दुमती रानीमा महाराज दशरथ पैदा भये. उनले राज्य गर्दा पृथ्वीभरमा उनी भन्दा ठूला अर्को कोही राजा थियेन.

दशरथ महाराजका कौशल्या, सुमित्रा, कैकयी नामका तीन रानी थिये.

आफू तेस्ता ठूला राजा, उस्तै ठूलो राज्य, तीन तीन महारानी इत्यादि सब भोगको सामग्री पूरा पूरा थियो ता पनी, सन्तान न हुनाले महाराज दशरथलाई ठूलो ताप परेको थियो. यसै कारणले उनी रात दिन सन्तान कसरी होला भन्ने यही एक चिन्तामा मग्न थिये.

एक दिन सन्तानका तापले ग्रस्त भयेका महाराज दशरथले मन्त्री र अरू बुद्धिमान् भारदार सँग "वंश-रक्षाको उपाय के छ ?" भनी सल्लाह गरे. उसमा ऋष्यशृङ्ग ऋषिलाई ल्यायेर पुत्रेष्टि गरे देखी सन्तान अवश्य हुन्छन भन्ने वशिष्ठबाट उपदेश मिल्यो. यही सल्लाह अनुसार राजाले ऋष्यशृङ्ग लाई बोलाउन पठाये.

राज—सभामा आयेर आसन—पाद्यादिले सुसत्कृत भयेका ऋष्यशृङ्गले भने. " महाराज ! पुत्रेष्टि गरीबक्सियोस तेसबाट ईश्वरका अनुग्रहले हजूरलाई सन्तान अवश्य हुनेछन: यही सन्तान—प्रद मुख्य उपाय हो. " भन्ने अनुमति दिये.

ऋष्यशृङ्गको यस्तो शुभ सूचना पाइ महाराज दशरथ पनि खुशी भये: उसै दिन देखी उनले मन्त्री—द्वारा पुत्रेष्टिको सामग्री पनी ठीक गरन लगाये. सो तयार भये पछी अनेक ऋषिहरूलाई निमन्त्रणा भयो. उनीहरूले आयेर राजाको पुत्रेष्टि नामक यज्ञको प्रारम्भ पनी गरे. तेसमा ऋष्यशृङ्ग आचार्य भये.

अग्निकुण्डका वरी परी बसी विद्वान् ऋषिहरूले गरेका वेदध्वनीले सारा यज्ञ-भूमि गुञ्जायमान हुन लाग्यो. अग्निमा हवन गरेका उत्तम उत्तम वस्तुका सुगन्धले दशै—दिशा व्याप्त गर्‍यो. यसरी ठूलो उत्सवका साथ बराबर यज्ञ हुन लाग्यो.

अघी पुलस्त्य ऋषिको नाती रावणले सारा संसारलाई साह्रै दुःख दिंदा, तेसका अत्याचार देखी डरायेका पृथिवी र देवताहरूले क्षीर—समुद्रमा गई भगवान्‌का शरणमा परेर स्तुति गरे. उस बेला स्तुतिबाट

प्रसन्न भयेका भगवान् विष्णुले भनन् भयेको थियो कि " तिमीहरूले दुःख पायेको कारण मैले थाहा पायेको छू. तेसको बन्दोबस्त पनी गरी सकेको छू. तिमीहरूको दुःख र पृथिवीको भार हरण गरनाका निमित्त मेरा चार अंश, अयोध्याका महाराज दशरथका चार पुत्र रूप भई प्रकट हुनेछन. तिमीहरूले पनी वानर रूपले पृथिवीमा अवतार लिनू " यस्तो भगवानको आज्ञा पायेर देवताहरू खूशी हुंदै आफना स्थानमा गयेर वसेका थिये. यसैका केही काल पछी, महाराज दशरथले यस यज्ञको प्रारम्भ गरेको हो.

यज्ञ–समाप्तिका वेलामा अकस्मात् अग्निकुण्डबाट प्रकट भयेर अग्निदेवताले महाराज दशरथलाई पायसले पूर्ण भयेको एक पात्र दिये. तेस पात्रमा रहेको सन्तति–प्रद पायस पाउँदा, समुद्रबाट निस्केका धन्वन्तरीले दियेको अमृत पाउँदा इन्द्रलाई जैं महाराजलाई बडो हर्ष भयो. उसै वेला उनले श्रद्धा–पूर्वक आफना रानीहरूलाई सो पायस बाँडी दिये. रानीहरूले पनी प्रसन्नताका साथ सो पायस खाये. यती भये पछी विधि–पूर्वक यज्ञ पनी समाप्त भयो.

पायस खायेका केही दिन पछी, यज्ञका प्रभावले महाराजका तीनै रानीमा विष्णुको अंश रहेको गर्भ–चिन्ह देखियो. तीनै जनाले स्वप्नामा शंख, चक्र, गदा, पद्म लियेका तेजोमूर्ती कोई पुरुषले बराबर आफनू रक्षा गरेको देखन लागे. दश महिना पुगे पछी कौसल्यमा एक, सुमित्रामा दुई, कैकयीमा एक, जम्मा चार छोरा पैदा भये.

गुरुका आज्ञानुसार राजाले ज्येठाको राम, माहिलाको भरत, साँहिलाको लक्ष्मण र कान्छाको शत्रुघ्न भन्ने नाम राखे.

भगवान्का अंश लियेका ई चार भाईको जन्म भये पछी सारा संसारका अमङ्गलहरूको नाश र मङ्गलको प्रादुर्भाव भयो. दुर्भिक्ष र अकाल–मृत्यु आदि आपत्ति पनी सब हराये, सर्वत्र सम्पत्तिको राज्य भयो. साक्षात् विष्णुले पृथिवीमा अवतार लिनू भये पछी स्वर्ग पनी पृथिवीमा आये जस्तै भयो. जुन रावणका डरले दिक्पालहरू–थर थरायेका थिये उनीहरूमा पनी धैर्यले वास गऱ्यो. जुन बेला जगत्लाई दुःख दिने रावणलाई मार्नाका निमित्त भगवान् विष्णुले राम, भरत, आदि चार रूप लिनू भयो भन्ने सुनेये, तेस बेला तिनीहरूका हर्षको पारावार भयेन. सब देव–देवताले अनेक तरहबाट ठूलो खुशी मनाये. उता रावणका मुकुटबाट अनेक रत्न पनी बराबर खसन थाले. यसले राक्षस–कुलकी सौभाग्य लक्ष्मी पनी रुन लागिन भन्ने संझियो.

ई चार भाईहरू सौन्दर्य, धैर्य, शौर्य, आदि सम्पूर्ण शुभ–गुणले सम्पन्न थिये. जती जती ई राज–कुमार बढ्दै गये उती उती विद्यामा पनी प्रवीण हुँदै गये. लेखनू, पढनू, बाण–हाननू, घोडा–चढनू, शिकार–खेलनू इत्यादि सबै काममा चारै भाई चाँडै नै पार गये.

गुणको चाह गर्ने, परस्परमा रीस न गर्ने, गुरुजनको आदर गर्ने, नम्रता सँग व्यवहार राख्ने र परस्परमा प्रेम साथ रहने ई चारै भाईहरू एक क्षण पनी कतै अलग्ग रहँदैन थे.

साधारण परस्परमा एकै तरहको प्रेम थियो ता पनि, आगाको वायु सँग जस्तै, रामको लक्ष्मण सँग र समुद्रको चन्द्रमा सँग जस्तै, भरतको शत्रुघ्न सँग विशेष प्रेम देखिन्थ्यो. यस्ता उत्तम उत्तम पुत्र पाउनाले राजा र रानीहरू पनी अत्यन्त प्रसन्न भई पुत्र सुखको अनुभव गर्दथे.

राजाहरूमा अधिराज दशरथका भाग्यको प्रशंसा गर्न न शकन्छ, जस्तै चार दाँत हुनाले ऐरावत हात्तीको शोभा हुन्छ, उस्तै भगवानका अंशबाट उत्पन्न भयेका चार पुत्र हुनाले महाराज दशरथको शोभा भयो.

यसै गरी अनेक आनन्द–मङ्गलका साथ भाग्यशाली महाराज दशरथका दिन बितन लागे.

यस्तैमा एक दिन तपस्वी महात्मा विश्वामित्र ऋषि महाराज दशरथका राज–सभामा आये. राजाले पनी अकस्मात् आयेका ऋषिलाई देखेर आसन, पाद्य, अर्घ्य, भोजनादिले सम्मान गरी हात जोरेर सोधे, " ऋषीश्वर ! हजुर जस्ता महानुभावको दर्शन हामी जस्ता व्यवहारीले पाउनू यो ठूलो पूर्व–जन्मका पुण्यको फल हो. यस्तो अनुग्रह गरी पाल्नू भयेको हुनाले बहुतै नम्रता संग म बिनति गर्दछू, कृपा–पूर्वक आफ्नू शुभागमन को कारण आज्ञा होस. यो भक्त यथा-शक्ति टहल गरी सो कार्य पूर्ण गराउनामा उद्यत रहनेछ."

राजाको यस्तो निवेदन मुनी विश्वामित्रले भने, " महाराज ! म जुन

वनमा बसी ईश्वरको भजन गरदछू, तेस वनमा दुईटा राक्षस आई मेरा भजन र होमको सर्वै-विघ्न गरदछन. यसैले माहि दुःख पायेको छ. मेरा यज्ञको विघ्न गर्ने. प्रतापी राजा रावणका नोकर: बलीया मारीच र सुबाहु भन्ने राक्षसहरू हुन. ती दुईबाट मलाई बडो पीडा भयेको छ. तसर्थ. केही दिनका निमित्त श्रीरामचंद्रलाई लैजान पाये, मेरो यज्ञको रक्षा होला भन्ने आशाले आयेको हुं. यसमा महाराजको अनुमति भये रामद्वारा ती राक्षसहरूको नाश गराई निर्विघ्न पूर्वक यज्ञ गर्ने थियें. बालक रामबाट यो काम कसरी होला भनी शङ्का लिनु पर्दैन. रामचन्द्रको प्रताप मलाई र तपाईंका गुरु वशिष्ठलाई पनी यथार्थ थाहा छ. अवश्य रामले ती राक्षसको संहार गरी दिने छन. मेरा साथमा जानाले रामचन्द्रको भेरै कल्याण पनी हुने छ. यस विषयमा वशिष्ठजी संग सल्लाह गरी मलाई उत्तर दिनू होस."

विश्वामित्रको यस्तो असह्य वचन सुननाका साथ राजा बडो व्यग्र भये. उनलाई सहसा कर्तव्यको निर्णय हुन शकेन. एक छिन सम्म उनी छाँगा—बाट खसे जस्ता भये. केही बेर पछी उनले आफनू आकुलित मन सम्हालेर हात जोरी बिनति गरे "हे ऋषीश्वर! तपाईंका पाऊमा मेरो यो प्रार्थना छ, कि. रामचन्द्रले तपाईंको तेस्तो ठूलो कार्य कसरी सम्पन्न गराउलान, किन भने रामको अहिले बालक अवस्था छ. उनी तेस्ता ठूला राक्षस सँग कसरी लडलान ?. बरू राक्षस सँग लडनाका निमित्त हात्ती, घोडा, रथ र पैदल फौजहरू लिई मै अग्रसर हुन्छू, ती राक्षसको म स्वयं संहार गरूला. रामचन्द्रलाई न लैजानू होस.

नाबालक रामबाट राक्षसको नाश गराउने कुरा असम्भव जस्तो लाग-दछ. बरु ई पृथिवी, गाई, धन अथवा सर्वस्व दे भने पनी म खुशी साथ दिन शकदछू, परन्तु यस बुढेसकालमा पायेको ओरो रामलाई दिनामा असमर्थ छू. "

राजाले व्याकुल भयेर भनेका यस्ता वचन मुनी विश्वामित्रजी हाँसे, सो हासनाको कारण राजाले केही बुझन शकेनन. उनका गुरु वशिष्ठले सो कारण बुझेका थिये. उनलाई यस कुराको यथार्थ ज्ञान थियो कि " रामचन्द्र कोही साधारण पुरुष होयिनन. ई साक्षात् पर-मेश्वरका अंश हुन. उनलाई राक्षसादि जीव-जन्तुले केही हानि पुऱ्या-उन शकने छैनन " तसैले वशिष्ठलाई सो विषयको केही मात्र पनी चिन्ता थियेन. यस कारणले उनले रामलाई विश्वामित्रका साथ पठाउनाले बढिया हुनेछ भन्ने सल्लाह दियेर राजालाई भने. " महा-राज ! यसमा विचार गरनू पर्दैन. विश्वामित्रका साथ रामलाई पठाइ दिनाले ऋषिको यज्ञ—रक्षा मात्र होयिन कि रामको समेत कल्याण हुनेछ. हजूरले कत्ती पनी सन्देह माननू पर्दैन. म ता सर्वथा विश्वामित्रका जिम्मामा रामलाई पठाउनू नै उचित सम्झन्छू "

वशिष्ठजीको पनी यस्तो विचार बुझेर राजालाई फेरी मनमा ठूलो ताप पऱ्यो. विश्वामित्रको प्रार्थनालाई वशिष्ठजीले युक्ति—पूर्वक खण्डन गरी दिउन भन्ने राजाको इच्छा थियो; परन्तु तससा उल्टा वशिष्ठजीले पनी सोही कुराको समर्थन गरदा, राजा बहुतै खिन्न भयेर यो विचार गरना थाले, रामलाई न दिनामा अब मेरो

कल्याण छैन, विश्वामित्र रिसाये भने साह्रै अनिष्ट हुनेछ. यस्ता तेजस्वी महात्मा ऋषिलाई रामचन्द्र दिनामा के हानि होला ?, कुलगुरू वशिष्ठको पनी रामलाई विश्वामित्रका जिम्मामा पठाउने संमत छ भने म व्यर्थै किन शोक करूं ? जे भये पनी रामलाई दिन्छू.

राजाले यो निश्चय गरेर रामलाई आफना समीपमा बोलाई भने, "बाबू ! तिमी महात्मा विश्वामित्रका साथमा जाउ. ऋषिको जो आज्ञा हुन्छ सो काम गरेर आऊ. तिम्रा हिसाबमा जस्ता वशिष्ठ गुरु हुनु हुन्छ उस्तै विश्वामित्र हुनु हुन्छ, यसमा भेद--बुद्धि न राखे" यती भनेर राजाले विश्वामित्र जस्ता महात्माका साथ रामलाई पठाउदा खाली आशीर्वाद मात्र साथ लगाई दिये पनी पुगछ भन्ने निश्चय गरी उनका साथ कोही सेना पठायेन, खाली जाने आज्ञा मात्र दिये.

पिताजीको आज्ञालाई शिरोपर गरी झटपट रामचन्द्र सरासर मुनिका साथ लागी जानू भयो. आफनू अभीष्ट सिद्धि भयेको हुनाले विश्वामित्र पनी बडो खूशी साथ तपोवन तिर जान लागे. लक्ष्मणको राम सँग विशेष प्रेम हुनाले दाज्यूलाई छोडन शकेनन. उनी पनी दशरथ महाराज सँग बिदा भई रामका पछी लागे.

बाटामा विश्वामित्रले राम लक्ष्मणलाई अनेक उपदेश दिदै बला र अतिबला अर्थात् भोक, प्यास र थकाई नलागने, ई विद्या र अरू अप्राप्य शस्त्रास्त्र विद्या पनी पढाउँदै गये. ती दुई विद्याका प्रभावले रामलक्ष्मणलाई कहीं भोक, प्यास, श्रम, आदिले बाधा गरन शकेन. यसरी जाँदा जाँदा धेरै दिन पछी ती तीन जना ठूलो जङ्गल भित्र पुगे.

तेस जङ्गलमा अत्यन्त बलीया ठूला ठूला हत्तीलाई समेत उचाली फर्यांकन शकने बल भयेकी एक ताडका नाउँ गरेकी राक्षसी बसद् थी. सो जङ्गल भयेका ठाउँमा अघि ठूलो एक शहर थियो. उसमा धेरै मानीसहरू बसद् थे, यसै राक्षसीले तेस शहरका मनुष्यलाई खाँदा खाँदैमा शून्य गरायेकी हुनाले तेस ठाउँमा ठूलो जङ्गल जमेको हो..

जङ्गलमा पुगी विश्वामित्रले रामलाई भने, "राम! अब पहिले यस राक्षसीलाई नै मारनू पर्द छ. यसले धेरै निरपराध ब्रह्मज्ञानी ऋषिहरूलाई अकालैमा कालका जालमा हाली आफ्नू पेट भरी बसेकी छ. यसलाई न मारे अब पनी धेरै ऋषिहरूको नाश हुने सम्भावना छ. तसर्थ निर्भी यसलाई मारने उद्योग गर. 'स्त्री–वध शास्त्रमा निषिद्ध छ ता पनी हामी ऋषिको उपकारका निमित्त यस आततायिनीलाई मारनामा केही दोष छैन. यसमा अरू केही विचार गरनू पर्दैन." विश्वामित्रको यस्तो आज्ञा पाइ रामचन्द्रले तेस राक्षसीलाई मारनाका निमित्त उत्ती खेरै धनुको टङ्कार गरनू भयो.

रामचन्द्रले गरेको धनुका टङ्कारले दशैदिशा व्याप्त गर्‍यो. यस टङ्कारले जङ्गलका जन्तुहरू पनी झसके. राक्षसी पनी पहिले ता केही डराइ. तर नगीचमा मानीसको गन्ध पाउनाले त्यो राक्षसी निर्धक भयेर राम र लक्ष्मण लाई खान भनी हात मुख फैलाउँदै दौडी. उसलाई आफू माथी आई लागेकी देखी श्रीरामले पनी अट्ट धनुको सन्धान गरी एक बाणले तेसका हात काटी दिनू भयो. लक्ष्मणले पनी एक बाण थपी उसको नाक काटी दिये. जब

हान र नाक काटियै अनी त्यो तहाँबाट भागेर जङ्गलका झाँग भित्र लुकी. उहींबाट तेसले ती दुई भाईका उपर ठूला ठूला ढुङ्गाको वर्षा गरन लागी.

तेसले हानेका ढुङ्गा यताबाट आउँछन भनी पत्ता पाईंदैनथ्यो. चारै तिरबाट ढुङ्गाको वृष्टि हुन्थ्यो ता पनी, ती दुई भाईले पनी चारै तर्फ बाणको वर्षा गरी दशै दिशा लाई व्याप्त गरे. राक्षसीका उपर पनी धेरै बाण गिरे. तेस्ता तीग्वा तीग्वा बाणको चोट कहिल्यै पनी तेसले ग्वायेको थिइन. यसैले रामचन्द्रका बाणको पीडा सहन न शकी व्याकुल भयेर छटपटाउँदै लुकेका ठाउँबाट त्यो राक्षसी निस्की र राम लक्ष्मण तीरै ग्वान भनी दौडन थाली. तेसै बीचमा रामचन्द्रले एक बाण तेसका छातीमा हाननू भयो. त्यो बाण तेसको वज्र जस्तो छाती छेडी प्राण समेत लियेर पार गयो.

बाणले छाती छेद गरनाका साथ ताटका धडाम्म जमीनमा गिरी. त्यो गिरनाले तहाँको भूमि ता थर्कनै परथ्यो, तर रावणको अतिस्थिर राज्य-लक्ष्मी पनी थर्किन. त्यो पछारिनू नै रावणका भावी पतनको सूत्र पात पनी भयो. ताटका जमीनमा परनाका साथ प्राण छोडी परमधाममा गई.

राम, लक्ष्मणको अपूर्व पराक्रम देखी विश्वामित्र पनी अत्यन्त प्रसन्न भये. यही आनन्दका समयमा ती दुवै भाईलाई मुनीले उत्तम उत्तम कसैले रोकन न शकने अस्त्र ( हतियार ) शस्त्र हरू पुरस्कार (इनाम) दिये. ती अस्त्र शस्त्रको प्रभाव यस्तो थियो कि, जसका उपर तिनको प्रहार गर्‍यो उसको नामतक पनी रहँदैनथ्यो. यस्ता अस्त्र र शस्त्र

पाउनाले अत्यन्त तेज बढेका ती दुवै भाइ विश्वामित्रका आश्रममा पुगे.

तहाँ पछी, तेस आश्रममा यज्ञको प्रारम्भ गरनू होस भनी रामले विन्ती गरदा, विश्वामित्रले यज्ञको प्रारम्भ गरे. महर्षिका आज्ञानुसार सबै ऋषिहरू हवन गरन लागे. राम र लक्ष्मणपनी यज्ञको विघ्न हटाउनाका निमित्त धनुर्बाण लिई आश्रमका वरी परी जङ्गलमा घुमन थाले. जसरी सूर्य र चन्द्रमाले क्रमै सँग संसारलाई आफना किरण द्वारा बचाउँछन, उसै गरी धनुधारी ती दुई भाइले यज्ञ—भूमिको रक्षा गरे.

जब तेस यज्ञको धूवाँ टाढा सम्म फैलियो, त्यो धुवाँ देखी मारिच र सुबाहु भन्ने दुई राक्षस यज्ञको विघ्न गरनैाका निमित्त आये. तिनीहरूलाई देखी रामले पनी बाणको वर्षा गरी सुबाहुलाई तेसै ठाउँमाँ मारी दिनू भयो. मारीचलाई पनी अत्यन्त वेगी एक बाणले तहाँबाट उडाई समुद्रका किनारमा पुऱ्यायेर गिराई दिनू भयो. यसरी ती बलीया र पराक्रमी राक्षस हरूको संहार गरेको देखर सम्पूर्ण मुनिहरूले श्रीरामको ठूलो प्रशंसा गरे. तेस दिनदेखी तेस वनमा रहने ऋषिमुनिलाई धेरै सुबिस्ता भयो, राक्षसादिको डर भयेन. केही दिनसम्म राम र लक्ष्मणपनी तहीँ बसे.

एक दिन तहाँका सबै मुनिहरूले परस्परमा सल्लाह गरी, महाराज जनकको यज्ञ हेरन जाने निश्चय गरे. उसमा राम र लक्ष्मणलाई समेत लैजानू भन्ने सबैको सम्मति भयो. तहाँ बाट यथासमयमा राम र लक्ष्मण सहित ऋषिमुनिले मिथिला तिर प्रस्थान गरे. बाटामा पति

( गौतम ) का शापले शिला भई पडी रहेकी अहल्यालाई श्रीरामले मुक्त गराउनु भयो. तदनन्तर विश्वामित्रसहित सब जना आनन्द साथ महाराज जनकका यज्ञ--शालामा पुगे.

मिथिलाका राजा जनक ठूला नामी र ब्रह्मज्ञानी थिये. यस उसले बडा बडा ऋषिहरूपनी उनी सँग ज्ञान शिकन भनी आउँद थे. ती राजाले प्रजालाई बडो आनन्दका साथ नीति--पूर्वक पालन गरेका थिये. उनकी सीता नामकी एक कन्या थिइन. तिनको विवाह गरनालाई स्वयंवरका निमित्त तहाँ एक सभाको समारोह भयेको थियो. देश देशका राजाहरू पनी निमन्त्रित थिये. मुनिवेष--धारी तेजस्वी राम र लक्ष्मणलाई साथमा लियेका विश्वामित्र पनी. काम र अर्थलाई साथमा लियेका मूर्तिमान् धर्म झैं तेस सभामा पुगे. मुनि--वेषमा रहेका ती दुई भाईलाई क्षत्रिय--कुमार जस्ता देखेर बडो आश्चर्यका साथ तहाँका मानीसहरू मनमा अनेक विचार गरन लागे. तेसै बेलामा विश्वामित्रले सबैका अगाडी ई राम र लक्ष्मण अयोध्याधिपति महाराज दशरथका कुमार हुन भन्ने कुरा र रामचन्द्रले गरेका सुबाहु-बधादि पराक्रमको सारा वृत्तान्त सुनाये. सो कुरा सुननाले प्रसन्न भयेका सबै सभासद् हरू पनी परस्परमा खुशी हुँदै ई कुरा गरन थाले, " अहा ! ! ! ई श्याम वर्ण भयेका राज--कुमार ( रामचन्द्र ) सीताजीलाई अत्यन्त योग्य रहेछन. इनै सँग सीताजीको विवाह भये सुवर्णमा रत्न जडे जस्तो योग्य हुने थियो. "

यस्तैमा एक अत्यन्त पुरानू कसैले उचाली न शकनु ठूलो धनु

हजारौं मानीस द्वारा बोकायी तेस सभामा उपस्थित गरायियो, महाराज जनकले तेस धनुलाई देखाये र भने, "जसले यस धनुलाई उठाई यसमा ताँदो चडाउला उसैलाई म आफ्नी छोरी सर्वगुणसम्पन्ना सीता समर्पण गरूँला."

जनकको यस्तो भयङ्कर प्रतिज्ञा सुनी राम सँग सीताको विवाह भंय हुँदो हो भनने मानीसहरूका मनमा फेरी यो तर्क उठ्यो कि "अहो औसर चूकन आँट्यो, किन भने यो धनु ठूलो छ, ई राज-कुमार सा हैं बालक छन. विचार गर्दा इनमा यो धनु उठाउने शक्ति देखि देन. सो धनु न उठाई सीताजी सँग इनको विवाह हुनू असम्भव भयो. अहा ! ! ! यस्ता योग्य वर सँग सीताजीको सम्बन्ध हुन आँटेन." यस्तो तर्क वितर्क गरने ती बिचरा हरूलाई रामचन्द्रका पुरुषार्थको केही ज्ञान थियेन. यसैले तिनीहरूलाई तेस विषयमा खेद गरन लागेको हो.

यस पछी, तहाँ आयेका अनेक राज—कुमारहरू र राजाहरू यथाशक्ति त्यो धनु उठाउनामा उद्यत भंये. परन्तु कसैको पनी केही चलेन. कसैले अलिकती पनी धनुलाई डगाउन शकेनन. आफ्नू सारा प्रयत्न निष्फल भयेका सबै राजा र राजकुमारहरू लज्जित भंये र आफना आफना आसना आई बसे.

यसरी हतोत्साह भयेका सारा राजा र राजकुमारहरूलाई देखी महाराज जनक अत्यन्त दु:खित भयेर सभाका बीचमा भनन लागे, " बडा खेदका साथ आज मलाई ज्ञान भयो कि दुनियाँमा कोही वीर

पुरुष रहेनछन. मैले न बुझीकन यस्तो उग्र प्रतिज्ञा गरेछु यसले अहिले मलाई ठूलो ताप परन आयो. कसैका प्रारब्धमा सीता सँगको विवाह लेखेको रहेनछ. म गयो अब मेरो प्राण जावोस वा छोरी सीता जन्मभर कुमारीनै रहून तथापि म आफ्नू प्रतिज्ञालाई भङ्ग गरन शक्दीन, प्रतिज्ञा भङ्ग गरनु महा अयोग्य कुरा हुन्छ—के गरूँ यो प्रतिज्ञा पूरा गराइ दिने वीर कोही पृथिवीमा रहेनछ. यो पण राखन खाली हास्यको कारण मात्र भयो."

राजा जनकले यसरी खेद प्रकाश गरेको सुनी लक्ष्मणको मुख एकदम लाल भयो. उनी क्रोधले थरथर काँपदै उठेर भनन लागे, "महाराज! के यहाँ सूर्यवंशी राज-कुमारहरू आयेका देखनू भयेन? यो कस्तो कुरा हो र. यस्तो नातो कुरामा सारा क्षत्रियलाई उच नीच भनन् ठीक पर्दैन. दाज्यैज्यूको कुरा परै रहोस, म पनी यस नीर्णे धनुलाई अहिल्यै टूक टूक गरी फ्याँकी दिन शकदछू."

लक्ष्मणलाई साह्रै क्रोध चढेको देखी श्रीरामले एक पटक उनका पीठमा थाप मारेर भनन् भयो, "भाई! यसरी रिसाउनू हुँदैन. आउ. यहाँ बस. चित्तको वेग रोक." दाज्यूको यस्तो आज्ञा सुने ता पनी लक्ष्मणको रीस केही पनी कम भयेन. उनी झन गर्जेर बोलन थाले "दाज्यै! के जनकले हाम्रो यस्तो तिरस्कार गरनू योग्य हो? साना आगाका फिलिङ्गाले पनी ठूलो जङ्गल भस्म गराउन शकछ भने हामीलाई केटा केटी संझेर जनकले यसो भनन् महान् अन्याय्य हो. इनले यो निश्चय गरी सकेछन कि सूर्यवंशी रजपूतहरूमा- पनी पुरु-

पृथ्वी वीर कोही रहेनछ. यो कत्रो लज्जाको कुरा हो ! यस्तो अव-हेला को सहन गरन शकला ! " यती भनेर रीसले जाज्वल्यमान भयेका लक्ष्मण यता उती हेर्दै रामका नगीचमा घूमन लागे. यही अवसरमा विश्वामित्रले अघी सरेर राम सँग भने, " बाबू ! राम ! यस बेला महाराज जनकलाई ठूलो ताप परेको छ. सो सन्ताप छुटाउने मौका यही हो लौ यसगर, बलसमा देखायेको पुरूषार्थ नै प्रशंसनीय हुन्छ. "

ऋषिको आज्ञा सुनना साथ रामचन्द्र धनु उठाउने तजबीज गरन लागनू भयो. तेती साना रामचन्द्रको तेस्तो साहस देखदा तहाँ बसेका सबैलाई ठूलो आश्चर्य भयो. तसै बेला सीताजी पनी सखीहरूका साथ वरमाला लियेर तहाँ आउनूभयो. अगाडीमा उत्साह, धैर्य, गाम्भीर्य र वीर रसले व्याप्त भयेका रामचन्द्रको मोहिनी मूर्ति देखदा वहाँका मनमा अनुरागको अङ्कुर पैदा भयो. यसैले सीताजी ईश्वर सँग मनै मनमा यस्तो प्रार्थना गरन लागनू भयो. " हे परमात्मन् ! यस धनुलाई हलका गरी दिनू होस. यो धनु उठाउँदा श्रीरामचन्द्र-लाई कत्ति पनी परिश्रम न परोस. "

यता सीताजी यस्तै विचारमा मग्न हुनू हुन्थ्यो, उता श्रीरामचन्द्रले सहजै सित धनु उठाउनू भयो. ताँदो चढाउनाका निमित्त वहाँले अलिकती खिँचदैमा बडो भयङ्कर शब्दका साथ भाँचियेर एक दम त्यो धनु दुई टुक्रा भयो. त्यो शब्द सुनदा विश्वामित्र र राम लक्ष्मण बाहेक तेस सभामा बसेका राजा जनक समेत सारा सभासदहरू

इसर्क. एक दिन पछी सबै मानीस आश्चर्य-पूर्वक भनन लागे, "ओहो ! ! ! रामचन्द्रको कस्तो पराक्रम रहेछ. अघी सम्म ई बालक राज-कुमार द्वारा यो धनु भङ्ग होला भन्ने कसका मनमा थियो ?"

धनु भाँचनाका साथ महाराज जनकले सीताजीलाई बोलायेर भने. "पुत्रि ! धन्य तिम्रो भाग्य, वीर-पति पायेर तिमी वीर-बधू हुने भयौ. अब रामचन्द्रलाई माला पहिराऊ, ढीलो नगर. स्त्री-जातिले वीर र गुणी पति पाउनु यो ठूलो भाग्य हो. तिमी साह्रै भाग्यवती रहेछौ. यस्ता वीर, गुणी र सुन्दर वर पायौ. मेरो मन साह्रै खुशी भयो." यती भन्दै गद्गद् भये र महाराज जनक रामचन्द्रको प्रशंसा गरन लागे. तसै बेला श्रीसीताजीले पनी मङ्गलबाद्यका साथ रामचन्द्रलाई बरमाला पहिराई दिनु भयो. त्यो देखी चारौंतिरबाट सारा दुनियाँले रामचन्द्रको जय-ध्वनि गरे. तस सभामा हर्षको सीमा रहेन.

विवाहको दिन नगीचै निगत भयेको हुनाले, उसै दिनदेखी सर-जामको तयारी हुन लाग्यो. अयोध्यामा महाराज दशरथलाई समा-चार दिन भनी रिसल्दा दौडे. वहाँ पुगी तिनीहरूले खुशी साथ सो सबै शुभ समाचार सुनाये. यस्ता हर्षका कुरा सुनदा राजा दशरथले पनी मन्त्रि द्वारा विवाहको सामग्री, रथ, हात्ती, घोडा ऊँट र गाडाहरू सब तयार गराये. सो ठीक भये पछी, आफना कुल कुटुम्ब र मन्त्री-हरूका साथ गुरू वसिष्ठलाई समेत लिई उनले मिथिला तीर प्रस्थान गरे. बाटामा ठूलो उत्सव मनाउँदै धेरै लश्कर चलन लाग्यो. मानी-सका पाऊ र घोडाका टापले बाटाका पत्थरहरू पनी धूलो हुन थाले.

राजा जनकले पनी बास बासमा उत्तम उत्तम अन्न पानादिको ठीक प्रबन्ध मिलायेको थियो. नदीहरू तर्नु पर्ने ठाउँमा पनी पूल बंधायेका थिये. बाटामा कुनै कुराको कमी थियेन. यस्तो सबै प्रकारबाट आफनू पूरा सत्कार गरेको देखी महाराज दशरथलाइ पनी अत्यन्त हर्ष भयो. चारै दिनका दिन सारा फौज समेत उनी मिथि-लामा पुगे.

वहाँ राजा जनककी 'उर्मिला' भन्ने अर्की छोरी र उनका भाइ कुशध्वजकी 'माण्डवी' र 'श्रुतकीर्ति' भन्ने दुइ छोरी गरी सीताजी समेत जम्मा चार कन्या थिये. दशरथ महाराजका पनी राम, भरत, लक्ष्मण र शत्रुघ्न ई चार कुमार थिये. इनै चार भाइको सीता, उर्मिला, माण्डवी र श्रुतकीर्ति ई चार कन्या संग यथा क्रमले विधिपूर्वक विवाह भयो. तेस विवाहद्वारा अनेक उत्सवका साथ परस्परमा उचित सम्बन्ध हुनाले दुवै पक्षका राजाका मनमा ठूलो आनन्द भयो.

वैदिक विधि अनुसार कन्यादानादि कर्म सकियेका केही दिन पछी महाराज जनकले हात्ती, घोडा, रथ, वस्त्र, आभूषण, दास, दासी आदि असङ्ख्य यौतक (दाइजो) दियेर कुलाचार अनुसार छोरीहरूलाइ बिदा गरे. महाराज दशरथ आदि कुटुम्बहरूलाइ पनी विनयपूर्वकका अनेक शिष्टाचारले सन्तुष्ट गराइ अयोध्या तिर पठाउने प्रबन्ध गरे. उनका यथोचित सम्मानबाट प्रसन्न भयेका राजा दशरथ पनी चार छोरा र चार बुहारीलाइ लिइ सबै सैन्यका साथ ठूलो उत्सव मनाउँदै अयोध्या तिर फरके.

बीच बाटामा आइ पुग पछी, आगाले बलेन लागेका पर्वत जस्तो देदीप्यमान शरीर भयेका, एक हातमा धनु र अर्को हातले भीषण बञ्चरो काँधमा राखेका, क्षत्रियकुलको संहार गर्ने जमदग्निका पुत्र परशुराम अकस्मात् आउन लागेका देखिये.

अघी इनका बाबु जमदग्निलाई क्षत्रिय हरूले विनापराधमा मारेका थिये. यसैले आफना बाबुको वैर-शुद्धिका निमित्त कुद्ध भयेर इ परशुरामले पनी एक्काइश पटक सम्म पृथिवीमा घूमी घूमी पाये जती क्षत्रियको संहार गरी सकेका थिये. पछी पृथिवीतलमा क्षत्रियहरू न पाउंदा क्रोधको वेग घटनाले केही शान्त भइ इनी कहीं एकान्त वनमा तपस्या गरेर बसेका थिये. यस्तैमा धनु भांचनु आदि रामको पुरुषार्थ सुनी, रामचन्द्र पनी क्षत्रिय हुन भन्ने बुझेर फेरी यसलाई पनी दण्ड दिन्छु भनी वहांके खोजमा हिंडेका थिये. संयोगवश बाटामा उत्सव साथ आउन लागेका रामलाई देखी उनले अगाडी गयेर भने "बच्चा! के जनकको धनु भांचेको तैले नै हो? बडो बीर हूँ भन्ने घमण्ड छ कि? हकुँ अब कत्तिको पुरुषार्थ देखा उँदो रहिछस, यो ब्रह्म दण्डमा पनी ताँदो चडाउन शकछस कि? हकुँ न"!! परशुरामका यस्ता क्रोध-पूर्ण बचन सुनी महात्मा राम भने केही बोलनु भयेन. तर लक्ष्मणजीलाई सार्है असह्य हुंदा उनी उपहासको हांसो हाँसन लागे. तिनले हाँसेको देखदा झन परशुरामको क्रोधाग्नि दन्दनायो, उनी बञ्चरो घुमाउँदै चडकेर घूमन लागे.

तिनको यो अवस्था देखी लक्ष्मण ले केही हांसेर भने "यस बञ्चरालाई यती अलो गरेर किन उठाउनु हुन्छ? तपाइ ब्राह्मण भयेर

शान्त भई बोल्नू होस, मेरो तपाईंलाई नमस्कार छ. बञ्चरो कोदालो देखा उने हो भने हामी पनी क्षत्रियका बच्चा होउँ, यो कुरा सहन शकने छैनौं "

यस्तो लक्ष्मणको प्रत्युत्तर पाउँदा रीसले चूर भई परशुरामले बञ्चरो उठायेर तिनका उपर प्रहार गरन जाई लागे. तिनको त्यो साहस देखदा, अब बिगार हुन आँट्यो भन्ने शङ्काले, झट अघी सरेर उनको बञ्चरोलाई रोकी रामले भनन् भयो. "ऋषीश्वर ! तपाईंको जे भनन् छ ,म सँग भनन् होस. इनी ता केटा केटी नै छन, इनीसँगको के कुरा." रामले यसो भनेको सुनी परशुराम झन चरकेर बोले, "हां थाहा छ, यो सब तेरै काम हो. बडो बहादूर छू भनदो होस. जनकका घरमा रहेको पुरानू थोत्रो धनु भाँचदैमा आफूलाई पुरुषार्थी ठहराउँछस कि ? हुन्छ, मेरा यस धनुमा ताँदो चढाइस भने तँ बीर रहिछस भनी जानूला. अनी जो गरनू परला गरूला."

परशुरामले यसरी दाज्यू सँग भनेका कुरा सुनी लक्ष्मणले फेरी बिचैमा कुरा काटेर भने, "बाहुन बाज्ये ! रहन दिनू होस. तपाईं जुन धनुको प्रशंसा गरनू हुन्छ त्यो पनी हाम्रा दाज्यूंज्यूले भाँचेको पुरानू धनु जस्तै हो, तेस धनुमा पनी केही प्रभाव छैन. के तेसलाई पनी भँचाउने इच्छा छ र यो घमण्ड देखाउनू हुन्छ ?"

लक्ष्मणका मर्मभेदी वचन सुनेर परशुराम झन रिसाउँदै फेरी भनन लागे, "रे नालायक ! हेर तँ साना मुखले ठूलो जबाब दिन लागिस. अब म सहन शक्दीन. बालक भनेर मात्र यती बेर चुप

लागेको हूँ, नत्र यतीञ्जेल तँलाई नाम मात्र शेष गरेर छोडी दिन थियें."

परशुरामका यस्ता सर्वाले भरियेका वचन सुनेर लक्ष्मणले पनी कत्ति न डराई फेरी धृष्टताका साथ भने "जाऊ, बाज्ये! मैले पनी तिमी जस्ता बाहुनहरू धेरै नै देखेको छू. तिमीलाई बाहुन भनी छोडी दियेको हूँ, अरू कोही भये अघी नै काम पुऱ्याई दिन थियें."

यसरी ई दुई जनामा विवाद हुँदै थियो; उता रामचन्द्र पनी बीच बीचमा परशुरामलाई समझाउँदै गरनु, हुन्थ्यो तर सब व्यर्थ गयो. रीसको अन्तिम समय नगीचै आयेको हुनाले उनी निभ्न बेलाको बत्ती झैं झन चम्केर बारंबार "वीर होस भने यस धनुमा ताँदो चढाई दे" भनदै दाँत कटकटायेर गर्जन लागे.

तेसरी परशुरामलाई गर्जन लागेको देखी अब यहाँ के उत्पात हुन आँट्यो भनी अरू दशरथ आदि तहाँका जनहरू डरले काँप्न लागे. श्रीरामले ती सबैलाई आश्वासन गरी परशुरामका तेस धनुमा ताँदो चढाउनु भयो. त्यो देखदा परशुरामका मुखको कान्ति पनी मलिन हुन लाग्यो. रामचन्द्रले कसै गरी तेस बाणको प्रहार परशुराम माथी गरेको भये उनी कदापि जीवित रहने थियेनन, तर धर्मज्ञ रामचन्द्रले अन्यत्रै त्यो बाण छाडी दिनु भयो.

बिचरा परशुराम रामचन्द्रको यस्तो अजेय सामर्थ्य देखदैमा आफैं निस्तेज भयेर आफूले भनेका दुर्वाक्यको क्षमा माँगी रामको गुण गाउँदै आफना आश्रम तिर गये. तहाँ पछी महाराज दशरथ

पनी आफना पुत्रको पराक्रम देखी आश्चर्य मानेर मारा सैन्यलाई जयध्वनि गराउँदै कुटुम्ब सहित अयोध्यामा आइ पुगे.

केही दिन पछी केकयदेशबाट कैकयीका भाइ आयेर राजा दशरथ सँग भेट गरे. फरकने बेलामा उनले आफना भानीज भरत र शत्रुघ्नलाई पनी लियेर गये.

यस्ता प्रकारले राम लक्ष्मण अयोध्यामा र भरत शत्रुघ्न मामाका घर ( केकय देश ) मा आराम साथ सुख भोग गरी बसन लागे.

बाल–काण्ड सकियो.



# अयोध्या-काण्ड.



एक दिन महाराज दशरथले आफू बूढो भयेको र छोराहरू समर्थ भयेका देखी, राजपाट सब रामचन्द्रलाई दिएर आफू वानप्रस्थाश्रममा जाने अभिप्रायले मन्त्रीहरू सँग सल्लाह गरे. मन्त्रीहरूले पनी महाराज को विचार ठीक हो, यसमा हामी सबैको सम्मति छ. अब राजगद्दी श्रीरामचन्द्रलाई दिनामा बेस छ भने सम्मति दिये. सो सबको इच्छानुसार महाराज दशरथले भोलीपल्टै रामचन्द्रलाई राजतिलक दीने निश्चय गरे.

राम राजा हुन्छन भन्ने कुरा सारा राज्यमा फैलियो. यो शुभ सन्देश सुनदा दुनियाँहरू बडा खुशी भयेर अयोध्या भर नाच, गान, आदि उत्सव गरन लागे. तिनीहरू आफना आफना घर र बजारहरू सजाई सडकहरूमा पानी छिड्कन थाले. ठाउँ ठाउँमा ध्वजा टाँगिये, दरबारका मानीस पनी सारा खूशी भई आफना आफना शृङ्गारमा लागे. महारानीहरू पनी सब सानन्द भये.

परन्तु बडो खेद छ कि "श्रेयांसि बहु विघ्नानि" यो शिष्ट-हरूको वचन किन व्यर्थ हुन्थ्यो ? तेस आनन्दसमयमा अनेक अनर्थले बाधा गरन थाले. संयोगवश यस अनर्थको मूल महारानी कैकयी नै भयिन, उनकी अकाको उत्कर्ष ( बढायीं ) देखन न शकने रिसाही यौटी मन्थरा भन्ने दासी थियी. त्यो रामको राज्याभिषेक सम्बन्धी कुरा सुनी बडो छटपटाउँदै महारानी कैकयी सँग गयेर भनन

लागी, " महारानी ! के हजूरलाई थाहा छैन ? म खूब राम्री र राजाकी प्यारी छू, म जस्ती कोही छैन भन्ने यसै घमण्डमा परी रहनू हुन्छ कि ? केही यता उती पनी विचार गरनू हुन्छ; नजर होस कत्रो दुःखको पहाड हजूरका शिरमा गिरन आँट्यो. अब हजूरको टेक एक रहने छैन. हजूरका अंशमा पनी नोक्सान पर्ना मर्न्यो. महाराजले हजूरका सौताने छोरा रामलाई राज्य दिन आँटनू भयो, हजूर सँग एक कुराको पनी सल्लाह लिनू भयेन. यसबाट बुझिन्छ कि हजूर सँग महाराज फोस्रो प्रेम मात्र हुँदो रहेछ, यही कारणले नै हाम्रा राज—कुमार भरतजीलाई मामाका घर पठायेको रहेछ. अब आफनू र छोराको हित होस भन्ने इच्छा छ भने हजूरले चूप लागी बसने बेला छैन, एक रातको समय मात्र बाँकी छ. भोली रामले गद्दी अवश्य पाउँने छन, राज—तिलक भई सके पछी हजूरलाई पश्चात्ताप सिवाय अरू केही हात लागने छैन.

अब यस निमित्त चाँडै नै उपाय गरनू परद्छ. सो उपाय पनी हजूरलाई बनाउँ छू. सुननूहोस " अघी हजूरलाई महाराजले दुइटा वर दिनू भयेको थियो. उस बेला हजूरले ती वर न लिई महाराजै सँग नासो राखेको हो, उनै वर अहिले मागनू परद् छ, जसमा एक वरले 'रामलाई चौध वर्ष सम्म वनवास' र दोस्राले ' भरतलाई यही सामग्रीले राजगद्दी ' मिलोस "

मन्थराको यो निवेदन सुनी पहिले ता कैकयी बडो खुशी भयिन, रामराजा हुन्छन भन्ने सुनदा सो खुशीका बेलामा मन्थरा लाई पुरस्कार समेत दिन लागेकी थियिन, तर मन्थराका अनेक जाली कुरा सुनदा ती कुराका प्रभाव ले कैकयीको चित्त बदलीयो र उनले तेसको

अत्यन्त प्रशंसा गरी भनिन, श्याबास ! निमकको सोझो गर्ने चाकर तैं रहीछस. यती तैंले न मंझायेको भये मेरो ठूलो बिगार हुने रहेछ. सेवकले अवसरमा मालिकको बिगार हुने कुरामा यसै गरी मंझाउनू पर्दछ, खूब गरीस." यसरी कैकयीले आफनू प्रशंसा गरेको सुनी मन्थरा अत्यन्त खुशी हूँदै तेताबाट बाहिर निस्की. कैकयी पनी मन्थराका परामर्शानुसार गहना पोशाकहरू सब फ्याँकी बिचैन जस्ती भयेर क्रोधभवनमा पसिन.

रात पर्‍यपछी नित्यनियमानुसार,महाराज,महारानी कैकयीका खोपीमा गये. तहाँ ता उनी आफनी कान्छी रानीको त्यो दुर्दशा देखदा अत्यन्त आश्चर्य युक्त र स्तंभित पनी भये. एक छिन पछी धेरै आश्वासन दियेर कैकयीलाइ भने, "प्रिये! यो के गरेकी ?. आज ता बडो खूशीको दिन हुनू परदछ—तिमीलाइ के भयो. ? भन. जो तिमी भनौली म उसै गरी दिउँला. यस्ता प्रकार सँग राजाले रानीका आँखाको आँसू पनी आफैले पुछिदिदै धेरै संझायेर सोधदा उनी बिस्तारै उठेर दीन वचन लेई कुरा भनन लागिन, " महाराज ! हजूर सत्यवादी हुनू हुन्छ, हजूरले झूटो बोलेको मलाइ कहिल्यै थाहा छैन, हजूरबाट अघी मैले दुई वर पायेकी थियें, ती हजूरैमा नासो रहुन पछी माँगुला भनी मैले हजूरैमा नाशो राखेकी छू. सो कुराको संझना रहेकै होला. आज म उनै वर मागदछू, नयाँ कुरा केही मागदीन. ती दुई वर पायिन भने हजूरका अगाडी अहिल्यै प्राण—त्याग गरी मरने छू. पाउँछू भने दुई वरमा एक वरले ' भरतलाई राज्य मिलोस ' दोस्राले ' राम चौध वर्ष सम्म वन--वास गरन भोली नै जाउन' अर्थात् रामले भोली पाउने राज्य भरतले पाउन, राम भोलीदेखीनै चौध वर्ष सम्मको बिदा लिई वनमा जाउन."

कैकयीका ई कुरा सुनी महाराज दशरथ शोकले थरथर काँपदै मूर्छा परे. धेरै बेर पछी सचेत भयेर कैकयीलाई फेरी अनेक उपायले संझाउन लागे. संझाउँदा संझाउँदैमा रातभर बित्यो. तैपनी कैकयीले आफ्नू जिपी छोडिनन. तिनको यो हठ देखदा राजालाई साह्रै असजिलो पर्‍यो.उनी किंकर्त्तव्यता मूढ भये, सहसा उनका मुखबाट केही जबाब निस्कन शकेन, अन्त्यमा धेरै विचार गरेर राजाले कैकयीलाई भने, " प्रिय ! मैले यसरी संझाउँदा पनी संझिनौ तिम्रो यस हठी स्वभावले ठूलो अनिष्ट गरने छ. यसमा विचार गरि जे गरना ले तिम्रो कल्याण हुन्छ उसै गर. "

धन्य महाराजको सत्य-वादिता ! जसले आफनू सत्यवचन बचाउनाका निमित्त प्राण भन्दा पनी प्यारा राम जस्ता पुत्रलाई त्याग गरन पनी कठिन संझेनन, तर प्रतिज्ञा भङ्ग होला भन्ने भयले तस्तो कठिन काम स्वीकार गरें ता पनी शोक कसैले दबाउन नशकिने हुनाले महाराज फेरी शोक-वश मूर्छित भई जमीनमा गिरे. यस्तै तर हले त्यो रात बित्यो.

प्रात:काल भये पछी गत रात्रिको यो घटना थाहा नपाउने दुनियाँमा आज रामको राज्याभिषेक हुन्छ भन्ने हर्षले ठाउँ ठाउँमा बाजा, नाच र गान भई रहेको थियो. रामलाई गद्दीमा बसेको कहिले देखौंला भनी सबै जना यता र उता हडबड साथ हिडन लागेका थिये. रामचन्द्र पनी प्रात:कृत्य ( बेहानको कर्म ) समाप्त गरेर उत्तम उत्तम वस्त्र र अलङ्कार पहिरी राज-तिलक लिने अपेक्षामा बसनू भयेको थियो. सीताजी पनी आज म बडामहारानी

हुन्छ भनी खुशी हुँदै रामचन्द्रको सेवामा तत्पर हूनू भयेका थियो. उता कौशल्या महारानी पनी आज मेरा प्राण–प्यारा पुत्र रामले राजगद्दी पाऊन औंटे, धन्य मेरो भाग्य ! भनी आफनू प्रशंसा गर्न लागेकी थियिन. मेरा प्यारा दाज्यू राजा भये भन्ने आनन्द–पूर्वक उनेका पाऊको सेवा गरी बसन पाउँला भनी लक्ष्मण पनी खुशी थिये. परन्तु तेस बेला खुशीका बदलामा रुनू पर्ला; घोडा, रथ, हात्तीका बदलामा पत्थरले खडबड परेका जमीनमा हिडनू पर्ला; सुखका बदलामा दुःखै दुःखको भोग गरनू पर्ला, बहु-मूल्य कपडाका बदलामा रुखका बोक्रा लाउनू पर्ला भन्ने कसैलाई स्वप्नमा पनी थियेन.

यसो हुँदा हुँदै राज्याभिषेकको मुहूर्त हुन लाग्यो. सुमन्त्र मन्त्री राजालाई सब ठीक भयो भन्ने सन्देश दिन दरबार भित्र गये. वहाँ र बेगले अवस्था भई सकेको हुनाले राजा बिचेत भई जमीनमा गिरेका थिये. त्यो देखेर सुमन्त्रका ओठ-मुख सुके, उनी आश्चर्यताका साथ कैकयी सँग " महारानी ! यो के भयो ? " भनदै घबराईक सोधन लागे. तेस बेला निर्लज्जा कैकयीले भनिन, " सुमन्त्र ! आज रामचन्द्रको राजतिलक हुन्छ भन्ने हर्षले महाराज रात भर जागा हुनू हुन्थ्यो. अहिले निद्रा परेछ. महाराज लाई जागा गराउनाका निमित्त रामलाई लिई चाँडै आउ. "

कैकयीका यस्ता कुरा सुनी शुभ समयको अवधी शकियेला भनी सुमन्त्र ले पनी झटपट गयेर रामचन्द्रलाई बोलायेर ल्याये. रामचन्द्र पनी चाँडैनै पालनू भयो. तेसवेला सम्म महाराज दशरथ मूर्च्छैमा थिये. पिताजीको त्यो अवस्था देखी रामचन्द्र माता कैकयी

संग सोधन लागनू भयो, "माताजी ! हामीले पिताजी लाई यस्तो ताप दिलाउने अपराधता केही गरेका थियेनौं, यदि भूल चूक बाट केही भयेको भये सो अपराधमा क्षमा दिलाई पिताजी लाई उठाउनू होस. पिताजीलाईके भयो ? अघी पछी ता मलाई देखना साथ बडो प्यारो गरी बोलाउनू हुन्थ्यो. आज वहाँका मुखारविन्दबाट एक वचन पनी निस्केन, पिताजीको यो दुःख म कसरी हरूँ, यसको कारण पनी मैले केही बुझन शकिन आज्ञा होस."

रामले यसरी शोक गरेको देखी कैकयीले भनिन "बाबू महाराजलाई केही दुःख परेको छैन. कसै संग रीस उठेको पनी छैन. खाली एक कुराका चिन्तनाले महाराजलाई ग्रस्त गरेको छ, तसैले अहिले यस अवस्थामा परनू भयेको हो. सो कुरा तिम्रा स्नेहले मुखबाट उच्चारण गरन शकनू हुन्न. तिमि पिताजीका अत्यन्त प्यारा छौ, यस निमित्त जसरी हुन्छ वहाँको कष्ट हटाउने उपाय तिमीले नै गरनू परदछ. तिमी धर्मात्मा, सत्य–प्रतिज्ञ, पितृ–भक्त र मर्मवेदी छौ; तस्मात् पिताजीको कष्ट तिमि अवश्य हटाउला भन्ने मलाई पूरा भरोसा छ. यो कुरा तिमी स्वीकार गरछौ भने तिम्रा पिताका मनमा लागेको कुरा म भनदछू सुन."

कैकयीको यो साभिप्राय कुरा सुनी रामचन्द्रले भननू भयो, "माताजी ! आज्ञा होस, म पिताजीका निमित्त आगामा फाल हालन पनी प्रस्तुत छू, विष पिऊन पनी उद्यत छू; समुद्रमा पसन पनी तत्पर छू; सर्वस्व त्याग गरन पनी प्रवृत्त छू; मैले जो गरनू पदरछ सो कुरा चाँडै आज्ञा होस." रामचन्द्रको यस्तो भीष्मप्रतिज्ञा

मुनी फेरी कैकयीले भनिन्, " बाबू ! तिम्रा पिताजीले अघी कोही कालमा मलाई दुई वर दिनू भयेको थियो. उस बेला मलाई सो दुई वरको केही प्रयोजन न हुनाले अहिले दुवै वर हजूरमा नासो रहन पछी चाहियेका बेलामा मागने छू भनी मैले भनेकी थियें. आज उनै दुई वरमा एक वरले 'तिमीलाई चौध वर्ष सम्मको वन-वास र अर्को वरले भरतलाई यही सब सामग्रीले अयोध्याको राज्य मिलोस ' भनी महाराज सँग मैले मागें. अब यस अवसरमा महाराजको सत्य—वादिता तिमीले पूरा गराउनू परदछ, नत्र महाराजको सत्य—वादिता न रहने भयो. अब यसमा आफैं विचार गरी जे गरनू उचित संझन्छौ उसै गर. "

कैकयीको तेस्तो स्वार्थपूर्ण वचन सुनदा अली कती पनी खेद नमानी प्रसन्नता सँग रामचन्द्रले भनन् भयो, " माताजी ! यसमा धन्दा माननू परदैन. पिताजीको आज्ञा पालन गरनू नै मेरो मुख्य कर्त्तव्य र धर्म हो, म खूशी भयेर वनमा जान्छू. भरतलाई चाँडै झिका-येर राज-तिलक दिने प्रबन्ध मिलाई बक्सियोस. पिताजीलाई पनी उठाई बक्सियोस ".

अहा ! ! श्रीरामचन्द्रको पितृ-भक्ति क्या वर्णनीय छ. पुत्रले यस्तै हुनू परदछ. हेर, जुन श्रीरामलाई राजगद्दी पाउने सन्देश सुनदा हर्षले उन्माद पनी चढेन, फेरी तत्कालमा वन-वास जाने समाचार सुनदा खेद पनी कत्ती लागेन. यो कत्रो धैर्यको कुरा छ यसबाट हामी सारा लोकलाई पितृ-भक्ति र धैर्यका विषयमा ठूलो शिक्षा मिलन सकदछ.

यस्ता प्रकारले कैकयीको इच्छापूर्ण गरायेर पिताजीका मनको कष्ट छुटाई श्रीरामचन्द्र आफनी माता कौशल्या सँग बिदा हुन जानू भयो–उनीले पनी छोरा आयेको देखी कावमा गरेर हर्ष–पूर्वक भनिन, "बाबू! गद्दीमा बस्ने कुन बेला हो? के शुभ मुहूर्त आइ पुगेको छैन?. माताजीको प्रेमपूर्ण यस्तो प्रश्न सुनेर श्रीरामले भनन् भयो, "माताजी! अब म गद्दीमा न बस्ने भयें. उत्तम उत्तम कापडा-हरू पहिरनु, मखमलका गद्दीमा बसनू र मिष्टान्नहरूको भोजन इत्यादि राजोपचारहरू मैंले पिताजीका अगाडी चौध वर्ष सम्मलाई छोडेर आयें. पिताजीबाट भरतलाई राज्य र मलाई चौध वर्ष सम्मको वन–वास बक्सियो, अब मैंले गद्दीमा बस्ने समय छैन, यस कारणले म हजूर सँग बिदा भई दर्शन गरेर वन तिर जाऊँ भनी आयेको हूँ. बेर भयो, प्रसन्नता पूर्वक चाँडै बिदा पाऊँ." रामचन्द्रको यस्तो असह्य वचन सुनी कौशल्या महारानी मूर्च्छा परिन.

आफनू एक–मात्र पुत्र राम हुन, उनलाई पनी वनमा एकलै पठाउनू पर्‍यो. यससा मूर्च्छा सिवाय अरू उनको शरण को हुन्थ्यो?

बिचरी कौशल्या आफनू पुत्र रामको राजगद्दीका बदलामा भीषण-वन वासको नाम सुनदा साह्रै बिव्हल भयिन.उनका शोकको सीमा रहेन.लक्ष्मणलाई पनी यो समाचार पाउँदा पिताजीका अविचारमा साह्रै क्रोध उठेर आयो. उनी पनी उहीं आयेर कौशल्या सँग भनन लागे, "माताजी! कैकयीले भनदैमा र स्त्रीका वशमा रहने अविवेकी विपरीत–बुद्धि भयेका पिताजीको आज्ञा भयो भनदैमा उसै दाज्यैज्यूको वन–वास हुन शक्छ? म यो कुरा कदापि मानन शक्दिन. दाज्यैज्यूले वनमा लगारिनू

पर्दैन अपराध के गरेको छ ? सारा दुनियाँमा आज सम्म दाज्यैज्यूको दोष कसैले देखेको र कसैका मुखबाट सुनेको पर्ना छैन, त्यस्ता निरपराधी पुत्रलाई स्त्रीका वशमा परेर वन जा भन्ने पिताजीको अविचार सिवाय अरु के हुन सक्छ ? अब यस्ता अविवेकी पिताजीको हुकूम मान्नामा म असमर्थ छु. दाज्यैज्यूले वनमा गई कष्ट सहनु पर्दैन. यसमा जो परी आउँछ; तेस कुरालाई म टार्दछु."

यसरी कौसल्यालाई आश्वासन दिएर उनले फेरी रामचन्द्र सँग भने. "दाज्यैज्यू ! म पिताजीलाई वशमा लिन्छु. हजुर आफनु बन्दोबस्तमा रहनु होस. कैकयीको पक्ष गरी जति आउँछन उनीहरु सँग संग्राम गरनलाई म प्रस्तुत हुन्छु• हजुरले यस वेलामा शान्तिको अवलम्बन गरनु सर्वथा उचित छैन. हजुरले राज–काजमा शान्त भएर काम चल्दैन. शान्ति भनेको तपस्वी ब्राह्मणका निमित्तको हो. राजाले शान्त हुनु हुदैन. यस राज्यमा कैकयीको हक पनी पुगन सक्दैन. एकता हजुर जेठी पटरानीका छोरा, दोस्रो सबै भाइ भन्दा जेठा हुनु हुन्छ. फेरी हाम्रा कुल–परम्पराले पनी जेठैले राज्य पाइ आयेका छन, यस उसले पिताजीबाट भरतलाई राज्य मिल्यो भनदैमा आफूले पनी उही कुराको अनुमोदन गरेर चूप चाप वनमा जानू सर्वथा अयोग्य छ. जसरी हुन्छ राज–गद्दी लिनै परदछ."

रामचन्द्र सँग यती भनी फेरी कौशल्या तिर फरकेर लक्ष्मणले भने, "माताजी ! धन्दा न माननू होस. यस जगतमा दाज्यैज्यू सिवाय अरु मेरो प्रिय कोही छैन. यस निमित्त म अहिले नै अनेक

उपद्रव मचाई कैकयीको आशालाई माटामा मिलायेर दाज्यैज्यूलाई नै राज–गद्दी दिलाउँछू. मेरा अगाडी कोही पनी परन शकने छैनन."

लक्ष्मणका क्रोध–युक्त र वीररसले पूर्ण भयेका ई वचन सुनी श्रीरामले भनन् भयो. " भाइ ! तिम्रो विचार ठीक हो, ममा तिम्रो ठूलो प्रेम छ. त्यो पनी म जानदछू, तिमी जे भनद छौ त्यो गरन पनी शकदछौ, तर धर्माधर्म जाननेले यस्तो कुरा गरनू साह्रै अनुचित छ. धर्मलाई केही गरे पनी छोडनू हुँदैन. फेरी अरू धर्म भन्दा मातापिताको आज्ञा पालन गरनू नै पुत्रको प्रधान धर्म छ. सो धर्म छोड्ना ले पुत्र साह्रै अधर्मी कहलाउँ छ. " इत्यादि कुराले भाइ लाइ समझाई रामचन्द्र फेरी आमा सँग विदा मागन लागनू भयो.

दाज्यैज्यूको वनमा जाने अभिप्राय बुझेर लक्ष्मणलाई असह्य भयो. यसैले उनी फेरी भनन लागे, " दाज्यैज्यू ! निरपराध पुत्रलाई तसै वनमा निकली जा भन्ने अधर्मी पिताका दुष्ट वचनलाई पनी नाघनू हुँदैन भन्ने हठ किन गरनू हुन्छ ? सुन पिताका आज्ञाले अघी मन्म राज्य गरनमा तत्पर हुनू हुन्थ्यो. अहिले उनै पिताजीको हजूर लाई वन जा भन्ने आज्ञा भइ रहेछ भने यसैबाट विदित भयो कि पिताजीको बुद्धि विकृत भयछ. अघी एक कुरा थियो, फेरी अहिले अर्कै कुरा भयो, नजाने अझी बेरमा कुन आज्ञा हुने छ. तेस्तो अव्यवस्थित चित्त भइ सकेका महाराजलाई अघी पछी मैं सद्द ठहराई उनले जे भन्यो उही गरमाले राज–काजमा निर्वाह हुन शकदैन.

यस उसले म फेरी बिन्ती गरदछू कि अहिले हजूरले सहमा वनमा जानाको केही आवश्यकता छैन.मेरा प्रारब्धले पिताजीका मुखबाट तेस्तै वचन

निस्क्यो. अब जे भये पनी उसको उल्लंघन गरन शकदिन भन्ने आज्ञा हुन्छ भने पनी आजैनै हजुरलाई ज्ञात हुनेछ कि प्रारब्धर पुरुपार्थ मा कुन बलवान् रहेछ. म आफ्ना पुरुषार्थले पिताजीको तेस वचनलाई अन्यथा गराई दिन्छू, तेस बेला कोही पनी अवी सरन शक्ने छैन. फेरी प्राचीन-राजाहरूको पद्धति पनी यस्तो छ कि आफू बूढा भयेर वन जान्छन, आफू भन्दा पछी राजा हुने छोरालाई वन पठाउँदैनन. यस नीतिबाट पनी अहिले राज्य हजूरैले पाउनू परदछ; यस राज्यमा अरू कसैको पनी हक पुगदैन.

ई मेरा हात, खाली विडम्बना र खान-पीनका निमित्त मात्र ईश्वरले दियेका होयिनन, वैरीको ध्वस्त गराउनाका निमित्तनै दियेका हुन. यो धनुर्बाण पनी ढाँचा देखाउनाका निमित्त भिरेको होयिन, शत्रुका शिरलाई गिराउना निमित्त नै लियेको हूँ. म छँदा छँदै यस जगत्मा हजूर सँग वैर–भाव राखन कोही शकने छैन. लक्ष्मण व्यर्थै फूर्ती मात्र देखाउँ छन भन्ने हजूरका मनमा होला; त्यो उसै वेला नजर हुनेछ जुन वेला हजूरले राज्य गरदा वैरी बनी आउँनेका रगतको खोलो बगाउँला. कैकयीको आशा टुटाउनु र हजूरलाई राजा बनाउनू इनै दुई काममा आज मेरा बलर पुरुषार्थको परीक्षा हुने छ."

लक्ष्मणका यस्ता वीरत्वले भरियेका वचन सुनी रामचन्द्र केही हाँसेर फेरी भनन लागनू भयो " भाई ! तिमी शास्त्र–मर्यादाको वास्तै न राखी, माता पिताको आज्ञा पालनूनै छोराको मुख्य धर्म हो भन्ने धर्मशास्त्रको वचनलाई पनी तिरस्कार गरेर, खाली रीस र बलका कुरा गरदछौ, यो अनुचित हो, म मानदिन. हामीले शास्त्रमर्यादा थामनै

परदछ, माता पिताको आज्ञा पनी माननै परदछ. यस निमित्त म सर्वथा वनैमा जान्छू यसमा ढिपी नगर."

दाज्युको त्यो अचल सङ्कल्प देखेर लक्ष्मण केही संकुचित भई बिन्ति गरन लागे, "दाज्यैज्यू ! मेरा मनमा लागेको बिनति गरें. अब जो श्रेय ठहरछ उही गरनु होस, म हजूरको सेवक हूँ. म पनी हजूरका साथ साथै जंगलमा जान्छू यस अविवेकी राज्यमा बसदीन." यती भनेर लक्ष्मण चूप लागे पछी रामचन्द्रले शान्तभाव सँग भनन् भयो, "भाइ ! हेर जुन पिताजीबाट हामीले जन्म लियेका छौं, जसले पल पलमा अनेक कष्ट सही पालन र पोषण गरनाले आज हामी परीआयेका सम्पूर्ण काम गरन समर्थ भयेका छौं, उनै पिताजीको आज्ञा लङ्घन गरी उन माथी अवहेलन गरनाले हामीलाई कत्रो पातक लागला ? यस उमले जसरी हुन्छ माता पितालाई सन्तुष्ट राखनू नै पुत्रको परम धर्म हो. हामीले सोही काम गरनू परदछ, जसमा पिताजीको मन शान्त होस. फेरी अहिले मैले पिताजीको आज्ञा लङ्घन गरें भने पछी पछी पनी यही चाल चलने छ. तेसो भये पछी पिता माताका मर्यादाको नाश हुने छ. सबै बाबूको वचन नाघन लागने छन, यसले लोकको ठूलो हानि हुनेछ. बाबू लक्ष्मण ! अहिले म वन जान लागें भरत र शत्रुघ्न पनी यहाँ छैनन. यस निमित्त तिमी पिताजीको सेवा गरी बस. कुनै छोरो पनी साथमा नहुँदा पिताजीलाई ठूलो खेद परन जाला. यस कारण तिमी अयोध्यैमा बस. मेरा पछी लागने आग्रहलाई छोडी देऊ."

दाज्यूको एक्लै वनमा जाने आशय बुझी अत्यन्त दुःखी भयेर आँशूका धारा बगाउँदै लक्ष्मणले भने, " नाथ ! यस दासलाई तँ यहीँ बस म जान्छू भन्ने जो आज्ञा भयो, प्रेम-वश तेसको प्रत्युत्तर यस मुखबाट निस्कन शकदैन. आमा बाबूलाई न जानेको कसले छ; तर दासको स्वभाव चरणका दास्यमा जहाँ सम्म आसक्त छ सो कुरा हजूरमा जाहेरै छ, म के विनति गरूँ ? मेरो तन मन सारा चरणमानै अर्पित छ. हजूर बाहेक यस दासको आधार यस संसारमा कोही छैन. हजूरले यस सेवकलाई पनी त्याग गरी हिंडदछू भने दासको के जोर चल्द छ ! दासले अजानमा केही अपराध गरेको भये क्षमा पाउँ. "

लक्ष्मणको आफूमा यस्तो दृढ-भक्ति देखेर श्रीरामले प्रेम-पूर्वक भनन् भयो, " बाबू ! तिमी मसँग नगई छोडदैनौ भने माताजी-सँग गयेर बिदा भई चाँडै आऊ. वहाँ बाट पठाई बक्सिन्छ भने, हुन्छ, म तिमीलाई लियेर जान्छू. "

रामको यस्तो आज्ञा पाउने साथ अत्यन्त खुशी भयेर लक्ष्मणजी माता सँग बिदा हुन गये.रामचन्द्र पनी माताजी कौशल्यालाई संझायेर बिदा भई उनीबाट आशीर्वाद लिई शस्त्रास्त्र लिनाका निमित्त आफना दरबार तिर जानू भयो.

रामचन्द्रका वन-वासको समाचार पाउनाले सीताजीका मनमा अनेक तर्कवितर्क परी रहेको थियो. वहाले श्रीरामलाई हतियार लिन आयेको देखनाका साथ विव्हल हुँदै पाऊमा परेर यो विन्ती गरनू भयो, " प्राण-नाथ ! हजूर अयोध्याको राजपाठ छोडी पिताजीका आज्ञाले

वनमा सवारी हुन्छ भने म यहाँ एक्लै कसरी बसन शकदछू? हजूरको जहाँ सवारी हुन्छ म पनी उहीं जान्छू. मलाई पनी लियेर सवारी होस. म शके सम्म वनैमा हजूरको सेवा गरने छू. मेरो परम धर्म पनी यही हो. जस्तो चन्द्र सँग चाँदनी र देह सँग छाया अलग रहन शकदैन, उस्तै म पनी हजूर सँग वियुक्त भई एक छिन पनी बसन शकदीन. वनमा जस्तो सङ्कष्ट परी आयेता पनी हजूरको साथ पायेकी मलाई केही दुःख हुने छैन. हजूर विना यहाँ जस्तो सुकै सुख पनी मलाई तृण बराबर तुच्छ छ. चरणका सेवामा रहन पाये मात्र मलाई सुख हुनेछ, यस कारण हजूरको पाउ केही गरे पनी छोडन शकदीन. जहाँ हजूरको सवारी हुन्छ म पनी उहीं जान्छू."

आफनी प्रिय–पत्नी सीताको त्यो अनिवार्य आग्रह देखी श्रीरामले भनन् भयो, "वर–वर्णिनी ! हुनता वनमा तिमीलाई दुःख हुने छ; तथापि मेरो साथ कसै छोडन शकदिन भन्छ्यौ भने हिंड. जस्तो परेर आउला उस्तै भोग गरौंली."

यती गरी रामचन्द्र लक्ष्मण र सीताजी वनमा जान प्रस्तुत भये. महाराज दशरथ सँग बिदा हुन जाने समय आयो. उनीहरू दशरथका वास-गृहमा जान लागे. अयोध्यावासी हरूलाई सो कुरा थाहा भई सकेको हुनाले सारा प्रजा ती तीन जनालाई हेरनाका निमित्त शोकका साथ बाटामा खडा भयेका थिये. ई तीनै जनाले सरासर कैकयीका खोपीमा पुगी मूर्छित भई रहेका राजालाई देखे. इनीहरू पुगेका केही बेर पछी राजालाई होश भयो. उनले आफना अगाडी मुनि-वेश-धारण गरी वन जानाका निमित्त तयार भयेका

आफना दुई पुत्र र एक बुहारीलाई देखे. पुत्र हरूलाई अङ्कमाल गरूँ भनदैमा उनी फेरी मूर्छित भये र पृथिवीमा गिरे.

महाराज दशरथको त्यो अवस्था देखी राम, लक्ष्मण र सीता ई तीनै जनाको चित्त पनी विकल भयो. राजालाई उठाउन र शीतल जल पङ्खा आदि उपचारले सचेत गराउनाको पनी कसैलाई होश भयेन. इनै तीन जनाले अनेक उपचार गरदा राजा सचेत भये. यसै अवसरमा रामचन्द्रले उनका पाऊमा शिर राखी भनन् भयो, “पिताजी ! हजूर हामी सबैका स्वामी हुनू हुन्छ. हामी तीन जना वन जान तयार भयौं. हुन ता हजूरको म एक जनालाई मात्र वन जानू भन्ने हुकूम थियो, तर इनी-हरू पनी मेरा पछी लागने निश्चय गरी आयेका छन. मैले धेरै प्रका-रले संझायें, तर इनीहरू मानदैनन. कृपा—पूर्वक इनीहरूलाई पनी लैजा भन्ने आज्ञा हुन्छभने म इनीहरूका साथ अहिल्यै प्रस्थान गरने थियें.”

रामचन्द्रका यस्ता दीन वचनले महाराजको हृदय शतधा विदीर्ण भयो. उनका मुखबाट एक अक्षर पनी निस्कन शकेन. खाली प्रेम—पूर्ण, आँशूले ढाकियेका नजरले, उनी, अब तिमीहरूलाई देखन पाउने छैन भन्ने आशय संग, तीनै जनाका मुखमा हेरीरहे.

यस प्रकारले दशरथ संग बिदा भई तीनै जना बाहिर ढोकामा आये, वहाँ राजा दशरथका आज्ञानुसार सुमन्त्रले रथ तयार पारी राखेको थियो ती तीन जना निस्कनाका साथ सुमन्त्रले विनति गरे, “राज—कुमार ! हजूर रथमा चढनू होस. महाराजका हुकूमले रथ

ल्यायेको छु. यसमा राज भये पछी जता आज्ञा हुन्छ म उतै हाँक्दछु." त्यो कुरा स्वीकार गरी सीताजी सहित दुवै भाई आफना शस्त्र अस्त्रले सुसज्जित भयेर रथमा चढे.

सुमन्त्रले श्रीरामका आज्ञानुसार रथ चलाये. रामचन्द्रको तेस हिसाब सँग वनमा सवारी भयेको देखी सारा अयोध्या–वासीहरू शोकाश्रुको वृष्टि गरन लागे, प्रजावत्सल राम पनी आफना शोकले व्याकुल भयेका ती पुर–वासी हरूलाई आश्वासन दिँदै बन तिर जान लागनू भयो. तेसबेला सारा दर्शकहरू रामको ठूलो प्रशंसा गरन लागे:—" अहो !!! धन्य रामको पितृ–भक्ति ! धन्य रामको धैर्य ! जसलाई राज्याभिषेकका हर्षले र वन–वासका विषादले अली कती पनी छुन शकेन. मानीस यस्तै हुनु परदछ धन्य राम ! हजुरको यो प्रभाव हामीले देख्यौं यस्ता रामलाई नपाउने हाम्रै अभाग्य रहेछ " यती भनदै अनेक तरहले खेदपनी गरन लागे.

पुर–वासीजनका यस्ता खेदका कुरा सुनदै राम, सीता र लक्ष्मण सहरबाट बाहिर निस्कनू भयो. अली बेर पछी रथ अयोध्या–वासीका नजरले नभेटाउने भयो. दुनियाँहरू पनी शून्य हृदय भई आँशू पुछदै आफना आफना घरमा आये. धेरै प्रजाहरू पछी लागेका थियं ता पनी उनीहरूलाई रामले अनेक प्रकार सग सम्झाई फरकाउनु भयो. रामचन्द्रका वियोगले सारा अयोध्या शोकाकुल र विशीर्ण देखिन्थ्यो.

रामचन्द्र लक्ष्मण र सीता सुमन्त्रले हाँकेका रथमा बसी आँदा सन्ध्या–समयमा गङ्गाजीका किनारमा पुगे, वहाँ

रथबाट उत्री सायं–कृत्य गरेर उनीहरू केवल जल मात्र पिई तहाँ किनारका एक वटवृक्ष मनी वास बसे. रामचन्द्र आउनू भयेको थाहा पायेर तेस ठाऊँका सामन्त ( रजौटा ) भिल्लका राजा गुहजी रामचन्द्रको सत्कारका निमित्त अनेक नजराना लिई उपस्थित भये, उनले श्रीरामलाई रूख मनी बसेको देखेर यो बिन्ती गरे, " राज–कुमार ! यहाँ मेरो घर छंदा छँदै हजूरहरूले यस वृक्ष मनी विश्राम गरनू योग्य छैन, कृपा–पूर्वक सवारी भयेर मेरो घर पवित्र गराउनू होस. यो कष्ट सहनू हुँदैन. "

गुहको विनीत निवेदन सुनी श्रीरामले उनी सँग भननू भयो, " भिल्ल–राज ! म पिताजीका आज्ञाले वनमा जान भनी आयेको हूँ. यसैले गाऊँ वा सहरमा जानू, उत्तम भोजन गरनू, उत्तम कपडा पहिरनू, इत्यादि भोग मलाई उचित छैन. म आयिन भनी खेद नमान. " यती भनी श्रीरामले गुहका नजरानाको स्पर्श मात्र गरेर उनैद्वारा वरको दूध मगाई जटा बांधनू भयो. रात परे पछी वहाँले कुश–शय्याको आश्रय गरनू भयो. लक्ष्मण पनी दाज्यू भाउज्यूको रक्षाका निमित्त अली कती पर गयेर सुमन्त्रका साथ पहरा दिई बसे.

तहाँ पछी गुहले लक्ष्मण सँग भने, " राज–कुमार ! दाज्यू भाउज्यूको सुकला भई सके पछी हजूरले किन पहरा बसी रहनू पऱ्यो ? म पहरा बसछू ; हजूर मेरा घरमा गयेर पलङ्गमा आरामलिनू होस. " गुहका ई वचन सुनी लक्ष्मणले भने. " गुहजी ! तपाईले भननू भयेको ठीक हो, तर पितृ–तुल्य दाज्यू जमीनमा

सुतनू भयेको छ. वहाँको दास म कसरी पलङमा गई सुतूँ. यसबाट मलाई ठूलो पाप लागछ, यो मेरो कर्त्तव्य होयिन. तपाईंले देखायेका सौजन्यले नै हामी प्रसन्न छौं. अरू कुरामा परिश्रम गरनू परदैन. तपाईं घरमा जानू होस. म आफना काममा रहन्छू." यती भनेर लक्ष्मणले गुहलाई बिदा गरे.

प्रातःकाल भये पछी, सुमन्त्रलाई बोलायेर रामचन्द्रले भनन् भयो, "सुमन्त्र! अब तिमी यस रथलाई लियेर अयोध्या तिर फरक, यहीं सम्म जानू भनी पिताजीबाट तिमीलाई आज्ञा भयेको छ. हामी यता--बाट पैदल जान्छौं. तिमी अयोध्यामा पुगे पछी मुमा कैकयीलाई राम वनमा गये भन्ने पूरा पत्यार हुनेछ, पिताजीलाई पनी छोराहरू आराम साथ फलानू ठाउँमा पुगे भन्ने समाचार विन्ति गरे."

रामले यसरी आफूलाई बिदा दियेको सुनदा सँगै जाने मन थियो ता पनी जोड गरन न शकी लाचार भयेर सुमन्त्र अयोध्या तिर फरके.

रामचन्द्र र लक्ष्मण पनी सीताजीका साथ मित्र गुहले ल्यायेका नाउमा चढी गङ्गाजी पार जानू भयो. नाउ बीच प्रवाहमा पुगे पछी सीताजीले हात जोडेर गङ्गाजी सँग प्रार्थना गरनू भयो कि "हे गङ्गे! हामीहरू निर्विघ्न पूर्वक चौध वर्षको वन--वास पूरा गरी आयौं र रामचन्द्र ले राजगद्दी पाउनू भयो भने तपाईंको भारी उत्सव-पूर्वक पूजा गरने छू." सीताजीले यस्तो प्रार्थना गरदा गरदै नाउ पछा किनारमा पुग्यो. तेताबाट उत्री तीनै जना वनभित्र पसे.

ईश्वरको माया पनी जानी शकनू छैन. हेर, जुन राज-कुमारहरू

सवारी न भई कहिल्यै पनी हिंडदैन थे, आज उनैलाई न देखेका न सुनेका बाटामा अनेक कण्टकादिबाट हुने बाधा सही खोपीबाट बाहिर पनी ननिस्केकी कोमलाङ्गी जनक-कुमारी सीताजीलाई लियेर पैदल हिंडनू पऱ्यो. यही संसारको नियम छ जसको इयत्ता छैन.

यस्ता प्रकारले कहिल्यै नदेखेका ठाउँको विचित्र शोभा हेरदै जाँदा जाँदा साँझ परे पछी, एक ठाउँमा पुगी कोही वृक्ष मनी बसेर ई तीन जनाले रात बिताये. भोलीपल्ट ई तीनै जना तेताबाट पनी अगाडी बढी गङ्गा र यमुनाको सङ्गमस्थ भरद्वाज ऋषिका आश्रम ( प्रयाग तीर्थ ) मा पुगे. तहाँ आफना शिष्यहरूका साथ अग्निहोत्र कर्ममा लागेका ती मुनिलाई प्रणाम गरी रामचन्द्रले आफनू वृत्तान्त सबै बताउनू भयो.

आफना आश्रममा आयेका राम, लक्ष्मण र सीतालाई भरद्वाजले भारी सत्कार गरे. ई तीन जना पनी भोली पल्ट बाटो लागने विचारले एक रात तेही आश्रममा बसे. तेस वेलामा रामचन्द्रले भरद्वाज मुनि सँग सोधनू भयो, " हे मुनीश्वर! हामीलाई चौध वर्ष सम्म सुविस्ता साथ बसन हुने कोही असल ठाउँ भये आज्ञा होस. हामीहरू उहीं गई चौध वर्ष बिताउछौं. " श्री—रामको यो प्रश्न सुनेर ऋषिले भने, "यहाँबाट अन्दाजी चौतीश कोश पर ठूला ठूला ऋषीहरूले तपस्या गरने, फल फूल र जलहरूको सुविस्ता भयेको चित्रकूट नामक पर्वत छ. तहीं गयेर बसे देखी चौध वर्ष बिताउन केही कठिन हुने छैन."

मुनिको यस आज्ञानुसार दोस्रा दिन तहाँबाट चित्रकूट तर्फको बाटो लिई राम, लक्ष्मण र सीता तीनै जना यमुनाका किनारमा पुगे. उताबाट पनी नाऊ द्वारा यमुना तरेर सीताजीका साथ ई दुवै भाई अगाडी बढे.

बीच बीचमा जुन फल वा फूल सीताजीलाई राम्रो लागद्थ्यो लक्ष्मण तुरुन्त त्यो लायेर भक्ति-पूर्वक दिन्थे. यसरी जाँदा जाँदा वाल्मीकिका आश्रममा पुगेर ई तीन जनाले भक्ति र विनय-पूर्वक ऋषिलाई प्रणाम गरे. ऋषिले पनी आफूले शके सम्म ई तीनै जनाको सत्कार गरे. केही बेर सुस्तायेपछी, श्रीरामले "हामीहरूलाई बस्ने सुविस्ताको ठाउँ कहाँ होला?" भनी वाल्मीकि सँग सोधनू भयो. उनले पनी "चित्रकूटमा बेस छ" भनी बताये. मुनिका आज्ञानुसार राम, लक्ष्मण र सीता तेताबाट बिदा भयेर जाँदा जाँदा चित्रकूट पर्वतमा पुगे. वहाँ केही बेर यता उती घूम फिर गरदा फल फूल जल इत्यादिको सुविस्ता हुने कोही उत्तम ठाउँ अन्वेषण गरी तहीं एक कुटी बनायेर उनीहरू आनन्द पूर्वक बसन लागे.

उता तिर श्रीरामचन्द्र सँग बिदा भई रथ लियेर शोकले विव्हल हुँदै फरकेका सुमन्त्र सारथि अयोध्या तिर लागे. उनी केही दीन बाँकि छँदैमा अयोध्याका समीपमा पुगेका थिये ता पनी सहसा सहर भित्र पसन शकेनन, दिन छँदा सम्म बीचैमा बसेर सन्ध्या भये पछी उनी सहरमा पसे. कारण, दिनैमा जाँदा हजारौं पुरवासीले आफूलाई देखलान, रामका विषयमा यो के उपद्रव उठेको भनी सोधलान, शोकका मारे रून थाल्लान, ती सबलाई के जबाब दिउँला, कसरी

बुझाउँला भन्ने, इत्यादि कुराले उनका मनमा फिक्री परी रहेको थियो. यसै कारण उनी कसैले न देखने गरी रात परे पछी शहर भित्र पसे.

रथको शब्द सुनदैमा अब सुमन्त्र फरकेर आये, श्री–रामहरूको के के हाल बताउँछन भन्ने औत्सुक्यले राजा दशरथ र कौशल्या आदि माहरानी हरू ढोकामा आई बसेका थिये. उनी हरूलाई ढोकामा देखना साथ झट पट रथबाट उत्री सुमन्त्र ले राजालाई प्रणाम गरे. उनी हात जोडी समाचार बताउनाका निमित्त बोलन मात्र आँटेका थिये, उसै वेला रामचन्द्रले रहित भयेको रथ देखदा महाराज दशरथ शोकले मूर्च्छित भई जमीनमा गिरे. साथै साथ महारानी र अरू राज परीवार पनी सबै जना हा राम ! हा लक्ष्मण ! हा सीते ! भनदै विलाप गरन लागे.

राजालाई मूर्च्छित भयेको देखदा मन्त्री हरूले उठाई कौशल्याका खोपीमा लगेर शीतोपचारले सचेत गराये. होश पाये पछी बराबर आँशु खसालदै सुमन्त्रका मुख तिर हेरी महाराजले ई कुरा सोधे " सुमन्त्र ! महात्मा पितृ-भक्त राम कहाँ छन ? गुरू-भक्त भ्रातृ-भक्त लक्ष्मणको के हाल छ ? प्रिय बधू जनक-नन्दिनी सीताजी कहाँ छन ? उनी हरू कुन रीतले कहाँ गये ? मलाई के के भनदये ? उनी हरूले दुःख मानेका थिये कि ? यो सबै विस्तार गरेर भन. "
यस्तो राजाको आज्ञा सुनी सुमन्त्रले पनी बराबर अश्रू धाराको वृष्टि गरी बीच बीचमा शोकले रोकिंदै रामचन्द्रहरू सुविस्ता साथ गङ्गाजीका किनार सम्म पुगेको हाल जाहेर गरे.

यती समाचार विन्ति गरी सुमन्त्र निस्के पछी, तेस रात भर महाराजलाई राम, लक्ष्मण र सीताजीका असह्य शोकले निद्रा परन. कौशल्याले पनी हुने सम्म राजालाई निद्रा परोस भनी अनेक उपाय गरिन; तर उनको चित्त साह्रै विकल भयेको हुनाले त्यो सबै व्यर्थ भयो.

शोक विह्वल राजाले विचार गरे कि अब मेरो चित्त केही गरे पनी शान्त हुँदैन. यसै शोक द्वरा मेरो प्राण जाने छ. यस्तो विचार गरी कौशल्यालाई राजाले भने, "महारानी ! तिम्रो र मेरो सह-वास आजै सम्म रहेछ. अब म यस देहलाई त्याग गरदछु. कारण, अघी मैले अजानमा एक तपस्वी-पुत्रलाई मारेथें. उस वेला ती तपस्वीले आफनू छोरो मरेका उद्वेगले मलाई यही शाप दियेका थिये कि जसरी तैंले हाम्रा एक मात्र आधार भयेको पुत्रलाई मारेर हामीलाई पुत्र-शोकमा डुबाइस, उसै गरी तैंले पनी पुत्र-शोकमा डुबेर प्राणत्याग गरनू परने छ. यस उसले आज मलाई ठूलो पुत्र शोक परेको छ. अब सो श्रापका प्रभाव ले मेरो प्राण जाने वेला भयो, अहिले मेरो शरीरमा अत्यन्त पीडा भयेको छ; बोलने सामर्थ्य पनी छैन. यस्ता कुरा गरदा गरदै राजाको वचन रोकियो. उनी प्रारब्ध-कर्मको अन्त्य भई सकेको हुनाले यस असार संसारलाई छोडी भोली पल्टै परलोकका अतिथि भये.

राजाको देहान्त भये पछी, मन्त्रीहरू र गुरू वशिष्ठका सल्लाहले राजाको अन्त्य क्रिया गराउना निमित्त भरत शत्रुघ्नलाई ल्याउनाका निमित्त दूतहरू केकय देश तिर पठाये. तिनीहरू पुगने भन्दा

अघिल्लै दिनदेखी भरतले पनी घेरैने दुःस्वप्न, दुःशकुन, आदि देखन लागेका थिये.

खराब स्वप्नाका चिन्ताले भरत खिन्न भयेर मुख अत्यन्त मलीन गराई मनमा आज पिताजी र दाज्यू रामचन्द्रका विषयमा अवश्य केही न केही खराब कुरा सुननू परछ कि भन्ने अनेक तर्क वितर्क गरी रहेका थिये. तसै बेला अकस्मात् अयोध्याबाट गयेका दूतहरू पुगेर केकय–राज संग केही कुरा गरी भरतका अगाडी गई यो कुरा भनन लागे, " राज–कुमार ! हजूरलाई कुल–गुरू वशिष्ठ र मन्त्रीहरूले आजै लिई आउनू भनी पठायेको हुनाले हामी आयेका छौं, चाडै सवारी होस."

यो समाचार सुनी भरतले तिनीहरू संग माता पिता, दाज्यू भाउज्यू र भाईहरूका शरीरको आरामी खबर सोधे, उनीहरूले पनी सबै कुशल हनू हुन्छ भनि विन्ति गरे. यस्तो तिनीहरूको भाव–गर्भित निवेदन सुनी भरतजीले अफना मामाहरू संग बिदा भई हड़बड़ाउँदै उनै दूतहरूका साथ अयोध्या तिर प्रस्थान गरे. बाटामा पनी अनेक दुःशकुन मात्र देखिन्थे. यस कारण ले उनी मनमा अनेक संशय गर्दै ती दूतहरूका साथ अयोध्या पुगे. वहाँका सब ठाउँ श्रीविहीन देखी दूत सँग भरतले सोधे, " दूतहो ! यो अत्यन्त रमणीय अयोध्या नगरी आज उजार देखिन्छ. सधैंको जस्तो उत्सव र मङ्गल–वाद्यादिको शब्द पनी यहाँ केही सुनि दैन, सडकहरूमा सफाई पनी केही छैन. सारा प्रजाका मुखमा पनी उदासीनता छाई रेहेको छ. यो सब के कारणाले भयेको हो ? "

भरतजी यसरी सोचनी गर्दै थिये रथ दरबारका ढोकामा पुग्यो. उनी रथबाट ओर्लेर सरासर पिताजीका खोपिमा गये. वहाँ उनले महाराज दशरथलाई देखेनन. फेरी उनी माताजीका खोपी तिर गये, वहाँ पनी एक्लै बसेकी माताजीलाई देखी उनका पाउमा भरतले दण्डवत् गरे. कैकयीले पनी धेरै दिनमा आयेका आफना पुत्र भरतलाई ठूला प्रेमले अङ्कमाल गरी शिरमा सूँ घेर आफनू माइतीका हाल खबर सोधिन, भरतले पनी मामाका घरको कुशल समाचार सुनाई भने "माताजी! मैले पिताजीको दर्शन पायिन, कहाँ राज भयेको छ? आज खोपीमा पनी वहाँ लाई देखिन; यहाँ पनी राज भयेको रहेनछ, कता सवारी भयो! बुवाको दर्शन गरन दिल हडबडाई रहेछ. कहाँ हुनू हुन्छ? आज्ञा भये उहीं गई दर्शन गरेर चित्तको ठूलो चिन्ता हटाउने थियें." यती कुरा भरतले सोधे पछी कैकयीले भनिन, "बाबू! तिम्रा पिताजीको उहीं सवारी भयो, जहाँ एक फेरा अवश्य सबैले जानू परदछ." यती भनेर उनले दशरथले प्राण-त्याग गरेको वृत्तान्त पनी सब सुनायिन.

माताका मुखबाट आफनू पिताजीका परलोक—वासको खबर सुनी बिचरा भरत शोकले मूर्छित भयेर जमीनमा गिरे. धेरै बेर पछी होश पाई उठेर उनी अनेक तरहले विलाप गरन लागे, "हा पिताजी! हजूरले अस्ती मात्रै दाज्यैज्यू रामचन्द्रलाई राजगद्दी दियेर वान-प्रस्थाश्रम लिई म ईश्वरको भजन गरदछू, तिमि तेस उत्सवका निमित्त चाँडै आई पुगे भन्ने समाचार पठाउनू भयेको थियो. आज तेस उत्सवका बदलामा मेरा दुर्भाग्यले यस्तो खराब समाचार

सुनन् पर्‍यो. म बडो अभागी रहेछु. हजुरको प्राण जाने दुई घडी अगाडी मात्र आई पुगेको भये पनी मैले केही प्रियवचन सुनन पाउने थियें. दाज्यैज्यू नै भाग्यवान् हुनू हुँदो रहेछ. वहाँले छोरो भईकन अन्त्य—कालमा पिताजीको सेवा गरन पाउनू भयो. संसारमा पुत्र भयेर जन्मीकन पनी पितृ—संस्कार कर्म मेरा हातबाट हुन पायेन. मेरा दुर्भाग्यलाई धिक्कार छ ! म छोरो भयेको पनी व्यर्थ भयो. हा दैव ? मलाई यस शोक—सागरमा डुबाई पिताजी लाई हरेर लैजानु यो कस्तो निष्ठुरता हो ? अब म के गरूँ कहाँ जाउँ?"

भरत धेरै बेर सम्म यस्तो विलाप गरदा गरदै बेहोश भये. केही बेर पछी उठेर फेरी मातासँग शोधन लागे, "माताजी ! बुवाको स्वर्ग—वास भयो तो पनी मेरा पितृ—तुल्य दाज्यैज्यू रामचन्द्र हुनू हुन्छ. अब उहाँको दर्शन गरी यो विकल—चित्तलाई शान्त गराउँछु. आज्ञा होस. दाज्यैज्यू कहाँ हुनू हुन्छ ? म उहाँको दर्शन गरन जान्छु. चाँडो आज्ञा होस."

भरतको यस्तो शोकोक्ति सुनेर कैकयीले भनिन, "बाबू ! रामचन्द्र यहाँ छैनन. उनी लक्ष्मण र सीतालाई लिई तपस्वीको वेष गरेर चौध वर्ष सम्म वन—वास गरन गये. अब तिमी परम—पदमा प्राप्त भई सकेका पिताजीको शोक न गर. जसरी हुन्छ आफनू राजपाट सम्हाँल." इत्यादि धेरै कुरा गरेर कैकयीले भरतको शोक हटाई उनलाई खुशी तुल्याउने उद्योग गरिन, तर भरत निर्लोभी र धर्मात्मा हुनाले अत्यन्त दुःखित भयेर भनन थाले, "दाज्यैज्यूले के तेति ठूलो पाप गरनू भयोर पिताजीले वन—वासको आज्ञा बक्सनू भयो ?. रामचन्द्रले

कुनै तरहको पाप कर्म गरनू भयोहोला भन्ने मलाई विश्वास छैन, के अपराधमा वहाँलाई येति ठूलो वन-वासको दण्ड मिल्यो ? सो कुरा यथार्थ मलाई हुकूम होस . यस कुराले मेरो चित्त अरू मन मन व्याकुल हुन लाग्यो.

भरतजीको यस्तो प्रश्न सुनेर निर्लज्जा कैकयीले भनिन, "बाबू ! रामचन्द्रले भोली राज्य पाउँछन भन्ने सुनदा, मन्थराका अनुमति अनुसार, मैले अघी तिम्रा पिताजी सँग नासो राखेका दुई वरमा एक वरले तिमीलाई राज्य र अर्का वरले रामचन्द्रलाई चौध वर्षको वन–वास होस भनी महाराज सँग माँगे, सत्य–प्रतिज्ञ तिम्रा पिताजीले पनी मेरो मनोरथ लाई पूर्ण गरेर रामलाई वनमा पठाई तिमीलाई राज्य दिनू भयेको छ. अब तिमी राम्ररी राजपाठ चलाऊ. यस अयोध्याको राजा तिमी हुने भयौ. "

यस्ता प्रकार संग निर्लज्जा माताका मुखबाट निस्केका घोर दवा-नल–समान वचनले जरेका भरत फेरी मूर्छित भये. केही बेर पछी उठेर, सुतेका सर्पलाई लट्ठीले घोचंदा रिसाये झैं गरी साह्रै क्रुद्ध भयेर उनी कैकयी सँग भनन लागे, " हजूरले स्वार्थ–वश दाज्यै-ज्यूलाई वनमा पठायेर तेही शोक-द्वारा पिताजीलाई प्राण-विमुक्त गराउनू भयेछ. एक राज्यका निमित्त यस्तो ठूलो पाप गरनू यो शत्रुको काम हो. यस कुराबाट म खुशी हुन्न. यस्ता अकर्त्तव्य गरनेलाई महापाप्र लाग छ. आमा भये ता पनी हजूर पापिनी हुनू हुँदो रहेछ. यस्ती पापिनीको मुख पनी म हेरन शकदिन. हजूरको इच्छा पूरा गरी राजा हुनू ता परै रहोस; दाज्यैज्यूलाई ल्यायेर

राजा बनायेर आफू दास भई वहाँको सेवा गरदछू. यस अन्यायले म ता के सारा अयोध्या दुःखित भयेको होला. अब यस पापको प्रायश्चित्त मैले कताबाट गराउनू ?. अवश्य नरकको भोग गरनू परने, भयो. हाय ! ! मेरा प्रारब्धमा कस्तो लेखेको रहेछ ? यस्ती अपराधिनी चाण्डालिनी र निर्बुद्धि आमाको गर्भबाट मैले जन्मनू नै व्यर्थ हो !" अरू के भनू, मातृहत्या गरूँ भने रामचंद्रको मन परने छैन. अब मेरो कर्तव्य यहि छ कि यस्ती कुकर्मी, भ्रष्टा निर्लज्जा तिम्रो मुख हेरन शकदीन.

भरतजी यस्ता प्रकारले आमाको निन्दाका साथ अत्यन्त शोक गरदै थिये; यसै अवसरमा गहना पोशाकले डटी डटाऊ भई, अब ता काम पूरा भयो, भन्ने विचारले खुशी हुंदै मन्थरा पनी तहिं आई पुगी. तेस वेला शत्रुघ्न पनी उहीं थिये. तेस मन्थरालाई देखना साथ उनले अत्यन्त रिसायेर एक लात दिई भईमा गिराई दिये. तै पनी रीस नमरदा उनले यती विघ्न उठाउने तैं चाण्डालनी होयिनस ? भनदै चुल्ठामा समाती पीटदा पीटदै तेसलाई अधमरी गरायेर छोडी दिये.

केही बेर पछी दुवै भाई शोक-सन्तप्ता कौशल्या र सुमित्रालाई आश्वासन गरन गये. वहां पुगेर दुवै भाई दुवै :मातालाई दण्डवत् गरी शोकले व्याकुल हुंदै कौशल्याका पाऊ नेर गई बसे. कौशल्याले पनी ती दुई भाईलाई अङ्कमाल गरि, आफना वन-वासी छोरालाई सम्झेर शोकाश्रुको वृष्टि गरदै भरत सँग भनन लागिन, " बाबू ! तिम्री माताजीले तिमीलाई ठूलो कष्ट संग अयोध्याको राज्य पिताजीबाट दिलायेकी छन. यो कुरा सुनदा तिमीलाई पनी हर्ष भयो होला. अब

निर्धक्क भयेर राज्य गर. परन्तु एक सानू राज्यका निमित्त तिम्री माताले हामीहरूलाई विवस्सा गाई मैं गराउनू उचित थियेन. हाम्रा पुत्रलाई बनमा नपठाई राज्य मात्र मागेको भये पनी कसैले रोकने थियेन. हाम्रा छोरालाई बनमा पठाउनामा उनलाई विशेष लाभ के रहेछ ! सो हामी केही जानदैनौं, जो हुने सो भई गयो. अब हामीलाई रामचन्द्रका साथ बन जाने बिदा देऊ; हामी उहीं जान्छौं, अथवा तिमी नै पुऱ्याई देऊ. तेती गरेर आनन्द-पूर्वक तिमी राज्यको भोग गर. "

कौशल्याले यती भनेको सुनदा मनमा अत्यन्त दुःखित भई भरतले उनका पाउमा छाँद हाली यो कुरा भने, " माताजी ! मेरो दाज्यैज्यूमा जस्तो प्रेम छ, दाज्यैज्यूबाट मलाई जस्तो प्यारो गरनू हुन्छ, सो कुरा हजूरमा पनी जाहेरै छ. यस राज्यका कुरामा मेरो सर्वथा केही दोष छैन. यदि मेरा तर्फबाट यो कुरा भयेको रहेछ भने मलाई जन्म भर पढे पनी विद्या नआओस; मैले चाण्डाळको नोकर भई गरेका गोहत्याको पाप भोग गरनू परोस, माता-पिता-आदि गुरु—जनको अपमान गरनाले हुने पाप मलाई लागोस; प्रतिज्ञा पूरा नगरने र स्त्री-पुत्रादि, बाल-वृद्धादिलाई नदिई आफू मात्र मीठो वस्तु खानेलाई जो पाप लागदछ सो पाप मलाई लागोस; लडाईमा मेरो कहिल्यै जीत नहोस; मलाई सधैं वैरी सँग दबेर बसनू परोस; अधर्मी, जुवाडे, यज्ञमा विघ्न गरने र तृषितलाई जल नदिनेहरूको जुन गति हुन्छ सो मेरो होस. " यती भनदै भरत फेरी मूर्छित भई जमीनमा गिरे. तिनको त्यो अवस्था देखी कौशल्याले उनलाई उठायेर भनिन. " बाबू ! तिमीले शपथ खानू पर-

दैन, तिमी सच्चा छौ. यस कुरामा तिम्रो केही दोष छैन. अहिले हामीलाई श्रीरामको अवस्थामा मन्दा तिम्रो यस आकुल अवस्थामा अधिक शोक हुन लागेको छ. बाबू ! तिमी सर्वथा धर्मात्मा छौ, धर्म छोडेका पनी छैनौ, ईश्वरले तिम्रो कल्याण गर्ने छन."

कौशल्याले यसरी संझाउँदा भरतका शोकाग्निको ज्वाला केही शमन भयो. उनले मन्त्री र गुरू वशिष्ठका आज्ञानुसार तैल-द्रोणीमा रहेका राजा दशरथको संस्कारादि कर्म गरे. सो मक्रिये पछी वशिष्ठ आदि सब जनाले भरतजीलाई "अब राज-तिलक लिनू पर्छ; पिताको हुकूम यस्तै छ" भन्ने कुरा संझाये. तर भ्रातृ–भक्त र कुल-स्थिति जानने बुद्धिमान् भरत तेस कुरामा सहमत भयेनन. उनले जबाब दिये, "हाम्रा कुलमा ज्येठो दाज्यू छँदा छँदै धर्मशास्त्रका वचनले वा अरू कुनै तरहबाट पनी भाईलाई राज्यको अधिकार छैन. यस निमित्त मलाई यस कुरामा जोर जुलुम केही गरनू पर्दैन. दाज्यैज्यूलाई नै वनबाट ल्यायेर यस राज्यको राजगद्दीमा राखदछू. आफू वहाँको दास भई सेवा गरदछू. कदाचित् दाज्यैज्यू फरकनू भयेन भने म पनी वहाँकै पछी लागदछू. यो निन्दित राज्य सर्वथा गरदिन." यती भनेर भरत वनैमा जान प्रस्तुत भये. अरू पनी निरुत्तर भयेर उनैका पछी लागने विचारमां लागे.

प्रजाको पनी आफू सँगै पछी लागने निश्चय बुझेर भरतले आफना कौशल्या आदि माताहरू, गुरु वशिष्ठ, मन्त्री र अरू प्रजागणका साथ वन तिर प्रस्थान गरे. श्रीरामको अनुसन्धान गरदै जाँदा उनी भरद्वाजका आश्रममा पुगे. वहाँ भरद्वाज सँग सोध पुछ गरदा राम-

चन्द्र चित्रकूटको फलानू ठाउँमा बसनू भयेको छ भन्ने पत्ता पाई, भरत फेरी चित्रकूट तिरै गये, केही पर पुगे पछी चित्रकूटको निकट-वर्ती शिखरमा चढेर हेरदा उनले रामका कुटीबाट निस्केको धूवाँ देखे, सो देखदा यो अवश्य दाज्यूकै कूटीको धूवाँ हो भन्ने भरतलाई निश्चय भयो. उनी सैन्यलाई बिस्तारै आउँदै गरनू भनी खाली शत्रु-घ्नलाई मात्र लियेर अगाडी बढे.

उता चित्रकूटमा रहेका लक्ष्मणले अयोध्याबाट भरतका पछी पछी आउन लागेका सैन्यले उडायेको धूलो र बन-जन्तु हरू यता उती भागन लागेको देखी आश्चर्य मानेर राम सँग भने, " दाज्यै ज्यू ! यो के उपद्रव मच्चिन लाग्यो ? नजर होस ! " लक्ष्मणको यस्तो ससम्भ्रम वचन सुनी रामचन्द्रले भननू भयो, " कोही हिंसक जन्तु आयो होला, अथवा कोही राज-कुमार शिकार खेलन आये हुनन " यती भनी दुवै भाई उतै परकी हेरन लागे. यत्तिकैमा भरतको रथ, घोडा, हात्ती, आदि सेना नगीचै आई पुगन लाग्यो.

बडो हडबडका साथ आफू बसेका ठाउँ तिर आउन लागेको असङ्ख्य सैन्यलाई देखी लक्ष्मणले हडबडायेर फेरी रामचन्द्र सँग भने, " दाज्यै ज्यू ! यो ता बडो भारी सेना रहेछ. हामी सँग लडन आयेको ता होयिन ? अब हामीले कवचहरू पहिरी शस्त्र अस्त्र लियेर तयार हुनू योग्य छ. भाउज्यूलाई पनी कोही सुरक्षित गुफामा लगेर राखौं. " लक्ष्मणका ई ससम्भ्रम वचन सुनी रामले भननू भयो, " भाई ! किन हतपताउँछौ ? पहिले सैन्य ता चिह्न कसको हो ? अनी तेस कुराको प्रबन्ध गरौंला.

दाज्यूको आज्ञा पाउँना साथ अग्लो शालका वृक्षमा चढेर राम्रो गरी हेरदा रथको कोविदार–ध्वजा देखनाले भरतको सेना रहेछ भन्ने लक्ष्मणलाई पूरा निश्चय भयो, उनले राम सँग भने, दाज्यैज्यू ! त्यो कसको सेना हुन्थ्यो ? उनै कैकयीका छोरा भरत हामीलाई मारन भनी आयेका रहेछन. अब हामीले पनी शस्त्र अस्त्र तयारी गरी लडनाका निमित्त सुसज्जित रहनू परदछ. लडाई पर्‍यो भने भरत यताबाट उंकेर जान नपाउन उनीलाई मारे पछी सरासर सारा यस्तो प्रबन्ध गरनु परद छ जसमा राज्य हाम्रा हातमा आउनेछ. कदाचित् उनका मातृ-पक्षबाट कोई उठेर आये भने उनीहरूलाई पनी छोडनू हुन छैन. राज्यका लोभले आयेका अरू पनी कैकयी-पक्षका सारा जनलाई बाँकी राखनू हुँदैन. यसमा हजूर चूप चाप लागनू हुन्छ भने पनी म एकलै लडेर सारा-को ध्वंस गरदछू. आजै मेरा पुरूषार्थको हजूरलाई परिचय हुनेछ."

क्रोधले पूर्ण भयका लक्ष्मणका ई वचन सुनी रामचन्द्रले भननू भयो, " भाइ ! यहाँ शस्त्र अस्त्रको केही काम छैन. बिचरा महात्मा भरतजी आफैं वनमा आउन लागी रहेछन. हामीले पिताजीको आज्ञा शिरोपर गरी चौध वर्ष वन–वास गरने प्रतिज्ञा गरी सकेका छौं. अब उनलाई मारेर हामीले दुष्कीर्ति फैलाउने काम गरनू उचित छैन. भाईको विनाश गरी त्रैलोक्यको राज्य पाये पनी मलाई चाहिंदैन. राज्यैको लोभ गरने भये तिमि जस्ता पुरूषार्थी भाइ छँदा छँदै मलाई केही कंती थियेन. अघी अयोध्यामा नै तिमीलाई रीस उठेका वेलामा लौ हुन्छ भनने थियें. तिमी उसै वेला सब तय गरने थियौ. बाबू ! लक्ष्मण ! अब मैले

खाली पिताजीको आज्ञा पालन गरनू परदछ. यस भन्दा मेरो अर्को कर्त्तव्य नै केही छैन. तिमी किन राज्यका कुरा गरदछौ ! भरत पनी निर्बुद्धि छैनन. उनी पनी सके राज्यकै कुरामा माता–पिताजी सँग गड बड हुँदा म सँग सलाह मागन आयेका होलान. जे गरन आयेका भये पनी भई गयो. आउन देउ. यदि उनी संग यौटा मात्र रीसको कुरा गऱ्यो भने तिमीलाई मेरो हत्या लागनेछ. तिमिलाई राज्यको लोभ छ भने मैं भरत सँग तिम्रो निमित्त राज्य मागी दिन्छू. मैले मागें भने उनी अवश्य दिने पनी छन. यतैबाट फरकी गयेर राज्य गरौला. मैले भनेको मानदछौ भने जस्तो मलाई पिताजी बराबर सम्झन्छौ उस्तै भरतलाई पनी सम्झ."

श्रीरामचन्द्रले यसरी सम्झाउँदा लक्ष्मणको चित्त बुझ्यो. उनले दाज्यूका आज्ञानुसार भरतका उपर केही रीस गरेनन, आफना कुराले आफैं लज्जित भई चुप चाप लागे.

केही बेर पछी, गुरु वशिष्ठ मन्त्री आमाहरू र अरू सैन्यलाई पछी छोडी भरतजी पनी आई पुगे. वहाँ बोक्राहरू पहिरी तपस्वी का वेषमा रहेका आफना दाज्यू श्रीरामचन्द्रलाई देखी उनको मन साह्रै खिन्न भयो. उनी तेही उद्वेगले बेहोश भयेर दाज्यूका पाऊमा गिरे. रामचन्द्रले पनी प्रेम-पूर्वक उनलाई उठाउनू भयो. उठे पछी उनले हात जोडेर बिन्ती गरे. " दाज्यैज्यू ! जसका शरीरमा उत्तम वस्त्र, भूषण हरू र केसर आदि सुगन्धित द्रव्यले शोभा पाउँदथे आज लोक–पूज्य उही हजूरका शरीरमा मेरा निम्ती बोक्रा र जमीनका रज:कणा पडी रहेका छन. मेरो जीवनलाई धिक्कार छ. मेरा निमित्त हजूरले यो कष्ट सहनू पऱ्यो, ते सभा मलाई पनी धिक्कार छ.

यस्तो विलाप गरदा गरदै भरत फेरी मूर्च्छा परी जमीनमा गिरे. श्रीरामले फेरी उनलाई झट पट प्रेम–पूर्वक उठायेर अङ्कमाल गरी धेरै संझाउनू भयो. शत्रुघ्नले पनी दाज्यूका पाउमा दण्डवत् गरे. केही बेर पछी गुरु वशिष्ठ, कौशल्यादि महारानीहरू र मन्त्रीहरू पनी तहाँ आई पुगे. सबैको यथायोग्य प्रणामादि सक्रिये पछी श्रीरामचन्द्रले भरतलाई यसरी सोधनू भयो." भाई ? तिमी मावलैमा थियौ र म यता आयैथे, धेरै दिन देखन नपायेको हुनाले तिम्रो अनुहार बँगलै जस्तो भये छ. अयोध्याबाट यसरी सरासर तिमी आयेको देखदा मलाई शङ्का पनी लागदछ कि पिताजीले तिमीलाई यहाँ आउने आज्ञा कसरी दिनू भयो ? यसबाट पिताजीका जीवनमा पनी केही भयो कि भन्ने डर लागदछ–बाबू ? भरत ! अयोध्याको हाल कस्तो छ ? तिमी गुरु–जनको सेवा ता राम्रा तरहले गरछौ ? तिमीले शस्त्रास्त्र-विद्या र नीति जानने सुधन्वाजीलाई प्रसन्न ता राखेका छौ ? काम गरनू भन्दा पहिल्यै तिम्रा मनमा उठेको कुरा शत्रुले थाहा ता पाँउदैनौ ? सेना–पतिलाई प्रसन्न राखनू, फौजलाई समय समयमा जागीर दिनू, दुनियाँलाई आफना चाल चलनले राजी खुशी राखनूं, चोर डाँकूबाट प्रजाको रक्षा गरनूं, मिष्टान्नहरू सबैलाई बाँडी खानू, इत्यादि कुरा नीति-पूर्वक ता गरेका छौ ?"

रामचन्द्रले यस्ता प्रकार सँग आफूलाई सोधनी गरदा शोकाकुल भरतले हात जोडेर भने, " दाज्यैज्यू ! हजूरले सार–गर्भित राज–नीतिका कुरा जो सोधनू भयो तेसको मलाई केही प्रयोजन छैन. किन भने, आफू भन्दा माथीका ज्येठा दाज्यू छँदै भाई राजा हुन शकदैन.

यस निमित्त अब हजूरको अयोध्यामा सवारी होस. वहाँ आफनू कुलस्थिति थामी प्रजाको पालन गरनू परछ्द. यतिखेल पिताजीबाट राज्य चलेको थियो, सो पिताजी पनी म मामाका घरमा रहेको र हजूर यता सवारी भयेको समय पारी परम धाम हुनु भयेछ. हाम्रा दुर्भाग्यले गरदा कुनै छोराले पनी अन्त्य—समयमा वहाँको सेवा गरन पायेनौं जो हुने भयो अब भई सकेका कुरामा शोक गरेर केही पुगदैन. अबता जसरी हुन्छ चाँडै नै अयोध्यामा गयेर हजूरले अराजक प्रजाको पालन गरनू नै श्रेय छ. मेरी आमा र पिताजीको आज्ञा हजूरबाट पूरा भई सक्यो. किन भने, हजूरले वन—वास गरनू भयो, अब भयो हजूरको राज्य हजूरैमा चढाउँछू. सो लियेर राजगद्दीमा विराजमान भई हामीहरू र प्रजालाई आनन्द गराउनू होस. ”

भरतको सविनय निवेदनबाट आफना पिताजी परलोक भयेको कुरा जानेर श्रीराम अत्यन्त शोकका साथ मूर्च्छित हुनू भयो. केही बेर पछी सचेत भयेर वहाँले भननू भयो, “ बाबू ! भरत ! पिताजीनै हुनू हुन्न भने अयोध्यामा गयेर म के गरूँ ? अब तिमी हामीलाई कसले उपदेश गरला ? पिताजीले राम्रा राम्रा वचन गरी प्यारो गरदा कति आनन्द लागदथ्यो. अब सो आनन्द कहाँ पाउँला. सीते ! तिमी श्वशुर विहीना भयौ. हामी पनी टुहुरा भयौं. हाय ! पिताजी ! कहाँ सवारी भयो ? ”

रामचन्द्र यसरी अनेक विलाप गरी रहनू भयेको थियो. तेसै वेला कुल-गुरु वशिष्ठले अघी सरेर रामचन्द्रलाई भने. “ बाबू ! अब शोक गरेर केही पुगदैन. संसारको गति यही हो. यस गति-

मा सबैले नचली हुँदैन. यो सबै तिमि जानदैछौ. मैले समझाई रहनु परदैन. यस कारणले अहिले यस शोकको वेगलाई रोक, आफना कुलाचार अनुसार स्वर्गमा प्राप्त भयेका पिताजीको पुत्रले गरनू परने अन्तिम क्रिया गर" गुरूको यो सान्त्वना-पूर्वकको वचन सुनेर रामचन्द्रले पिताजीको अञ्जलि-दानादि कर्म गरनू भयो.

यहाँ पछी गुरु-वशिष्ठ, वृद्ध-मन्त्रीहरूर अरू तहाँ आयेका अयोध्या-वासी प्रजाले रामलाई राज्य गरनू होस भनी अनेक तरहले समझाये. तर ती सबैलाई श्रीरामचन्द्रले यही जवाब दिनू भयो कि म त्रैलोक्यको राज्य पाउँछु भने पनी चौध वर्ष सम्मको वन-वास पूरा नगरी फरकन्न, जाबो यौटा अयोध्याकोता के कुरा ? सारा त्रैलोक्यको राज्य पाउछू भने पनी-मलाई यस विषयमा कसैले समझाउनू बुझाउनू परदैन. म सर्वथा पूज्यपाद पिताजी का आज्ञाको उलङ्घन गरदीन.

रामचन्द्रको यो दृढ-प्रतिज्ञा सुनेर सबै निरुत्तर भये. फेरी कसैले केही भनन शकेनन. विचरा भरत भने दीन मुख गरेर रामचन्द्रका मुख तिर हेरन लागे. तिनको त्यो अवस्था देखेर रामचन्द्रले भननू भयो, "भाई भरत ! तिम्रो मेरा उपर जत्तिको प्रेम छ त्यो सबै मलाई थाहा छ, परन्तु भवितव्यतालाई कसैले टारन शकदैन. यस वन-वासबाट चौध वर्ष पूरा गरी फरकें भने तिम्रो इच्छा पूर्ण गराउन्यै छू. अहिले जुन पिताजीका आज्ञाले म वनमा आयें उनै पिताजीका आज्ञाले तिमी अयोध्यामा गयेर आफनू पैतृक राजपाठ चलाऊ. यही तिम्रो परम धर्म हो. शत्रुघ्न साथमा भये पछी तिमिलाई केही डर हुने छैन. चौध वर्ष पुगे पछी म अवश्य अयोध्या फरकन्यै छू, धन्दा नमान."

यती भनी रामचन्द्र चुप लागे पछी भरतले आँशु पूछ्दै भने "दाज्यैज्यू ! हजूरको अहिले सर्वथा अयोध्या तिर नफरकने आग्रह छ भने मलाई आफनू खराउ बक्सनू होस. म उनै खराउ राजगद्दीमा राख्दछू र हजूरकै प्रतिनिधि भयेर हजूरकै भेष धारण गरी राज्यको हेर विचार गरदछू. चौध वर्ष पछी सवारी फिरेन र एक-दिन मात्र नाघ्यो भने पनी सो नाघेका दिन अग्निमा जली प्राण-त्याग गरनेछू."

भरतको यो भक्ति-पूर्वकको भीषण-प्रतिज्ञा सुनी खुशी साथ रामचन्द्रले आफना खराउ उनलाई दियेर भननू भयो, " भाई ! शोक नगरी नीति-पूर्वक प्रजाको पालना गर. मुमाहरूलाई पनी आनन्द सँग राख. म चौध वर्ष पूरा भयेको दिन तिमी सँग अवश्य भेट गरूँला." भरतलाई यती भनी फेरी शत्रुघ्नलाई पनी भननू भयो, " बाबू ! तिमि बुद्धिमान् छौ. शोक सन्ताप छोडी मुमाहरूको टहल गरेर भरतका आज्ञामा बस, राज्यमा परी आयेका विघ्न बाधालाई हटाई प्रजाको पालनमा दाज्यूलाई सहायता देउ."

यस्ता प्रकारले प्रतिज्ञा गरी लक्ष्मण र सीताका साथ रामचन्द्र चित्रकूटमा बसनू भयो. भरत पनी रामचन्द्रका खराउ लिई बिदा भयेर मन्त्रीहरूका साथ अयोध्या तिर फरके. उनले सहरमा प्रवेश गरेनन. उनी अयोध्यादेखी बाहिरै तपस्वी भेषले नन्दिग्राममा बसी आफनू प्रतिज्ञानुसार श्रीरामको प्रतिनिधि भयेर राजकाज चलाउन लागे.

## अयोध्या-काण्ड
## सकियो



# अरण्य काण्ड ।



भरत फर्के पछी एक दिन श्रीरामचन्द्रले सीता र लक्ष्मण सँग भनन् भयो, "अब हामीहरू यही चित्रकूटमा नै वसी रह्यौं भने अयोध्यावासीहरू बारंबार हामीसंग भेट गरन आउनेछन, तेसो. भये पछी यहाँ वसेका एकान्तवासी मुनिहरूका भजनमा विघ्न परन जाला, तसर्थ अब हामीले कसैले नदेखने ठाउँमा वसनू परदछ." रामचन्द्रका यस कुरामा सीता र लक्ष्मणको पनी संमति भयो. तहाँबाट तीनै जना दण्डकारण्य तिर हिंडे.

जाँदा जाँदा अत्रिमुनिका आश्रममा पुगेर तीनै जनाले मुनिलाई भक्ति–पूर्वक प्रणाम गरे. मुनिले पनी तिनी हरूलाई फलमूलहरूले सत्कार गरे. सीताजीले पनी ऋषि-पत्नी अनसूया सँग भेट गरनू भयो. उनले सीताजीलाई धेरै आशिष दिई यसरी स्त्री-धर्मको उपदेश गरिन.

"सीताजी ! स्त्रीजातिलाई पतिबाट जस्तो सुख मिल्दछ तेस्तो सुख आमा, बाबु, दाज्यू, भाई र इष्ट मित्र कसैबाट पनी मिलन शकदैन. यस कारणले स्त्रीको मुख्य धर्म पति–सेवा नै छ. बुढो, लङ्गडो, अन्धो, बहिरो, रोगी. गरीब जस्तो सुकै होस ता पनी पतिलाई हेला गरनाले स्त्रीजातिको नरक–वास हुन्छ. पतिको आज्ञा विना तीर्थ, व्रत, नियम, उपवास, आदि गरनाले पनी केही धर्म

हुँदैन. जुन सुकै शुभ काम गर्दा पनी स्त्रीले पतिकै सौभाग्य र आयु बढोस भनी मनमा चिंताउनू परदछ. पतिको कल्याण भये मात्र स्त्रीको कल्याण हुन्छ. मन, वचन, शरीरले जसरी हुन्छ स्त्रीले पतिकै सेवामा रहनू उचित छ. जसका मनमा खाँदा, पिउँदा. हिंड्दा कुनै वेलामा पनी परपुरुषको सम्झना रहँदैन त्यो स्त्री उत्तम पतिव्रता हो. व्यभिचारिणी स्त्री शय कल्प सम्म घोर नरकमा परदछे, फेरी अर्का जन्ममा तरुणावस्थैमा विधवा हुन्छे. यस कारण, त्यो जस्ती अभागिनी अधम र मूर्ख कुनै गनिन्न."

अनसूयाका यस्ता उपदेश सुनी सीताजी अत्यन्त खुशी हुनू भयो. राम र लक्ष्मणले पनी मुनिका साथ अनेक वार्तालाप गरि एक दिन तहीं बिताये. भोली पल्ट मुनि सँग बिदा हुने वेलामा अनसूयाले सीताजीलाई अङ्गराग ( बुकुवा ) दियेर भनिन, "हे सीते ! यो अङ्गराग पहिरे पछी तिम्रा अङ्गमा सदा सुवासले वास गर्ने छ." अनसूयाको यो वचन सुनी सीताजीले पनी बडो भक्तिका साथ त्यो अङ्गराग लिनू भयो.

यस पछी राम, लक्ष्मण र सीताजी, ई तीनै जनाले तहाँबाट प्रस्थान गरे. केही पर पुगे पछी अकस्मात् एक घनघोर शब्द सुनियो र सीताजी डराउन लागनू भयो. सीताजीको त्यो घबराहट देखी यो केको शब्द रहेछ ? भनी रामचन्द्र र लक्ष्मण चारौं तर्फ दृष्टि फिराउन लागे. तेसै वेलामा अत्यन्त डर लागदो, अग्लो, मोटो, गहीरा आँखा भयेको, गुफा जस्तो मुख भयेको, बाघको छाला ओढेको, रगत र बोसाले मुछियेको, त्रिशूलमा तीन सिंह, चार बाघ,

दुई ख्वाँसा, र लामू दाँत सहितको हात्तीको टाउको उनेर लियेको, यस्तो एक विराध भन्ने राक्षस जङ्गलका जन्तुहरूलाई भगाउँदै सरासर गर्जँदै आयेर उनीहरू सँग भनन लाग्यो, " तिमीहरू दुई जना एक स्त्री साथमा लियेर यस जङ्गलमा किन आयौ ? यो स्त्री को हो ? तपस्वीको वेष गरेका तिमीहरू को होउ ? म ऋषि-हरूको मासु खाई यस वनमा फिरने विराध नामक राक्षस हूँ. आज दैव-संयोगले तिमीहरू मेरा आहारा हुन आँट्यौ. साह्रै भोक लागी रहेछ. अब धेरै बेर बाँचने छैनौ. आफना इष्टदेवको स्मरण गर." यती भनेर ती दुवै भाईलाई पक्रनाका निमित्त उसले हात पसाऱ्यो.

तेसले ती दुई भाईलाई पक्रन आँटेको देखदा सीताजी भन डरले थर थर काँपन लागनू भयो. त्यो देखी धृष्टता साथ अगाडी सरेर रामले सोधनू भयो. " तँ को होस ? कसको छोरो होस " ? रामचन्द्रको यो प्रश्न सुनी राक्षसले पनी खूब गर्जेर भन्यो, " मेरा बाबु ' जव ' र आमा शतह्रदा ' हुन. मैले तपस्या गरी ब्रह्माजी-बाट ' तेरा शरीरमा कुनै शस्त्रले चोट लागने छैन, अङ्गहरू काटि-येर पनी तैंले मरनू परने छैन ' भन्ने वरदान पायेको छू. तिमीहरूका धनुर्बाणले मलाई केही हूदैन. यदि बाँचनाको इच्छा छ भने यस स्त्रीलाईस छोडी भागेर जाऊ. होयिन भने तिमी दुईलाई खायेर यस स्त्रीलाई आफनी स्त्री बनाउँछू. "

तेस राक्षसका यस्ता कठोर र भयङ्कर वचन सुनी अत्यन्त रिसायेर रामचन्द्रले भननू भयो, " हे राक्षस ! हामी पनी इक्ष्वाकुवंशी क्षत्रि-यका छोरा होऊँ; तँ जस्ता दुष्ट राक्षसलाई मारी मुनिजनहरूको रक्षा

गरनाका निमित्त पिताजीका आज्ञाले यस वनमा आयेका छौं. तँ पनी आफना ज्यानको माया गरदछस भने भाग, नत्र हाम्रा हातबाट बाँची उंकने छैनस. " यती भनी रामले एक पटक तेसका उपर तीखा तीखा सात बाणको प्रहार गरनू भयो. ती बाणको चोट खाँदा व्याकुल भयेको त्यो राक्षस पनी हातमा त्रिशूल लियेर मुख बाउँदै राम र लक्ष्मण तिर आई लाग्यो. तेस बेला फेरी रामले असंख्य बाणको वृष्टि गरी तेसको मुख भरी दिनूभयो, तर ब्रह्माको बरदानका प्रभावले ती बाण लागे ता पनी उसलाई केही भयेन. जती बाण मुख भित्र पसेका थिये ती सबैलाई उसले श्वासका जोरले बाहिर निकालेर जमीनमा गिराई दियो.

यसरी रामचन्द्रका तीखा तीखा बाणका चोटले त्यो राक्षस अन रिसाई त्रिशूल उठाये र राम र लक्ष्मणका उपर प्रहार गरन लाग्यो. त्यो देखी फेरी रामले एक बाण हानी तेसको त्रिशूल काटी दिनूभयो. आफनू त्रिशूल कटिंदा अत्यन्त क्रोधले चूर भयेर एकदम तेस राक्षसले राम र लक्ष्मण दुवै भाईलाई जुरुक्क उचाली केहीबेर काखी च्यापेर फेरी काँधमा राखी अब इनलाई कता फ्याँकू भनदै दौडन थाल्यो.

तेसरी राक्षसले आफना पति र देवरलाई काँधमा राखी दौडन लागेको देखदा डरले व्याकुल भयेकी सीताजी पछी पछी दौडदै गयेर तेस राक्षस सँग भनन लागनू भयो, "हे राक्षसराज ! ई दुई भाईलाई छोर मलाई मात्र एकलै छोडी आफनू आहार अरू जनावरहरू लाई किन दिन्छौ ! म एकलै भये पछी अवश्य यहाँका

अनावरले मलाई नखाई छाड्ने छैनन, यस निमित्त मेरो बिन्ती छ; कि ता मलाई समेत लगी खाऊ, होयिन भने ई दुई भाईलाई पनी छोडी देऊ ".

यसरी सीताजीले आर्त्त स्वर गरी राक्षस सँग प्रार्थना गरेको सुनदा मोहि रीस उठ्यो र रामचन्द्रले लक्ष्मणलाई आँखाको इशारा गरनू भयो. त्यो इशारा हुना साथ दुवै भाईले राक्षसका एक एक काँधलाई बडो जोर सँग थिचे. तेही थिचाईले राक्षसका दुवै पाखुरा भाँचिये. राक्षस एक क्षण पनी अडन नशकेर जमीनमा गिर्‍यो. राम लक्ष्मण पनी तेसको त्यो उठन नशकने मौका पायेर तेसलाई पाँच सात पटक सम्म हुक्कामा उचालदै पछारदै गरन लागे. तेती गरदा पनी तेस राक्षसको प्राण गयेन. ब्रह्माजीको वरदानका प्रभावले यस लाई शस्त्र अस्त्र प्रहार गरेर मारन शकिदैन भन्ने विचार गरेर श्रीरामले पनी भाईलाई खाल्डो खनन लगाउनू भयो.

रामका आज्ञानुसार लक्ष्मणले एक खाल्डो खने, तेसै बेला दैव-संयोगले तेस राक्षसलाई पनी जातिस्मरण भयो र त्यो बडो नम्रता साथ रामचन्द्र सँग ई कुरा गरन लाग्यो, " महाराज ! म अघिल्ला जन्ममा तुम्बुरु भन्ने गन्धर्व थियें. केही अपराधमा रिसायेर कुवेरजीले मलाई 'तँ राक्षस भई गयेस' भनी शराप दिये. पछीबाट मैले धेरै प्रार्थना गरदा उनले भने कि तँ पछी दशरथका छोरा रामचन्द्रबाट राक्षस-योनिदेखी मुक्त हुने छस, सो कुरा आजै मिलन आयो. दशरथका पुत्र हजूरै हुनू हुँदो रहेछ. हजूरैका हातबाट मैले यस राक्षस-योनिदेखी मुक्त हनू परदछ. मलाई यस खलडामा गाडी दिनू होस.

अरू उपायले मेरो वध हुन शक्दैन. खाली यत्ती गरनाले नै मेरो प्राण जानेछ. फेरी हाम्रो संप्रदायमा पनी यो छ कि मरेका राक्षसलाई खाल्डामा पुरिदिनाले तेसको उत्तम–गति हुन्छ, यस निमित्त कृपा–पूर्वक राक्षस–योनिमा प्राप्त भयेका मेरो अन्तिम क्रिया समेत पूरा हुने उपाय गरी दिनू होस. तेती गरी हजूर यहाँबाट छ कोश पर शरभङ्ग भन्ने एक महात्मा ऋषिको आश्रम छ; तहीं पालनू होस. वहाँ हजूर-लाई सबै कुराको सुबिस्ता हुनेछ."

यती भनेर राक्षस–देहलाई छोडी 'बिराध' तुम्बुरु नामक गन्धर्व भयेर रामचन्द्रको स्तुति गर्दै आफना लोकमा गयो. तहाँ पछी तेस बिराधको शरीरलाई खाल्डामा गाडी उसले भने अनुसार राम, लक्ष्मण र सीताजी तेताबाट गई शरभङ्गका आश्रममा पुगनू भयो.

शरभङ्गजीले पनी आफना आश्रममा आयेका ई तीन जनालाई शक्के सम्म आसन, फल, मूल र जल आदिले सत्कार गरेर नम्रता साथ भने, " हे रघुनन्दन ! हजूरहरूको यस वनमा सवारी हुन्छ भन्ने कुरा तपोबलबाट मैले अघी नै थाहा पायेँ, दर्शन गरन पाउँला भन्ने आशाले मात्र यस ठाउँमा बसी रहेको हूँ. आज मेरो मनो-रथ पूरा भयो. कृपा–पूर्वक मलाई दर्शन दिनू भयो. अब म हजूरैका सामने यस देहलाई छोडी पर लोक जानाको इच्छा गरदछू. हजूर यहाँबाट सुतीक्ष्णजीका आश्रममा सवारी होस. वहाँ सबै कुराको सुबिस्ता हुनेछ." यती भनेर शरभङ्गले एक चिता बनाये. उसमा आफनू देह जलाई उनी श्रीरामले देखदा देखदैमा दिव्य देह धारण गरेर परम-पदमा प्राप्त भये.

यस्ता प्रकारले शरभङ्ग मुक्त भयेको सुनी धेरै ऋषिहरू रामचन्द्र सँग आयेर भनन लागे, "हे राजकुमार ! हजूर सारा संसारमा प्रसिद्ध शूर वीर, पराक्रमी, बलवान् इक्ष्वाकुवंशी क्षत्रिय हुनू हुन्छ. यस कारणले जस्तो पानीमा बगन लागेकालाई कोही चीजको सहारा पाउँदा आनन्द हुन्छ उस्तै हामीलाई हजूर पाउनाले आनन्द भई रहे छ. हजूरको यस वनमा सवारी नभयेको भये कती ऋषिहरू राक्षसका आहारा भई सक्ने थियौं; कतिका यज्ञमा कत्रा कत्रा विघ्न परद्थे, हजूरका प्रतापले सबै आज शान्त भई रहेको छ. तसर्थ हे राघव ! हामी सबै हजूरका शरणमा छौं. हजूरबाट हाम्रो पालना हुनू परदछ."

ऋषि हरूका यस्ता वचन सुनी रामचन्द्रले भनन् भयो, "ऋषीश्वर हो ! तपाईहरूले यस्तो मानून परदैन. म तपाईहरूकै सेवा गरन भनी यस वनमा आयेको हूं. पिताजीको आज्ञा पालन गरन मात्रता अरू कुनै वनमा गई चौध वर्ष बिताये पनी हुन्थ्यो, अतः तपाईहरू निर्भय रहनू होस. जो विघ्नबाधादि परी आउला हामी दुई भाईले. सो सब टारौंला, तपाईहरूलाई कसैले अलिकती पनी कष्ट दिन पाउने छैन."

यती भनेर ऋषिहरूलाई अभय दिई तहाँबाट लक्ष्मण र सीताजीका साथ श्रीरामचन्द्र सुतीक्ष्णका आश्रममा पुगनू भयो. वहाँ एक रात मात्र वसी भोली पल्ट सुतीक्ष्ण सँग बिदा भयेर तीनै जनाले अगस्त्यका आश्रम तिर प्रस्थान गरे. बाटामा रामचन्द्र सँग सीताजीले यसरी धेरै धर्मका कुरा सोधनू भयो:—

"प्राणनाथ! धर्मको गति सूक्ष्म छ. धर्म ठूलो सँग्ला गरेर मात्र पाइंदैन. झूटो बोल्नू परस्त्रीगमन र बिना वैर अर्कालाई मारनू ई तीन कुमारा, दुई कुरा ता हजूरमा कदापि देखियेका र देखिने पनी छैनन; तेस्रो कुरा (जीवहिंसा) जो हजूर बराबर गरनू हुन्छ, अब पनी गरने विचार राख्नू भयेको छ, अझ पनी ऋषिहरू सँग राक्षसहरूलाई मारी तपाईं हरूको सेवा गरूल्य भनी प्रतिज्ञा गर्दै हुनू हुन्छ. त्यो कुरा किन रहेको छ? तपस्वीको वेष गेरर पिताजीको आज्ञा पालन गरनलाई वनमा बसन आउने मानीसले जीव-हिंसा गरनू ता धर्म होयिन. फेरी तपस्वी भयेर वनमा बसन आउनेले यो धनुर्बाण लिने क्षत्रिय—धर्मको किन आश्रय गरनू पऱ्यो? अथवा आफूलाई दुःख दिन आउनेलाई हटाउनाका निमित्त लियेको हो भने पनी यहाँ म र लक्ष्मण बाहेक हजूरले रक्षा गरनू परने कोही छैन. तेत्तीका निमित्त ठूला ठूला सङ्ग्राममा चाहिने धनुर्बाणको भारी बोकनू पनी पर्दैन. यथाकथञ्चित् खाली हामी दुईको रक्षा गरी आफनू चौध वर्ष वनमा बसने व्रत मात्र पूरा गेर भई गयो. अनेक राक्षसहरूको प्राण लिनाले हजूरलाईके लाभ हुन्छ? यस वनमा हजूरलाई शस्त्र अस्त्रको के काम छ? जब अयोध्यामा गई राज्य गरनू होला अनी राजचिन्हका निमित्त शस्त्र अस्त्र लिनू होला. हजूरका पिताजीको पनी वनमा तपस्वीको वेष गरी रहनू भन्ने मात्र आज्ञा थियो. धनुर्बाण धारण गरने क्षत्रियको वेष लिनू भन्ने आज्ञा ता थियेन. जुन धर्ममा पिताजीको आज्ञा छ उसै धर्ममा रहनू नै बढिया हुनू परने हो. किन भने आफना धर्ममा रहनाले नै सुख र यशको वृद्धि हुन्छ. यस निमित्त

हरूले आफनू धर्म छोडी जीव-हिंसाका तरफ ढल्कनू ठीक पर्दैन कि भन्ने मेरा मनमा लागदछ."

सीताजीका यस्ता गम्भीर वचन सुनी श्रीरामले भनन्‌ भयो, "साध्वि! क्षत्रियहरूले धनुर्बाण लिनाको मुख्य कारण यो छ कि कसैले मलिन मुख गरी आफना कानमा दीनवचन सुनाउन न पाओस, अर्थात् आफू खडा छँदै दुःख मनेको कसैले पनी नपाओस. हेर यस वनमा एक मात्र होयिन कि हजारन ऋषिहरू राक्षस-बाट दुःखित भई म सँग शरण परन आउँदछन; कती ऋषिहरू-लाई राक्षस हरूले खाई सकेका रहेछन. तिमीले ऋषिहरूका हाडको पर्वत जत्रो थुप्रो पनी देखी हाल्यौ. तेस्ता दुःखित ऋषिहरूको हामी क्षत्रियले रक्षा नगरे कसले गरछ! यसरी ऋषिहरूको संहार हुन लाग्यो भने यस संसारमा धर्मोपदेश गरी ब्रह्मकर्म द्वारा जगत्को पालन फेरी कसले गरला! सारा संसार अधर्मग्रस्त भई चाँडै नष्ट हुनेछ. यसै कारणले तेस्ता पूज्यचरित्र ऋषिहरू सँग मैले यो प्रतिज्ञा गरेको हूँ. चाहे तिमीलाई छोडनू परोस, चाहे लक्ष्मणलाई छोडनू परोस, जहाँ सम्म मेरा शरीरमा प्राण रहन्छ तहाँ सम्म यस प्रतिज्ञा लाई म सर्वथा छोडदीन. तिमीले अघी भनेका कुरा ठीक हुन. ती कुराबाट मलाई खुशी लाग्यो, तर अकिञ्चन वैदिक कर्मद्वारा नै यस संसारमा धर्ममार्गलाई स्थिर राखी तपस्या नै धन गरी रहेका ई ऋषिहरूको यो दुर्दशा देखदा देखदै हामी क्षत्रियले चुप लागी रहनू बडो अधर्म हुन्छ. यस निमित्त मैले त्यो प्रतिज्ञा नगरी भयेन, नत्र मलाई सारा संसारले के भनला!"

यस्ता कुराले सीताजीका प्रश्नको उत्तर दिंदै सुतीक्ष्णले बताएका बाटाले राम लक्ष्मण र सीता, ई तीनै जना अगस्त्यमुनिका आश्रममा पुगे. वहाँ एक रात विश्राम गरी भोली पल्ट अगस्त्यमुनि सँग श्रीरामले भनन् भयो, "मुनीश्वर! हामीलाई वसने कोही असल ठाउँ बताइ दिनुहोस" रामचन्द्रका यस्ता वचन सुनी उनीले पनी पञ्चवटीमा नै सब तरहको सुविस्ता छ, उहीं वेश होला भन्ने सल्लाह दिये. मुनिको सल्लाह अनुसार उनी सँग बिदा भई राम, लक्ष्मण र सीताले पनी पञ्चवटी तिरै प्रस्थान गरे. बीचमा दशरथका मित्र जटायुनामक गृद्धराज सँग रामचन्द्रको संवाद भयो. उताबाट केही वेर हिंडे पछी रमणीय पञ्चवटी नामक स्थान देखियो. वहाँ पुगेर एक मनोहर कुटी बनाई तीनै जना आनन्दपूर्वक रहन लागे.

जुन दिनदेखी रामचन्द्र, सीता र लक्ष्मणले पञ्चवटीमा आश्रम बनाई वसेथे, उस दिनदेखी तेस ठाउँका सम्पूर्ण ऋषि मुनिहरू पनी अभय साथ रहन लागे; नदीहरूमा पनी ऋषिहरूका हरसमयका आवागमनले अपूर्व शोभा बढ्दै गयो; मृगादि पशु र पक्षीहरू पनी आनन्दका साथ जीविका चलाउन लागे. तेसै ठाउँमा वसी रामचन्द्रले लक्ष्मणलाई अनेक धर्मको उपदेश गरनू भयो.

यस्तै प्रकारले केहि काल बित्यो. एक दिन राम, लक्ष्मण र सीता, ई तीनै जना गोदावरीमा स्नान गरी आयेर वसेका थिये; तेसै वेलामा थौटी राक्षसी घुमदै घुमदै वहाँ आई पुगी. श्रीरामचन्द्रको मोहिनी मूर्ति देखँदा तेसका मनमा ठूलो आसक्ति पैदा भयो. यसैले त्यो उत्क-

प्ठता साथ भनन लागी, “ यो मुनिको वेशमा धनुर्बाण लियेर राक्षसका राज्यमा आयेका तिमीहरू को होउ ? यहाँ आउनाको कारण के हो ? ” तेस राक्षसीका यस्ता वचन सुनी श्रीरामचन्द्रले केही हाँसेर भनन् भयो, “ हामी महापराक्रमी महाराज दशरथका छोरा होउँ. मेरो नाउँ रामचन्द्र हो, इनी मेरा भाइ लक्ष्मण हुन, ई मेरी धर्म—पत्नी सीता हुन. हामी पिताजीका आज्ञाले यस वनमा आई वसेका छौं. तिमी कसकी छोरी होउ ? तिम्रो पति को हो ? यस जङ्गलमा कहाँबाट एक्लै आयौ ? अनुहार देखँदा राक्षसी जस्ती छौ. को होउ ? यथार्थ बताऊ. ”

रामचन्द्रले यसरी आफूलाई सोधेको सुनी फेरी तेस राक्षसीले भनी, “ म रावणकी बहिनी कुम्भकर्णकी र बिभीषणकी दिदी राक्षसी नै हूँ. मेरो नाम शूर्पणखा हो. जुन बेला जस्तो स्वरूप बनाउँ भने पनी बनाउन शक्ने अद्भुत शक्ति म सँग छ. म कसै सँग पनी डराउँदीन. यसै कारण ले यस वनमा निर्भक सँग फिरेकी छू. यहाँ मेरा खर र दूषण भन्ने अरू दुई भाई पनी छन. उनीहरू हजारन सैन्यका साथ आफना बल र पराक्रमले देवताहरू सँग पनी स्पर्धा राखद छन. म पनी कुनै भाई भन्दा कमजोर छैन. स्त्री हूँ ता पनी बडी पराक्रमी छू. मलाई कसैको रोकावट पनी छैन. मैले जे गरे पनी हुन्छ. कसैले रोकन शक्दैन. यस कारणले आज तपाईको सुन्दर स्वरूप देखी तपाईमा आसक्त भयेर मलाई पत्नी बनाउनू होस भनी प्रार्थना गरन आयेकी हूँ. यस कुरामा तपाई अवश्य नाई भनन् हुने छैन. तिमी सँग लागे पछी मेरी सीताको के गति होला ! भाईले के भनलान ? भन्ने पनी

ठानन् परदैन. किन भने, इनीहरू मनुष्य हुनाले मेरा आहारा हुन. यस उसले ई दुई जनालाई म खाई दिन्छु. अनी खाली तपाईं र म दुई जना मात्रै यस रमणीय वन, जङ्गल, पाहाड र पर्वत हरूमा विहार गरौंला."

यस्ता प्रकार सँग शूर्पणखाले आफनू आशय प्रकट गरेको सुनी रामचन्द्रले हाँसी ठट्टा गरेर भनन् भयो, " मेरो विवाह भई सकेको छ. मेरी पत्नी इनै हुन भनी अघी नै देखाई सकें. अब म अर्को विवाह गरदीन. यस निमित्त तिमी मेरा भाई लक्ष्मण सँग जाऊ. उनी शूर, वीर र सुन्दर पनी छन, यहाँ उनकी पत्नी पनी छैनन. तिमी उनै सँग विवाह गरेर उनकी पत्नी भई बस. "

रामचन्द्रका वचनमा विश्वास गरी त्यो राक्षसी लक्ष्मणका समीपमा गयेर बोल्न थाली, " हे सौम्य ! तपाईंको र मेरो विवाह हुनू योग्य छ. जस्तो तपाईंसुन्दर हुनू हुन्छ: उस्तै म पनी सुन्दरी छू. औंसर न चूकनू होस. भाग्यले मात्र यस्तो संयोग आई परछ. " तेस राक्षसीका यस्ता वचन सुनी लक्ष्मणले पनी हाँसी हाँसी यही जवाब दिये, " मृगनयनी ! म दाज्यैज्यूको दास हूँ. मेरी पत्नी भये पछी तिमी पनी दासी होउली. दासी भये पछी अर्काका अधीनमा रहनू परदछ, कहिल्यै सुख पाईदैन. यस कारणले दाज्यै ज्यूलाई नछोड. हेर तिम्रो र मेरो वर्ण पनी मिल्दैन. तिमी काली छौ, म गोरो छू. वरू रङ्गले ता भाउज्यू नै हुन सुहाउँछयौ. तिम्रा अगाडी हाम्री पुरानी भाउज्यू कुनै न राम्री हुनू हुन्छ. यस निमित्त तिमीलाई पाये पछी दाज्यैज्यूले पनी छोडनू हुने छैन; वहीं सँग जाऊ. "

यस्ता प्रकार सँग लक्ष्मणले लर्काई दियेकी त्यो शूर्पणखा राम सँग गई. उताबाट पनी स्वीकृत नहुँदा फेरी लक्ष्मणकहाँ आयी. यस्तै तरहले तीन चार पटक ओहोर दोहोर गरनू परदा त्यो दुष्ट राक्षसी साह्रै रिसायेर सीताजीलाई निलन भनी आई लागी. बिचरी सीताजी पनी डरले थरथर कांपन लागनू भयो. त्यो देखी रामचन्द्रले लक्ष्मण सँग भनन् भयो, " भाई ! मूर्ख सँग ठट्टा गरनाले सिवाय हानि देखी लाभ छैन. यस सँगका ठट्टाले बिगार गरन आँठ्यो. अब चाँडै यसलाई नाक र कान काटी निकाली देऊ. " दाज्यूका यस आज्ञालाई शिरोपर गरी लक्ष्मणले पनी तेसका नाक र कान काटी गल्हत्ती लग्गायेर निकाली दिये.

तहाँ पछी नकटी र कनकटी त्यो शूर्पणखा रगतका धारा बगाउँदै, ती दुई भाईलाई गाली गर्दै, धमकी दिदै, आफना भाई खर र दूषण भयेका ठाउँमा गयी. वहाँ पुगेर उनीहरूसँग वनमा राम-लक्ष्मण द्वारा आफनू दुर्गति भयेको सबै हाल बताउँदै रून लागी. खर दूषणहरू पनी आफनी दिदीलाई तेस्तो दुर्दशा गरेको देखेर साह्रै रिसाई गर्जेर भनन थाले, " कालले कृतकृत्यायेको यस्तो अनर्थ गरने कुन दुष्ट हो ! के उसले हामीलाई चिनेको रहेन छ ! सुतेका सिंहका जगरमा समाउने तेसको गति कस्तो हुँदो रहे छ ! थाहा पाउला. दिदी ! तपाई भन्दा न माननू होस. हामी तेस शत्रुको सर्व—नाश गरदछौं. "

भाईहरूको यस्तो गर्जना सुनी शूर्पणखाका मनमा धेरै आज्ञाको सञ्चार भयो. उसै बेला त्यो रामचन्द्र बसेका ठाउँ तिरको बाटो

देखाउन लागी. खर र दूषण पनी अनेक सैन्यका साथ रामचन्द्रका आश्रममा लडन भनी आये.

यता चौध हजार राक्षसको फौज लिई आयेका ती खर र दूषणहरूलाई देखी रामचन्द्रले भाई सँग भनन् भयो, "लक्ष्मण! हेर यो राक्षसको फौज शूर्पणखाको सहाय गरन आयो. म यसको संहार गरदछु. तिमि सीतालाई लियेर एक गुफामा बस." यती लक्ष्मणलाई अह्राई रामचन्द्र आफना शस्त्र अस्त्र लियेर राक्षसका फौज तिर हिंडनू भयो.

उता राक्षसका फौजले पनी शस्त्र अस्त्रले सज्जित भई आयेका रामचन्द्रका उपर बाणको वृष्टि गरन लागे. रामले पनी आफना उपर आयेका शत्रुका बाणको वृष्टिलाई शमन गराउँदै उनीहरूका उपर धेरै बाणको वर्षा गरनू भयो. तेसरी गरेका बाणका वर्षाले केही बेरमा सारा त्यो राक्षसको फौज ध्वस्त भयो. एक जना मानीसले तेसरी आफना धेरै सैन्यलाई मारेको देखँदा रीसले थरथर कांपन लागेका खर र दूषणले पनी रामका उपर खूब तीखा तीखा कठोर शस्त्रको वृष्टि गरन लागे. यस्ता प्रकारले लडाई गरदा आखीरमा रामचन्द्रका अमोघ बाणले खर र दूषण समेत साह्रा फौजको नाश भयो.

यसरी एकला रामचन्द्रले वनमा चौध हजार राक्षसको संहार गरेको देखी सम्पूर्ण मुनिहरूले श्रीरामचन्द्रको अनेक प्रकार सँग प्रशंसा गरन थाले.

तहाँ पछी शूर्पणखा पनी आफनू सहाय गरन गयेका भाई र अरू सैन्य समेत सारा नष्ट भयेको देखी डरले व्याकुल हुँदै लङ्कामा रावणका सभामा पुगी. वहाँ आफना भाई र भारदारहरूका साथ अनेक कुरा कहानी गर्दै बडो सुख सँग सिंहासनमा बसेका रावणलाई देखेर आफनू टुटो नाक र बुचो कान देखाउँदै शूर्पणखा भनन लागी, "दाज्यैज्यू ! यो बडो शरमको कुरा हो. नजर होस, आज हजूर जस्ता पराक्रमी वीर पुरुषकी बहिनीको यो दुर्दशा भई रहे छ. आफनू राज्यमा एक जना मानीस ले आफनी बहिनीको यस्तो दुर्दशा गरेको र आफना फौज समेत ध्वस्त पारेको हजूरलाई केही थाहै छैन. खाली आफना ऐशमा डुबी रहनू भयेको छ. हजूर जस्ता बेपरवाही राजाबाट के राजकाज चलला ! यस्तै हो भने हजूरको नाश हुनालाई धेरै काल लाग्ने छैन. जनस्थानमा रहने हजूरका खर र दूषण दुई भाई र उनका साथमा रहने सारा फौज समेत एक मनुष्यले आफनू पुरुषार्थ देखाई ध्वस्त पारी सक्यो. यस संसारमा अब खर र दूषण भाई छैनन. मेरो पनी यो दुर्दशा भयो. त्यो पराक्रमी राजा दशरथको छोरो राम, भाई लक्ष्मण र सीता नामक पत्नीलाई साथमा लिई पञ्चवटीमा आई बसेको छ. उसकी पत्नी सीता मज्जे अत्यन्त सुन्दरी रहीछ. अहिले हजूरका अन्तःपुरमा पनी त्यो जस्ती राम्री स्त्री कुनै छैन. यसै कारणले हजूरका निमित्त तेसलाई हरण गरूँ भनदा मेरो यो पराभव भयो. अब हजूरलाई यदि आफनू अन्तःपुर शिंगारी संसारसुखको भोग गरने इच्छा र शत्रु सँग बदला लिने उत्साह छ भने तेस स्त्रीरत्नलाई हरेर ल्याउनू होस.

राम र लक्ष्मणलाई पनी मारनू होस. तेती भये हजूरलाई पनी सुन्दरी स्त्री पाउँदा आनन्द र मलाई पनी आफनू वैरी मर्‍यो भन्ने सुनन पाउँदा सन्तोष हुनेछ. यस कुरामा चाँडै सन्नद्ध हुनू योग्य छ. ढीलो गरने समय छैन."

शूर्पणखाले भनेका ई कुरा सुनेर स्त्रीलम्पट रावण सुन्दरी स्त्रीको हाल पाउँदा अत्यन्त खुशी भयो. तर आफना वीर भाइ खर र दूषण मरे भन्ने कुराले उसलाई साह्रै रीस उठ्यो. यसैले उत्तिखेरै रथमा चढेर रावण आफनू पुरानू मन्त्री मारीचका आश्रममा पुग्यो. तस बेला मारीच पनी जटा वल्कलादि धारण गरेर बडो ध्यानी भई बसेको थियो, उसले रावणलाई देखना साथ आसनबाट उठेर बडो सत्कार गर्‍यो. रावण पनी आसनमा बसेर बडो गम्भीरताका साथ भनन लाग्यो, "मन्त्रिवर मारीच ! मेरा जुनसुकै काममा पनी तिम्रै मन्त्रणा अग्रसर हुँदै आयेको छ. यथार्थमा राक्षस कुलको उन्नति पनी तिम्रो बुद्धि र मेरा बाहुबलको मेलबाट नै भयेको हो. मैले अझ सम्म तिम्रो अनुमति विना कुनै काम गरेको र अब उप्रान्त गरने पनी छैन. आज मेरो साह्रै तिरस्कार भये छ. यसैले तिम्रो सहाय लिन आयेको छू." रावणको यस्तो दीन वचन सुनी मारीचले भन्यो "महाराज ! सबाट हजूरको कल्याण हुन्छ र कष्ट पनी कुन्दछ भने ज्यान दिनामा पनी म तैयार छू, आज्ञा होस."

मारीचको यो निवेदन सुनी फेरी रावणले भन्यो, "हे राक्षस—श्रेष्ठ मारीच ! मैले जनस्थानमा जुन खर र दूषण दुई भाईलाई चौध हजार सैन्यका साथ राखेको थिये, उनी हरूलाई राम भन्ने दशरथ-

का छोराले मारी दियेछ. तैसैले बहिनी शूर्पणखालाई पनी विरूप गरायेर छोडी दियेछ. तेस रामचन्द्रका साथ अत्यन्त सुन्दरी, र सुहाउँदी एक स्त्रीरत्न पनी छ रे. ई सबै कुरा बहिनीले मलाई भनिन. अब तेस स्त्रीलाई हरण गरी रामलाई विरह–सङ्कटमा पारूँ भन्ने मेरो मुख्य अभिप्राय छ. तेस रामलाई एक बाण छोडेर अहि-ल्यै मारे पनी हुने हो, तर तेसले ठूलो अपराध गरेको छ. तेस्ता अपराधीलाई एकदम मारनू तेसका उपर निगाह गरनू जस्तो हुन्छ. यस कारण तेसकी पत्नीलाई हरेर ल्याये पछी तेसका विरहले त्यो आफैं शुकी शुकी मरनेछ. यही तेसका निमित्तको उपयुक्त दण्ड हो. यती भये पछी बहिनीको मन पनी रहन्छ, मलाई पनी सब सुख–साधन हात लागछ. यसै कुरामा तिम्रो सहाय लिन आयेको हूँ. पहिले तिमी सुवर्णमय मृगको रूप धारण गरी रामका आश्रममा गयेर ती दुई भाईलाई अलमल्याई देऊ. तेसै अवसर-मा म त्यो स्त्री रत्नलाई हरण गरी ल्याउँछू. यस कुरामा तिमी सहमत भयेनौ भने मेरो कृपा–दृष्टि तिम्रा उपर कहिल्यै परने छैन."

रावणका यस्ता दुर्विचारयुक्त कुरा सुनना का साथ मारीचको मुख सुक्दै गयो. उसको शरीर काँपन थाल्यो. अघी विश्वामित्रका यज्ञमा रामचन्द्रका हातबाट खायेको चोट तेसले अझ बिर्सेको थियेन. यसैले साह्रै भीत भयेर तेसले रावणलाई भन्यो, "महाराज ! यो सल्लाह हजूरलाई कसले दियो ? त्यो हजूरको वैभव र सारा राक्षसकुलको शत्रु हो. के हजूरलाई रामचन्द्रको पराक्रम थाहा छैन ? म ता राम चन्द्रको नाउँ सुनदैमा डरले काँपन थालद छू. अघी नै एक पटक

उनका हातको चोट खाई सकेको छू. यस्तो पराक्रमी छ भने जानदा जानदै फेरी म रामचन्द्र सँग जोरी खोजन कसरी जाऊँ ? यो परस्त्री हरने काममा मबाट सहायता हुन शक्दैन. यदि हजूरलाई आफना हितको इच्छा छ भने सीताजीलाई हरने कुराको नाम पनी न लिनूहोस. हजूर रामचन्द्रका अगाडी खडा रहन पनी शकनू हुने छैन; सीता हरनाको ता के कुरा ! महाराज ! यस विषयमा जिद्दी नगर नू होस, यसबाट हजूरको अवश्य कल्याण हुने छैन. "

यसरी मारीचले रावणलाई अनेक तरहबाट सम्झायो, तर नाश हुने बेला नगीचै आई पुगेको हुनाले दुर्बुद्धि रावणलाई सो उपदेश किन मन परदथ्यो ? उल्टो झन रिसायेर भनन थाल्यो, " मारीच ! तिमिले आज सम्म जसको निमक खायेका छौ उसको सामी चिताउनू परदछ. तिमी रामका डरले यस काममा सहमत हुँदैनौ भने के मेरा हाथबाट तिमी बाँचौला ? यथार्थमा सेवकले स्वामीका आज्ञानुसार चल्नै परछ. सबैले यसैलाई प्रधान धर्म मानेका पनी छन. "

रिसायेका रावणको यस्तो कुरा सुनी मारीचले नम्रताका साथ भन्यो, " महाराज ! सेवकको पनी यही धर्म हो कि आफनू मालिकको खराबी हुने कुरा देखको छ भने सो कुरा तुरन्त मालिकमा जाहेर गरनू. यसैले एक पटक फेरी विनति गरद छू हजूरको यो दुराग्रह भयंकर छ. यसबाट सारा राक्षसकुलको ऐश्वर्य र सुखको कालानल प्रकट हुनेछ. अझ विचार गरी बक्सियोस मैले ता हितको कुरा बिन्ती चढायेको हूँ, यदि यस कुरामा हजूरको आग्रहै छ भने जान्छू. अहिले हजूरको कुरा नमानौं भने

हजूरको क्रोधानल बली रहेको छ, तेसले भस्म गर्ने छ. जाऊँ भने, उता रामचन्द्रको अमोघ बाण छ. मृत्यु बाहेक अब मेरो अरू केही शरणै छैन भने त्यो मृत्यु रामैका हातबाट होस. म जान तयार भयें."

मारीचको जाने कुरा सुन्ने साथ राक्षसराज रावण अत्यन्त खुशी भयो. उसले मारीचलाई आफ्ना रथमा राखेर पञ्चवटी तिर प्रस्थान गऱ्यो.

दण्डकारण्यको शोभा हेर्दै रामाश्रमका समीपमा पुगेर उसले मारीचलाई भन्यो, "मारीच! परम–सुन्दरी सीताद्वारा अलङ्कृत रमणीय रामाश्रम यही रहेछ. हेर यसका चारै तर्फ हरीया हरीया केराका थारी जमी रहेका छन; चरा चुरुङ्गीका मधुर शब्द ले सारा आश्रम गुंजायमान भई रहेको छ. यसैमा मृगनयनी सीताजी पनी अवश्य होलीन. अब तिमी चांडै गयेर उनलाई मृगलीलाले मोह गराऊ, म नगीचैमा लुकी रहने छु.

यो आज्ञा पाउना साथ मारीच विचित्र रत्नजडित सुवर्णमृगको रूप धारण गरेर सीताजीका अघिल्तिर आश्रमका नगीचमा खेलन लाग्यो. उसको लीलामयी मूर्ति देखँदा सीताजीलाई पनी बडो राम्रो र आश्चर्य लाग्यो. वहाँले यसलाई क्रीडामृग बनाउन पाये हुँदोहो भन्ने अभिप्राय ले रामसंग भनन् भयो, "नाथ! यो मृग अतिसुन्दर रहेछ. यसलाई देखँदा मलाई बडो रहर लाग्यो. यसलाई पक्रेर आफनू आश्रममा पालूँ भन्ने मेरो आन्तरिक इच्छा छ."

सीताजीको यो प्रार्थना सुनी रामचन्द्र ले सो मृग पक्री ल्याउने कुरा स्वीकार गरेर लक्ष्मणलाई भनन् भयो, "भाई! म सीताजीको

खुशीका निमित्त यस आश्चर्यकारी मृगलाई पक्रन जान्छु. तिमीले सावधान भयेर भाउज्यूको हेर विचार गरनू. ”

लक्ष्मणलाई यती: अह्रायेर श्रीराम मृगका पछी लागनू भयो. मृग-रूप मारीच पनी कहिले नजीकै र कहिले अलिक टाढा, कहीं गुप्त, कहीं प्रकट हुँदै रामलाई च्छकायेर धेरै नै पर गयो. तैसैका पछी जाँदा जाँदा रामचन्द्र पनी टाढै पुगनू भयो. तैसै वेलामा यो राक्षस रहेछ भन्ने जानेर श्रीरामले उसका उपर ब्रह्मास्त्रको प्रहार गरनू भयो. त्यो अस्त्र छातीमा घसिनाका साथ उसले मृगको रूपछोडी आफनू राक्षस रूप धारण गरेर रामको जस्तो उच्चा स्वरले “ हा लक्ष्मण ! मता मरें ” भनदै पछारी येर प्राण त्याग गऱ्यो. तर तैसले यस पाञ्चभौतिक अनित्य शरीर लाई छाडी दियो ता पनी स्वामिभक्तिलाई छोडेन. रामचन्द्र पनी तैस राक्षसले अन्त्य समयमा उच्च स्वरले करायेको छली अवाज सुनदा सीता र लक्ष्मण डरायें होलान भन्ने ठानी तेता बाट चाँडै आश्रम तिर फरकनू भयो. मारीच पनी रामचन्द्रका हातबाट मरेर मुक्त भयो.

उता रामका जस्तो आर्तस्वर सुनेर भयले व्याकुल भयेकी सीता-जीले लक्ष्मणलाई भननू भयो, “ बाबू ! तपाईंका दाज्यू मायावी राक्षसका जालमा परनू भयेछ कि भन्ने शङ्का लाग्यो. चाँडै जानूहोस अहिले दाज्यूलाई ठूलो सङ्कट परेको बुझदछू. दाज्यूको प्राण बचाउनू होस. तपाईं बाहेक यहाँ वहाँको रक्षा गरने अर्को कोही छैन. ”

भाउज्यूका वचन सुनी धैर्य–धारी लक्ष्मणले भने, “ भाउज्यू ! हाम्रा दाज्यूलाई तेस्तो पीडा गराउने कुनै पुरुष पनी त्रैलोक्यमा

भन्नेको छैन. वहाँका मुखबाट यस्तो आर्तस्वर कहिल्यै निस्कने छैन. के हजूरलाई दाज्यैज्यूको पराक्रम थाहा छैन र ? यो पक्का मायावी राक्षसको छल हो. यसबाट डराउने काम केही छैन. व्यर्थ यो शङ्का न गरनू होस. दाज्यैज्यू अहिल्यै फर्केर पालनू हुन्छ. हजूरलाई एकलै यस जङ्गलमा छोडी जानू भन्ने दाज्यैज्यूको आज्ञा पनी छैन. यस उसले म हजूरलाई यहाँ एकलै छोडी जान शक्दीन. कदाचित् म नभयेका वेलामा यस एकान्त आश्रममा कोही हिंसक जन्तु अथवा कोही मायावी राक्षसहरू आयेर हजूरका उपर उपद्रव गरन लागे भने उस वेला हजूरको के गति होला ? ”

लक्ष्मणका ई कुरा सुनी सीताजीले फेरी भननू भयो, “हे लक्ष्मण ! भाइ भयेर पनी यस विपत्कालमा दाज्यूको सहाय गरनू भयेन भने तपाईंलाई कसले भाइ भनला ? वास्तवमा तपाईंको दाज्यूका उपर स्नेह रहेन छ. तपाईंका मनमा अवश्य पापवासना उठी रहेको छ. यसैले तपाईं वहाँको विपत् चाहनू हुन्छ. तर तपाईं यो कुरा निश्चय बूझनू होस कि राम विना सीता एक छिन पनी जीवित रहने छैन. ”

यसरी अफू माथी शङ्कित भयेकी सीताका मुखचन्द्रबाट निस्केको कलङ्क स्वरूप दुर्वाच्य, लक्ष्मणका हृदयमा वज्र झैं लाग्यो. उनी डरले थरथर काँपदै बोलन थाले, “ भाउज्यू ! हजूर मेरी आमा बराबर हुनू हुन्छ. हजूरका यस दुर्वाक्यको उत्तर मेरा मुखबाट निस्कन शक्दैन. हजूरको यस स्त्रीस्वभावलाई धिक्कार छ. सांसारिक झगडाको मुख्य कारण नै स्त्रीजातिको अविवेकी स्वभाव हो. आश्रम छोडेर

जानू भन्ने दाज्यूको आज्ञा छैन ता पनी तपाईका दुर्वाक्यले घोचिंदा मैले लाचार हुनू पऱ्यो. हजूरको कल्याण होस. हजूरलाई वनदेवीले रक्षा गरून–म हिंडें." यती भनी लक्ष्मण उसै बेला दाज्यूका खोजमा हिंडे.

बाटामा अनेक अपशकुन देखनाले लक्ष्मण सार्है खिन्न भये. तेस बेला उनी मन मनै भनदये कि "हे ईश्वर ! उताबाट दाज्यैज्यू र म फरकेर आउँदा भाउज्यूलाई जस्ताकी तस्ती देखन पाऊँ. उनीमाथी कुनै आपत्ति न परोस" यस्तै विचार मनमा लियेर जाँदा जाँदा लक्ष्मणजी सीताजीका नजरले नदेखिने भये.

लक्ष्मण निस्केको केही बेर पछी दण्डकमण्डलू लियेको भिक्षु-बेषधारी रावण माँघेको भिक्षु जस्तो भयेर रामाश्रममा गयो. वहाँ उसले एकलै बसेकी सीताजीलाई देखेर सोधन लाग्यो, "कल्याणि ! तिमी को होउ ? कसकी स्त्री होउ ? यहाँ किन आयौ ? एकलै कसरी बसेकी छौ ? तिम्रो यो अवस्था देखँदा मेरा मनमा ठूलो आश्चर्य लागद छ."

यसरी रावणले माया गरे जैं गरी सोधदा बिचरी सरलाशया सीताजीले पनी तेस दुष्टलाई माँखिके योगी ठानेर फल फूल हरूले सत्कार गरेर आफनू सब हाल बताउनू भयो. सीताजीको वृतान्त सुनी सके पछी वहाँलाई हरन तत्पर भयेका रावणले पनी आफनू दुराशय प्रकट गरन थाल्यो, "सुन्दरी ! म ऐश्वर्यशाली राक्षसराज रावण हूँ. तीनै लोक मेरा वशमा छन. समुद्रमध्यवर्ती द्वीप सुवर्णमय लङ्का नगरी मेरो राजधानी हो. तिमीलाई लिन भनी यहाँ आयेको हूँ. म सँग हिंड,

# अनुक्रमणिका

## कालानुक्रमाप्रमाणें रचलेली इसवी सनाच्या सालांसहित.

टीप—ह्या अनुक्रमणिकेंत पृष्ठांक न देतां पृष्ठांच्या डोकीवर घातलेलीं सालें दिलेलीं आहेत, म्हणून तीवरून ग्रंथांतील काांही मजकूर पाहावयाचा असेल तर तो प्रत्येक पृष्ठाच्या डोकीवरील सालाच्या साहाय्यानें पाहावा.

---

## भाग १.

## कदीम ब्रिटन आणि पुराणें इंग्लंड

### प्रकरण १.

#### कदीम ब्रिटन

## प्रकरण २.

### इंग्लिश लोक कसे उद्भवले.



## प्रकरण ३.

### इंग्लिश आणि डेन्स यांच्या दरम्यानचा झगडा

# नॉर्मन्सांच्या विजयापासून इंग्लंडाचे राजे व राण्या

(ज्यास्ती तपशिलाकरितां प्रत्येक भागाच्या आरंभीं असलेली वंशावळ पहा)



# वंशावलि.[1]



## नकाशे.



१. ह्या वंशावळींत प्रत्येक राजाच्या सर्व मुलांचीं नांवें मांडलेलीं नाहींत. फक्त ज्या मुलांचा गादीवर बसण्याचा हक्कसंबंध होता त्यांचींच नांवें मांडलीं आहेत.

# ग्रंथकर्त्रीची प्रस्तावना.

ह्या लहान ग्रंथांत मला जागा थोडी मिळाली, तेवढींत इंग्लंडाचा उदय, आणि विकास किंवा विस्तार, ह्यांचा सुसंबद्ध इतिहास तरुण वाचकांपुढें मांडण्याविषयीं मीं यत्न केला आहे. ह्या इतिहासांत विद्यार्थ्यांना ज्यांची जरुरी लागणार अशा मुख्य घडलेल्या ऐतिहासिक गोष्टी तर कथन करवतील तितक्या कथन केल्या आहेत. शिवाय, आमच्या पूर्वजांची संसारयात्रा, अडचणी, आणि महत्कृत्यें किंवा पराक्रम, ह्यांचा टळटळीत चित्रपट रेखाटून दाखविण्याची मुख्यत्वें करून मीं काळजी ठेवली आहे. त्या चित्रपटावरून, आमचे कायदे, आमच्या राज्यव्यवस्थेचें स्वरूप, आमचा व्यापार, आणि आमच्या वसविलेल्या राज्यशाखा, ह्यांचा उद्भव कसा झाला हें स्पष्ट दिसून येईल. ह्या संक्षिप्त इतिहासानें जर ह्याहून विशेष व्यापक अशा इतिहासांच्या अभ्यासाला मार्ग खुला होईल, आणि जर आतां जे अल्पवयस्क लोक वयानें वाढत जाऊन एका विस्तीर्ण साम्राज्यांतील नगरवासीजन बनत आहेत, त्यांना आमच्या राष्ट्रांतील लोकांच्या भूत, वर्तमान, आणि भावी, स्थितीविषयीं कळकळ उत्पन्न होईल, तर, ह्या संक्षिप्त इतिहासाचें सार्थक्य होईल.

शाळांतील शिक्षणांत, घडलेल्या ऐतिहासिक गोष्टी, आणि त्यांचे काल, विद्यार्थ्यांच्या स्मरणांत बद्धमूल झाले पाहिजेत ही गोष्ट आवश्यक आहे, म्हणून मीं **मेसर्स आर्कड** आणि **र्‍यान्सम** ह्यांच्या **आउटलाईन्स** ( आराखडा ) नांवाच्या उत्कृष्ट ग्रंथाच्या साहाय्यानें ह्या इतिहासाच्या आरंभीं अनुक्रमणिका आहे तिची रचना अशी केलेली आहे, कीं, तींत प्रत्येक प्रकरणांतील ऐतिहासिक गोष्टींचा स्पष्ट गोश्वारा मिळावा, आणि ती अनुक्रमणिका, सर्व ऐतिहासिक गोष्टींचे काल एकामागून एक क्रमानें मिळतील, अशी कालानुक्रम–सूची व्हावी. ह्या इतिहासांत आणि कालानुक्रम–सूचींत अंक पुष्कळ आहेत त्यांत, पुष्कळ

काळजी ठेविली होती तथापि, कांहीं चुका अनिवार्य प्रकारानें राहि ल्याच असतील. अशा चुका आढळून येतील तेव्हां त्या दुरुस्त झाल्या पाहिजेत म्हणून त्या जे कोणी मला कळवितील त्यांची मी उपकारी होईन.

अपर्कोट आव्हेनेल हाइ आम्पटन १८८७.

---

## भाषांतर कर्त्यांची सूचना.

ह्या ग्रंथांत विशेषनामें अनेक आलीं आहेत. त्यांतील बहुतेकांचे उच्चार मेहरबान मि० **कर्कूहम**, ए० इ० म० भा०, ह्यांनीं पसंत केले तसे लिहिलेले आहेत. कांहीं थोड्या विशेषनामांचे उच्चार, मयत **मेजर क्यांडी** ह्यांचा "भूगोलाचें वर्णन" ह्या नांवाचा ग्रंथ, व मि० **वेब्स्टर** ह्यांचा इंग्लिश भाषेचा कोश, ह्यांच्या आधारानें लिहिलेले आहेत; त्यांविषयीं जबाबदारी मजवर आहे. विशेषनामांच्या उच्चारांत राहिलेल्या चुका शेवटीं जोडलेल्या सूचींत बहुतेक शुद्ध केल्या आहेत.

मि० **कर्कूहम** ह्यांनीं कृपा करून, आपला [illegible] मोलाचा वेळ खर्च करून, मीं त्यांकडे वेळोवेळीं पाठविलेल्या उच्चारांच्या यादी तपासून दुरुस्त करून, मला साहाय्य केलें, हा मजवर त्यांचा भारी उपकार झाला. त्याविषयीं मीं आपली कृतज्ञता कितीही दर्शविली तरी थोडीच.

ह्या ग्रंथांत दोष किंवा चुका न राहव्या म्हणून मीं पुष्कळ प्रयत्न केला, तथापि त्यांत मार्मिक दृष्टीनें किंवा ढोबळ दृष्टीनेंही दोष किंवा चुका अशा निःसंशय अनेक राहिल्या असतील. त्या धुंडून काढून त्यांचें शुद्धिपत्र जोडणें आवश्यक होतें खरें. परंतु आधींच ग्रंथाची पृष्ठसंख्या ८५० जवळ जवळ होत आली आहे, तीमुळें किंमत जरब होईल. तशांत लांबलचक शुद्धिपत्र जोडलें तर पृष्ठसंख्या वाढून किंमतही कांहींशी त्या मानानें अधिकच होईल. ही गोष्ट मला

थोरीशी वाटली नाहीं. दुसऱ्या आवृत्तीचा योग जमून येईल तर सर्वच ग्रंथ पुनः तपासून शुद्ध करण्याची सवड मिळेल. तेव्हां सर्व दोष नाहींसे करण्याविषयीं होईल तितका प्रयत्न करण्यांत येईल. तोंपर्यंत वाचकांनीं सदय अंतःकरणानें राहिलेल्या दोषांकडे अलक्ष्य करावें अशी त्यांना माझी सविनय प्रार्थना आहे.

माझी तादृश योग्यता नसतां मेहरबान मि० **च्याट्फील्ड**, डि० आ० प० इ० मुंबई, त्यांनीं कृपा करून मला हें भाषांतर करण्याचें काम सांगितलें, हा त्यांचा मजवर परमावधीचा उपकार झाला. त्याचें मला चिरकाल कृतज्ञतापूर्वक स्मरण राहील.

मुंबई, तारीख ३०<br>माहे आक्टोबर<br>सन १८९२.

**ना० वि० बा०**

मेरो खूब चमकेको ठूलो ऐश्वर्य-सुख तिमी भोगौली, म सँग भयेको सारा ऐश्वर्य तिम्रै अधीनमा रहने छ."

रावणको, वज्रपात जस्तो यो वचन सुनी रीसले तातेकी सीता-जीले निर्भयता साथ भनन् भयो "हे कपटी ! दुष्ट ! निशाचर ! म प्रभावशाली वीर रामचन्द्रकी पत्नी हूँ. ममा तैंले इच्छा राखनू श्यालले सिंहको जिभ्रो झिकन आँटनू जस्तै हो. के तँलाई अहिले मोहले छोपेको छ ?, के तेरा पुण्यका भोगको इतिश्री भयो ?, के तेरा जीवनका घडी बिती सके ?, किन आफना हातले आफनै सर्व-नाश गरन चाहन्छस ?, तँ जस्ता दुराचारीलाई धिक्कार छ जसका दोषले सारा राक्षसकुलको संहार हुन आँट्यो. हेर, अझ तँलाई आफना ज्यानको आशा छ भने यस दुराग्रहलाई चाँडै छोड. यसै मा तेरो कल्याण छ."

सीताजीका यस्ता निठूर र बेरसका कुरा सुनेर रावणले फेरी भन्यो, "हे सुन्दरी ! जसका डरले सारा इन्द्रादि देवता समेत रात दिन थर थर काँपेका छन, उनीहरूको शत्रु त्रैलोक्य विख्यात रावण भन्ने राक्षसको राजा मैं हूँ. तिमीलाई लङ्कामा लैजाऊँ भनी म यहाँ आयेको हूँ. यस्ती सुकुमार अङ्ग भयेकी, तीनै लोककी महारानी हुन लायक सौंदर्यले पूर्ण भयेकी, तिमीले यस जङ्गलमा बोक्रा पाहिरी जटा पालेर हिंडनेलाई पति भजी बसनू योग्य छैन. यस उसले लङ्कामा लगी म तिमीलाई आफना सब महारानीहरूमा पहिली पटरानी गराई राखदछू. वहाँ कुनै कुराको कमी छैन. तिमीले जे भने पनी म पुऱ्याउँन छू."

भिक्षुक-रूप रावणका यस्ता अत्याचारी वचन सुनी सीताजीले अत्यन्त क्रोधका साथ गर्जेर भनन् भयो, " हे दुष्टराक्षस ! तँ मायाले मलाई हरी लैजाऊँला भन्ने दुर्मति लिई आयेको रहिछस. म महाराज रामचन्द्रकी पतिव्रता स्त्री हूँ. ममा दुष्टबुद्धि गरिस भने तेरो अवश्य नाश हुनेछ. जहाँ सम्म यस जगत्मा धनुबाँण लिई रामचन्द्र खडा रहनु हुनेछ, तहाँ सम्म उसका शरणमा गये पनी तेरो उद्धार हुने छैन. "

सीताजीका ई वचन सुनी फेरी रावणले भन्यो, " हे सुन्दरी ! तिमी व्यर्थ किन घमण्ड देखाउँछ्यौ ? म कुबेरको भाई, कुम्भकर्णको दाज्यू, असङ्ख्य राक्षसको मालिक हूँ. मेरा अगाडी रामचन्द्र भन्ने एक मनुष्य ता के, तेत्तीश कोटी देवता पनी अडन शकदैनन. देवताका राजा इन्द्रलाई जितदा मेरा छोराले इन्द्रजित् भन्ने नाऊँ पायेकोछ. फेरी पुष्पक विमान समेत मेरा घरमा तयार छ. उसमा वसी म सँग विहार गरन पाउँदा तिमी रामचन्द्रलाई अवश्य विर्सने छौ. तसर्थ मैले भनेको मान. यो घमण्ड छोडी मैले ल्यायेका रथमा चढेर आनन्द साथ मसंग हिंड. "

यसरी लालचका कुरा देखाउँदा पनी सीताजीले आफनू दृढतालाई छोडनू भयेन. रावणले पनी सीताजीको त्यो हठ देखदा आफनू दश शिर र वीश हात भयेको भयंकर रूप प्रगट गर्‍यो. उसले सीताजीलाई जबर्जस्ती रथमा राखी आकाश मार्गले उडाई हाल्यो, एक छिन पनी विलम्ब गरेन.

बिचरी सीताजी अकस्मात् दैत्यका हातमा परदा आकुल भयेर यसरी विलाप गरन लगानू भयो, "हा राम ! मेरो केही अपराध भये क्षमा राखनू होला, म राक्षका हातमा परें. अब मेरो जीवनको अन्त आई पुग्यो. हे लक्ष्मण ! तिम्रो दोष छैन. मेरा दुर्भाग्यले बुद्धि बिग्रंदा तिमीलाई दुर्वाच्य भनें, यसमा क्षमा राखे. तिम्रो वचन नामदा मैले यस आपत्तिको भोग गरनू पऱ्यो ? हा दैव! यस वेला तिमि बाहेक मेरो यो आर्तनाद सुनने यस वनमा कोही छैन. मलाई रक्षा गर. यस अत्याचारी राक्षसका हातबाट छुटाऊ" यस्तो विलाप गरदै सीताजी रुन लागनू भयो.

सीताजीको यो आर्तनाद सुनदा वनका सारा पशु—पक्षीहरू पनी शोकले आकुल भये; मयूरले नाचन छोडे; मृगहरू मुखमा तृण लियेका पनी न खाई दिग्दारीले आकाश तिर हेरन लागे; घेरै के भनूं, सारा जंगलै विह्वल जस्तो देखियो.

यस्ता प्रकारले विलाप गरदी सीताजीलाई लिई रावण जाँदै थियो; अकस्मात् वहाँको आर्तस्वर जटायु भन्ने एक गृध्रराजका कानमा पऱ्यो. उनी ले सहसा अगाडी बढेर रावणका रथलाई रोकदै भने, "हे राक्षस ! इनी महात्मा दयालु पुरुषसिंह रामचन्द्रकी पत्नी हुन. इनलाई तैंले लैजान पाउँदैनस. रामचन्द्रका अगाडीनै इनलाई हेरर ल्याउँदो होस ता तँ वीर ठहरिने थियिस. एकली स्त्रीलाई हेरर ल्याउने तँ अधम, दुष्ट, कातर, होस. यस निमित्त इनलाई यहीं छोडी जा, सेखी गरछस भने म लडदछु. खबरदार, अगाडी नबढ.

जटायुका यस्ता वीरवचन सुनेर रावण अत्यन्त रिसाई उनलाई मारन दौड्यो. वृद्ध जटायुले पनी आफना तीखा चूचाले रथ चूर्ण गरायेर रावणलाई पनी ठुँगी ठुँगी घायल गराये. यसरी आफूलाई घायल गरायेको देखी रावणले खूब रिसायेर जटायुका पखेटा काटी दियो. पखेटा काटिये पछी उनी जमीनमा पछारिये. वहाँ पछी रावणले सीतालाई अर्को रथमा राखी फेरी लङ्का तिर दौडायो.

"धन्य जटायु ! तिमीले पक्षी जाति भयेर पनी निःसहाय अबलाको रक्षाका निमित्त आफनू प्राण दियौ, यो तिम्रो कर्म अतीव प्रशंसनीय छ. जो पुरुष यसरी आर्त–परित्राण गरदछ, त्यो शतशः स्तुत्य हुन्छ.

यसरी रावणले सीताजीलाई लियेर जान लागेको रथ, ऋष्यमूक भन्ने पर्वतका टाकुराको माथी पुग्यो. वहाँ सीताजीले चार पाँच वानरहरू वसेका देखनू भयो, तहीं वहाँले श्रीरामलाई आफनू पत्ता लागोस भन्ने अभिप्रायले पछ्यौराच्याती तेसमा आफना सबै गहना पोके पारेर खसाली दिनू भयो. केही बेर पछी रावणको रथ लङ्कामा पुग्यो; वहाँ रावणले यथोचित प्रबन्ध का साथ राक्षसीहरूका घेरा भित्र सीतालाई अशोक बाटिकामा लगेर राख्यो.

रावणको अज्ञानुसार राक्षसीहरूले सीतालाई उसका उपर आसक्त गराउने उद्योग गरन थाले; तर सीताजीले आफनू पातिव्रत्य स्थिर राखनू भयो, कसैको कुरा सुननू भयेन.

यता मृगरूप मारीचलाई मारी फरकँदा सशङ्क श्रीरामचन्द्रको लक्ष्मण सँग बाटैमा भेट भयो. सो भेट हुनाका साथ वहाँ ले उनलाई

सोधनू भयो, "भाई ! भाउज्यूलाई तेस वनमा एकलै छोडी किन आयौ ? कदाचित् उनलाई केही भयेको रहेछ भने मेरो जीवन नै समाप्त हूने छ" दाज्यूकाई कुरा सुनी लक्ष्मणले पनी आश्रममा भयेको सारावृत्तान्त आँशू पुछ्दै बिन्ती गरे.

यस पछी दुवै भाई बडो व्यग्रताका साथ शीघ्र आफना आश्रममा आये. वहाँ उनीहरूले सीतारहित कुटी मात्र देखे. तेस वेला रामका मनमा शोकको लहरी उठन थाल्यो. वहाँका लेखा सारा जगत् अन्धकार-मय भयो. वहाँले सीताजीलाई चारै तिर एक एक गरी खोजनू भयो, परन्तु कतै पनी पत्ता लागेन. यस उसले दुवै भाई अनेक विलाप गर्दै उन्मत्त झैं घूमन थाले. यस्ता प्रकारले सीताजीकै खोजमा डुल्दा डुल्दा रामचन्द्र जटायु गिरेका ठाऊँमा आई पुगनू भयो. वहाँ अशक्त जटायु घायल भयेर पडी रहेका थिये. उनका समीपैमा राव-णको छत्र, चामर, धनु आदि पनी पडी रहेको थियो. सो देखेर सीतालाई यसैले खायेछ भन्ने शङ्का ले जटायुका उपर श्रीरामले धनु उठाउनू भयो.

बिचरा वृद्ध जाटयु रामचन्द्रको त्यो भीषण मूर्ति देखेर डरले व्याकुल भये. उनी घस्रदै रामचन्द्रका पाऊमा परेर बोलन थाले, "महात्मन् ! हजूरकी पत्नीलाई रावणले हरेर लग्यो, मैले खायेको छैन. खाली वहाँको रक्षा गरूँ भन्दा रावणले मेरो यो दुर्दशा गरेको हो. तेस वेलामा मैले यथा साध्य रावणलाई रोकने यत्न गरें. तेस दुष्ट राक्ष-सको रथ समेत चूर्ण पारी गिरायें. ती सब रथका टुक्राहरू इनै हुन, हजूरका सामने विद्यमान छँदैछन. तेसरी लडदा पनी मेरो केही चलेन.

उल्टै मेरा पखेटा समेत उसले काटी दियो. म उठनै नशकने भयेर यहाँ पछारियें. सीताजीलाई उसले यहाँबाट अर्को रथमा राखी रूवाउँदै दक्षिण दिशा तिर लगेको छ. आज म पनी हजूरका पाउमा यस देहलाई अर्पण गरी परलोकमा जानाको इच्छा गरदछू. अहिले सम्म सीताजीको सन्देश हजूरलाई सुनाउनाका निमित्त नै मैले जेन तेन प्राण थामेको थियें, जो भयेको वृत्तान्त जाहेर गरे. अब बोलने शक्ति छैन, दर्शनको आशा पनी पूर्ण भयो. अव म आनन्द साथ प्राण छोडछू." यती भनेर परोपकारी जटायुले प्राण–त्याग गरे. रामचन्द्र पनी तिनको अन्तिम क्रिया गरेर तेताबाट लक्ष्मणका साथ अगाडी बढनू भयो.

केही पर पुगे पछी बीच बाटामा विचित्र आकार भयेको महाकाय कबन्ध नामक दानव देखियो. तेसको मुख छातीमा थियो. त्यो दुई कोश सम्मका लामा आफनू हात फैलायेर आहारा खोजी खान्थ्यो. दैवगत्या तेस दिन राम, लक्ष्मण दुवै भाई कबन्धका हात भित्र परे. उसले दुवै जनालाई अँठ्यायेर खाने सुर गऱ्यो. तेस सङ्कटमा परेका राम, लक्ष्मणले पनी उसका दुवै बाहु काटी दिये. बाहु काटिना साथ कबन्धले दानव योनि छोडेर दिव्य रूप धारण गऱ्यो. तेस वेला उसका मुखबाट राम, लक्ष्मणको प्रशंसा खूब निस्क्यो. अन्त्यमा उसले श्रीराम सँग भन्यो, "महात्मन् ! रामचन्द्र !, मैले तपाईंको दर्द बुझें. अब तपाई ऋष्यमूक पर्वतमा जानूहोस. वहाँ वालीका भयले अनन्यगति भयेका वानर–राज सुग्रीव एक प्रान्तमा वसेका छन. उनलाई पनी स्त्री-वियोगको ठूलो दुःख परेको छ. तपाईले उनी सँग मित्रता गरनू

भयो भने सीताको खोज हुन शक्ने छ." यती भनेर कबन्ध परम धाम गये. लक्ष्मण सहित श्रीरामले पनी ऋष्यमूक तिरै प्रस्थान गर्नू भयो.

तेताबाट हिंडे पछी राम लक्ष्मण दुवै भाई शवरीका आश्रममा पुगे. उनी एक भिल्ल जातिकी ईश्वरभक्त स्त्री थियिन. उनले श्रीरामको फूल फूलले ठूलो सत्कार गरिन. रामले पनी सो सब खुशी साथ स्वीकार गर्नू भयो. अन्त्यमा रामचन्द्रबाट उपदेशहरू पायेकी शवरीले देहत्याग गरी परम धाम सिधारिन. रामचन्द्र पनी भाईका साथ तेताबाट अगाडी बढ्नू भयो.

## अरण्य—काण्ड

### साकियाँ.





# किष्किन्धा-काण्ड.



राम, लक्ष्मण दुवै भाई सीताका फिक्रीले व्याकुल भई हिँडन लागका थिये. बाटामा अत्यन्त रमणीय पम्पानामक एक सरोवर उनीहरूको दृष्टि—गोचर भयो. उसका प्रान्तमा पुगेर विश्राम गरी श्रीरामले भाईलाई भनन् भयो, " भाई ! हेर यो सरोवर सज्जनको मन झैं स्वच्छ, बुद्धिमान्को स्वभाव झैं गम्भीर, स्त्रीको स्वभाव झैं अपरम्पार, योगीको मन जस्तो शान्त निश्चल देखिन्छ; यसका बीच बीचमा बजने मेखला जस्तो कलहंस-माला खेली रहेको छ; पानी माथी कमलको किञ्जल्क तर लागेको छ; प्यारी सीताको वदनेन्दु जस्ता सरोवरका कमल-पुष्पमा अलकावली जस्ता भ्रमरावली झुली रहेका छन. अहा ! ! ! यस सरोवरको शोभा क्या रमणीय छ ! " यती भनदा भनदै श्रीरामका हृदयमा सीताजीलाई समझी विरहानलको ज्वाला बढन लाग्यो. केही बेर तहाँ वसीं वहाँले बढन लागेको शोक-वेगलाई शान्त गराउनू भयो. तहाँ पछी भाई लक्ष्मणका साथ फेरी रामचन्द्र ले ऋष्यमूक पर्वत तिर प्रस्थान गरनू भयो.

उता ऋष्यमूक पर्वतका कोही शिखरमा मन्त्रीहरूलाई साथमा लिई दाज्यू वालीले निकालियेका वानर-राज सुग्रीव वसेका थिये.

उनले पम्पाका प्रान्त बाट घूमदै आफू तिर आउन लागेका राम र लक्ष्मणलाई देखेर आफना मुख्य मन्त्री हनुमान् सँग भने, "हनुमन्! ती आउन लागेका तेजस्वी वीर को हुन? मलाई शङ्का लागी रहे छ. कारण, दुष्ट वाली सधैं हाम्रो बध चाहन्छ. ती उसैले पठायेका कोही गुप्त वीर हुन कि? जाऊ, युक्ति-पूर्वक बुझी आऊ. तेसो रहेछ भने हामीले पनी सन्नद्ध हुनू परदछ."

हनुमान् पनी बडा बुद्धिमान्, स्वामिभक्त, बलवान् र वीर थिये. उनी स्वामीको यस्तो आज्ञा पाउनाका साथ ब्राह्मणको स्वरूप लिई रामचन्द्रका अगाडी गयेर विनय-पूर्वक भनन थाले, "महाशय! तपाईं हरू को हुनू हुन्छ? यस वनमा किन पाल्नू भयेको हो? वेष भने मुनिको जस्तो देखिन्छ, तर हातमा लियेका धनुर्बाण र आकार बांट तपाईंहरूमा क्षत्रियता स्पष्ट झलकन्छ- यसको कारण के हो?"

हनुमान्का चतुर-प्रश्न सुनेर रामचन्द्रले भनन् भयो, "हामी दुई भाई कोशल—देशका महाराज दशरथका पुत्र होऊँ. रामचन्द्र र लक्ष्मण भन्ने हाम्रो नाम हो. पिताजीका आज्ञाले हामी दुई भाई र मेरी पत्नी सीताजी समेत तीन जना यस वनमा चौध वर्ष सम्म वसन भनी आयेका थियौं. दुर्भाग्य-वश हामी नभयेका वेलामा पञ्चवटीबाट दुष्ट रावणले सीतालाई हरेर लगेछ. यस कारण हामी उनैका खोजमा हिंडेका थियौं. बीच बाटामा कबन्धद्वारा राजा सुग्रीवको वृत्तान्त सुन्यौं र उनी सँग मित्रता गरन आयेका छौं."

श्रीरामको सारा वृत्तान्त सुनी हनुमान्ले भने, "राज-कुमार! तपाईंहरूको यो विचार बहुत उत्तम हो. यसले दुवै पक्षको हित

हुने छ. म पनी राजा सुग्रीवको दूत भयेर आयेको हनुमान् भन्ने मन्त्री हूँ. वहाँका बलवान् वीर वीर वानरहरू सहायक छन. वहाँ सँग मित्रता भये पछी तपाईंहरूलाई सीताका खोजमा केहीं कठिन परने छैन. तपाईं जस्ता पराक्रमी पुरुषका सहायताले वहाँको पनी अवश्य कार्य सिद्ध हुनेछ. म ता यो समागमलाई अत्यन्त उचित समझन्छू. पालनू होस, म महाराज सुग्रीव कहाँ तपाईंहरूलाई पुऱ्याउँछू." हनुमानका ई वचन सुनी उनैका साथ श्रीराम र लक्ष्मण सुग्रीवका वास-स्थान तिर गये. उनीहरूलाई केही समीपमा आयेको देखना साथ सुग्रीवले पनी आफै अगाडी बढेर दुवै भाईको यथा योग्य सत्कार गरे.

तहाँ पछी सुग्रीवले प्रीति-पूर्वक राम सँग भने, "हनुमान् द्वारा तपाईंहरूको वंशवृत्तान्त सबै मैले सुनें. मेरो ठूलो भाग्य रहे छ. किन मने साक्षात् राम जस्ता पुरुष पनी आज म संग मित्रता गरन चाहनू हुन्छ. यसमा मेरो पूर्ण सम्मति छ. मेरा दुःखको हाल पनी तपाईं-लाई जाहेरै होला. उसको प्रतीकारमा यथासाध्य सहायता पाउन्यै छू." यती भनेर सुग्रीवले प्रेम-पूर्वक मित्रताका निमित्त हात बढाये. श्रीरामले पनी हात मिलाउनू भयो, हनुमानले बीचमा अग्निलाई साक्षी राखे. यस प्रकार सँग मैत्री भये पछी दुवै जना परस्परमा प्रसन्न भये.

यस पछी सुग्रीवले विरह-सन्तप्त श्रीरामलाई अघी सीताले खसालेका वस्त्र र गहनाको पोको दियेर भने, "रावणले सीताजीलाई आकाश-मार्गले लैजान लागेको रहेछ. बीचमा हामीलाई देखी वहाँले

ई गहना खसाली दिनू भयेको हो. उसवेला हा राम ! हा लक्ष्मण ! भन्ने यस्ता वचन सिवाय सीताजीका मुखबाट अर्को केही अवाज निस्कदैनथ्यो. त्यो समझदा अझ सम्म मेरो हृदय विदीर्ण हुँदैछ. " यती भनेर सुग्रीव चूप लागे पछी रामचन्द्रले सो पोको आफनै हातले फुकाउनू भयो. उसमा प्रियतमा सीताजीका गहना ज्यौंका त्यौं थिये. सो देखना साथ ती गहना रहने सीताका तत्तत् अवयवलाई समझी श्रीरामचन्द्र अत्यन्त विह्वल हुनू भयो. सो देखी सुग्रीवले भने, " मित्र ! शोक न गरनू होस. सीताको उद्धार गरने भार मेरा उपर राखनू होस. म तयार छू. यो पराक्रमको काल हो; शोकको होयिन. "

सुग्रीवको सान्त्वना सुनी श्रीरामले आँशू पुछ्दै भननू भयो, " मित्र ! दुःखमा विवेक दिलाउने र सुखमा विनय–पूर्वक राखने मित्र भाग्यले मात्र पायिन्छन. आज आफनू दुःखको भार मैले तपाँइ लाँई समर्पण गरें. अब जसरी हुन्छ चाँडैनै रावणका कैदबाट सीता-लाई छुटाउने यत्न गरनू होस. मेरा वज्र जस्ता कठोर शर तपाँईको सहायताका निमित्त तयार छन. " श्रीरामचन्द्रका यस्ता वचन सुनी सुग्रीवले पनी सहर्ष भने, " अब म वीर वानरहरूलाई पठाई जहाँ बाट भये पनी सीताजीको खबर मँगाउँछू. वहाँ पछी जो गरनू परने गरौंला. "

सुग्रीवलाई वालीका पराक्रमको यथार्थ ज्ञान थियो. यसैले उनी वालीको पुरुषार्थ वर्णन गर्दै रामको बल–परीक्षाका निमित्त फेरी भनन थाले, " मित्र ! मलाई तपाँईको बल र पुरुषार्थ केही थाहा

छन. वाली भने अत्यन्त पुरुषार्थी छन. उनका अगाडी ठूला ठूला वीर पनी अडन शक्दैनन. उनले रावणलाई काखी च्यापी चार समुद्र घूमायेर छोडी दियेथे. फेरी कोही समयमा एक दुन्दुभि भन्ने अत्यन्त बलवान् राक्षसलाई पनी उनले मारे. केही दिन पछी दुन्दुभि–पुत्र मायावी नामक राक्षसले आयेर वालीलाई हाँक दियो. उत्तिखेरै वालीको र उसको युद्ध पर्‍यो. अन्त्यमा राक्षस हारेर भाग्यो, वालीले उसको पछेडा छोडेनन. म पनी वालीका साथै साथ दगुरें. धेरै पर पहाडमा पुगे पछी राक्षस गुफा भित्र पस्यो. वालीले पनी मलाई गुफा बाहीर राखेर उहीं भित्र प्रवेश गरे. म पनी धेरै दिन सम्म दाज्यूको बाटो हेरेर तेहीं गुफाका ढोकामा वसेको थियें. एक दिन अचानक गुफाबाट रगतको भल निस्कन लाग्यो. त्यो देखँदा मेरा मनमा वाली मरी सकेछन, अब राक्षस फरकेर मलाई पनी मारदछ भन्ने डर पर्‍यो. यस निमित्त ठूला ढुङ्गाले तेस गुफाको द्वार बन्द गरेर म राजधानी तिर आयें. वहाँ सबैले यो खबर सुनेर मलाई नै राजा बनाये.

केही दिन पछी राक्षसलाई मारेर वाली पनी फरकेर आये. किष्किन्धामा म आफैं राजा भई वसेको देखेर उनलाई सार्‍है रीस उठ्यो. त्यो बुझी मैले उत्तिखेरै सो राजगद्दी वालीलाई नै सुम्पेर उनी सँग आफना भूलको क्षमा मागें. तर दुष्ट वालीले क्षमा गरेनन. उल्टा देशबाट मलाई निकाली दिये. मेरी पत्नीसमेत हरण गरेर लिये. यसैले म यस मतङ्ग ऋषिका आश्रममा वसेको छू. यहाँ पनी ती आउन शक्ने भये मलाई बाँकी राखने थियेनन, तर

तिनी यहाँ आउन अशक्त छन. कारण, अघी बलका झोकमा वालीले फ्याँकेको रगत चुहुँदो दुन्दुभिको शरीर ऋषीका नगीचै गिरेछ, रगतका छिटा ऋषिका शरीरमा पनी परेछन; यसैले क्रुद्ध भयेर ऋषिले उनलाई "तँ यहाँ न आउन्, आये तेरो मरण होला" भनी शराप दियेका छन. यस हेतुले वाली यहाँ आउन शक्दैनन. आज सम्म दुन्दुभिको कङ्काल ( हाड खोर मात्र बाँकी रहेको शरीर ) यहाँ छँदै छ. हेरनू होस. तेसलाई तपाँइले उचालन पनी कठिन होला."

यती भनी सुग्रीवले दुन्दुभिको पर्वत सामन लडी रहेको कङ्काल श्रीरामलाई देखाये. सो देखना साथ रामचन्द्रले उसै वेला आफना पाऊका बूढी औंठाले तेस कङ्काललाई तेताबाट धेरै नै पर हुत्याई दिनू भयो. तेती गरदा पनी चित्त बुझेन र सुग्रीवले तेसै पर्वतको यौटा तालवृक्षलाई देखायेर भने, "एकै बाणले वालीका झै तपाँईलें पनी यस तालवृक्षको: फेद छेडी दिनू भयो भने तपाईमाँ वाली मारने शक्ति रहेछ भन्ने मलाई निश्चय हुने छ." सुग्रीवका ई कुरा सुनी मित्रको सन्देह हटाउनाका निमित्त रामचन्द्रले पनी तेस वृक्ष-लाई मात्र हेयिन कि उसका सामने लहर लागेका अरू छ वृक्ष-लाई समेत एकै बाणले छेडी दिनू भयो.

रामचन्द्रको यस्तो अद्भुत पराक्रम देखदा सुग्रीवका मनमा पूरा पत्यार भयो. उनी आफैं लज्जित भयेर बोलन लागे, "मित्र! मलाई वालीको ज्यादा डर हुनाले तपाईलाँई धेरै दुःख दियें परीक्षा गऱ्यो भनेर रिसानी नहोस."

यती भयेका केही दिन पछी रामचन्द्रका आज्ञाले वाली सँग लडन भनी सुग्रीव किष्किन्धा तिर गये. राम र लक्ष्मण पनी सहर बाहिर वाली–सुग्रीवको लडाई हुने ठाऊँको नगीच पारी एक वृक्षका आडमा बसे.

यस्ता प्रकारले रामचन्द्रको सहाय पाई सुग्रीव किष्किन्धामा पुगे. उनले सरासर वालीका ढोकामा खडा भई एक पटक सिंहनाद गरे. त्यो गर्जना सुनना साथ, उन्मत्त बडो विषालू भयङ्कर कृष्ण–सर्प झैं फूत्कार छोडदै वालीपनी आफना दरबारबाट बाहिर निस्के.

रीसले चूर भयेका कामचारी वाली र सुग्रीव अखाडामा आयेर मनुष्य–लीलाले लडन लागे. ती दुई भाईको युद्ध राम र लक्ष्मण ले पनी हेरी रहेका थिये. तेस वेला बालीलाई मारनाका निमित्त रामले पनी धनुमा बाण चढाउनू भयेको थियो, तर युद्धका समयमा वाली र सुग्रीवको अनुहार सहसा छुट्टिन शकेन. यसैले कदाचित् मित्र सुग्रीव-लाई सो अमोघ बाण लाग्यो भने सबै काम बिग्रला भन्ने डरले श्रीराम रोकिनू भयो. उता सुग्रीव राम-बाणको भरोसा गरेर शके सम्म लडे, तर अन्त्यमा वाली सँग उनको केही चलेन र उनी रण–भूमिबाट भागे. सुग्रीवलाई भागेको देखी वाली पनी फरकेर आफना घर तिर गये.

तहाँ पछी वालीका हातको चोट खायेका सुग्रीव पनी रामचन्द्र सँग खूब रीसाउँदै सरासर गयेर भनन थाले, “के तपाईंले वालीका हातबाट सुग्रीव मरोस भन्नाका निमित्त यो धोखा बाजी गरनू भयेको हो ? के मित्रको काम यही हो ? हरे !!! आज मेरा

दुर्भाग्यले अमृतका बडाबाट विष निस्क्यो. यसरी वालीका हातबाट मराउनू थियो भने आफैंले यहीं मारी दीनू भयेको भये पनी हुने थियो. यसरी विश्वास-घात गरनू तपाईंलाई सर्वथा उचित थियेन. ”

सुग्रीवले व्याकुलताका साथ भनेको वचन सुनी रामचन्द्रले भननू भयो, “ मित्र ! तपाईं दुई भाईको युद्ध हुन लागेका वेलामा वालीका उपर बाण छोडूँ भनी मैले आँटेको थियें, तर तेस वेला तपाईं दुई भाईको अनुहार सहसा छुट्याउन शकिन; यसैले तपाईंलाई नै बाण लागला र सबै काम बिग्रला भन्ने डरले ताकेको बाण पनी रोकनू पर्‍यो. यसमा म स्वयम् लाचार छू. अब म तपाईंका गलामा एक माला लगाई दिन्छू. सो पहिरेर युद्ध-भूमिमा जानू होस. यसो भये पछी मलाई तपाईंको पहिचानमा भ्रम रहने छैन. एकै बाणले वालीलाई मारी दिने छू. ” यती भनी श्रीरामले सुग्रीवलाई एक माला पहिरायेर फेरी रण-भूमिमा पठाउनू भयो.

वाली पनी सुग्रीवलाई हटाई आफना घरमा गयेर सुख-पूर्वक वसेका थिये. अकस्मात् फेरी सुग्रीव सिंहनाद गर्दै वालीका ढोकामा गयेर हाँक दिन लागे. सो सुनदा वालीलाई साह्रै रीस उठ्यो. उनी बडो हतपतका साथ भित्रैदेखी गदा उठाई दाँत कटकटाउँदै निस्कन तत्पर भये. तेस वेला उनकी पत्नी ताराले भनिन, “ प्रियतम ! अघी मात्रै भागेका शत्रुले अहिल्यै आयेर हाँक दिन कदापि शकदैन. मुहूर्त्त ठीक छैन. सुग्रीवले कोही न कोही सहाय अवश्य पायेका छन. यस कारण, यस वेला हजूरले रीस गरेर सहसा युद्ध-भूमिमा जानू ठीक परदैन. पहिले सब कुराको अनुसन्धान गरेर मात्र सवारी

हुनू योग्य छ. अहिले रीसको वेग रोकनू होस-विचार गरेर गरेका कामले मात्र फल-सिद्धि हुन्छ. ''

वाली रीसले साह्रै चूर भयेका थिये, उनले ताराको वचन एक पनी सुनेनन, उत्तीखेरै युद्ध—भूमिमा आयेर उनी सुग्रीव सँग युद्ध गरन लागे. सुग्रीवले पनी फूर्ती साथ वालीलाई दुई चार गदा चखाये. उनले पनी सुग्रीवलाई वेसरी ठोके. हुँदा हुँदा बिचरा सुग्रीव थाकदै आये. वालीले उनलाई एकै चोटमा खतम गराउने हिसाव सँग गदा उठाये. यसै बीचमा वृक्षका आडबाट रामचन्द्रले पनी वालीका उपर यस्तो अमोघ बाण छोडनू भयो कि जुन आयेर छातीमा लागना साथ उनी ढुनमुनिदै जमीनमा गिरी हाले. यतीगरी श्रीराम विस्तार विस्तार अघी बढनू भयो.

घायल बालीले रामलाई अगाडी उपस्थित भयेको देखेर भने, " दाशरथे ! तपाई बडो धर्मात्मा हुनू हुन्छ भन्ने सुनदथें, तर आज तपाईले लुकेर मलाई मारनू भयो. तेसले तपाईको यश र प्रतिष्ठा सहसा नष्ट भयेको देखदछू. सीताका निमित्त तपाईले जुन यो पाप कर्म गरनू भयो त्यो तपाईका अविचारको फल हो. तपाईकी प्रियालाई सहजै म ल्यायेर समर्पण गरने थियें. रावण जस्ता पाजी-लाई म बाँधेर तपाईको अगाडी हाजीर गरने थियें. तेती सानू कामका निमित्त क्षत्रिय—धर्मलाई छोडनू यो साह्रै अनुचित हो. जो भयो भई गयो. मता मरदछू. तर यो कलङ्क सर्वदाका निमित्त तपाईका ललाटमा लेखियो य सै मा साह्रे खेद छ. "

वालीका कुरा सुनी श्रीरामले उत्तर दिनू भयो, " वानर–राज ! तिमी अहिले ता धर्म र अधर्मका कुरा गरदछौ, तर अघी भाई-बुहारीलाई हरण गरदा तिम्रो यो सद्बुद्धि कहाँ गयेको थियो ? विचार गर कि राजाहरू बराबर शिकार खेलदछन. शिकार खेलदा यौटा शाखामृग मरन गयो भने उनलाई के दोषछ. ? " यो सारा कुरा सुनेर वालीले भने, " हुन्छ, तपाईंले एक शाखामृगलाई मारनू भयो. यसमा तपाईं दोष देखनू हुँदैन, तर यस कुरामा दुनियाँले पनी तपाईंको दोष नदेखोस भन्ने मात्र मेरो कामना हो. " यती भनेर केही बेर पछी उनले प्राण–त्याग गरे.

आफनू वैरी मरेको देखी सुग्रीव पनी हर्ष-पूर्वक उफ्रँदै आयेर रामचन्द्रका पाऊमा गिरे. तहाँ पछी राजा वाली मरे भन्ने समाचार सुनी तारा र उनका छोरा अङ्गद पनी छाती पीटदै तहाँ आयेर अनेक विलाप गरन लागे. त्यो देखी स्वयम् रामचन्द्रले तारालाई "काल-गति यस्तै छ " भन्ने अनेक उपदेश गरेर संझाई सुग्रीव र अङ्गद द्वारा वालीको संस्कारादि कर्म गराउनू भयो.

आफसका वन्धुविरोधले गर्दा अन्यजाति रामचन्द्रका हातबाट वालीको नाश भयो. सुग्रीवले राज्य पाये, वालीका कर्मको भोग वालीले पाये. रामचन्द्र सँगका मित्रताको फल सुग्रीवले पाये. रामचन्द्रले पनी मित्रका निमित्तको कर्त्तव्य–कर्म पुरा गरनू भयो. अङ्गदलाई पनी युवराज-पदवी मिल्यो.

किष्किन्धाका राज्यमा सुग्रीवलाई, राखे पछी, श्रीरामचन्द्र र लक्ष्मण वर्षाको समय हुनाले ऋष्यमूक पर्वतैका एक प्रवर्षण नामक प्रान्तमा गयेर वसनू भयो. केही दिन पछी, वर्षाकाल पर्ना बित्यो-शरद्

ऋतुको प्रारम्भ भयो. दशै दिशा उज्याला देखिये, तर विरह-व्याकुल श्रीरामका मनमा झन झन अँध्यारो हुंदै आयो. यसैले अब सुग्रीवको प्रतिज्ञानुसार कामको तजबीज गराउनू परदछ भन्ने विचार प्रकट गरेर रामचन्द्रले लक्ष्मणलाई भनन् भयो,—

**श्लोक.**

" वर्षा बितीसकि शरद् ऋतु-राज लाग्यो,
सीताजिको न त कुनै समचार आयो;
पत्ता मिले त गइ काल पनी जितेर,
फिर्ने थियें जनक-राज- सुता लियेर.
सुग्रीवजी पनि अकण्टक राज्य पाई,
हेभाइ ! बिर्सि उपकारक हामिलाई;
सीताजिका खबरको नगरी विचार,
भूले कि ग्राम्य-सुखमा बुझ एक एकबार.

दाज्यूका यस्ता वचन सुनदा सुग्रीव देखी लक्ष्मणलाई साह्रै रीस उठ्यो. उनी "कृतघ्न, ग्राम्य-सुखमा लम्पट, तेस सुग्रीवको र उसका बन्धु वर्गको समेत अब नाश पारदछू " भनदै धनु उठाउन थाले, तेसरी लक्ष्मण लाई रीसायेको देखी अनिष्ट-शङ्काले रामचन्द्रले भनन् भयो, " भाई ! तिम्रो रीस चर्को छ. किष्किन्धामा गयेर केही उपद्रव नमच्चाये. रीसका वेगमा सुग्रीवका उपर प्रहार गऱ्यौ भने नाहकमा मित्र हत्या लागने छ. यस कारण डर मात्रै देखायेर सुग्रीवलाई ल्याऊ. अरू कुरा केही नगरे. "

दाज्यूका आज्ञानुसार उठेको रीसलाई पनी रोकी लक्ष्मणजी किष्किन्धा तिर गये. वहाँ बुद्धिमान् हनुमानजीले यो कुरा अघी-बाटै चार द्वारा थाहा पायेर सुग्रीवलाई समझाये, हनुमानले समझा-उँदा सुग्रीवलाई पनी होश आयो. उनले अघी देखी नै धेरै वानर-लाई जम्मा गर्ने प्रबन्ध गरेका थिये. केही वानरहरूलाई सीताका खोजमा पठाई सकेका पनी थिये. यस्तैमा लक्ष्मण सुग्रीवका दरबारमा पुगे. सुग्रीवले पनी नम्रता साथ लक्ष्मणलाई उचित आसनमा राखेर भने, " भाईजी ! मैले श्रीरामचन्द्र सँग गरेको प्रतिज्ञा बिर्सेको छैन. केही वानरहरू लाई सीताजीका खोजमा पठाई सकेको छू. आज सम्म वर्षा समय हुनाले विशेष यत्न गरन नशकेको हूँ. अब शरद ऋतु पनी लाग्यो. जो गरनू परदछ सब गरदछू. " यती भनेर उसै बेला सुग्रीव लक्ष्मणका साथ रामचन्द्रका वास-स्थान तिर गये. वहाँ दुवै मित्र बसेर परस्परमा कर्त्तव्यको सल्लाह गरन लागे.

हनुमान्ले थोरै कालमा नै असंख्य वानरको सैन्य जम्मा गरी रामचन्द्रका अगाडी खडा गराये. त्यो फौज देखदा रामचन्द्रले अत्यन्त प्रसन्न भयेर सुग्रीवलाई भनन् भयो, " मित्र ! मेरो तपाई बाहेक यस बेला हित-कारक कोही छैन. यस निमित्त जो गरनू परदछ चाँडै गरी सीताजीको पत्ता लगाउनू होस. अहिले हामी सबैको यही मुख्य कर्त्तव्य छ. "

सुग्रीवले पूर्वोक्त रामचन्द्रका कुरा सुनेर उत्ति खेरै सारा वानर-हरूलाई यही उर्दी दिये, " तिमीहरू सीताजीको खोज गरन जाऊ. महिना दिन भित्रमा पत्ता ल्यायेर आउनू. महिना दिन नाघ्यो

भने तिमीहरूको ज्यान जाने छ. अब एक क्षण पनी विलम्ब नगर जाओ, चारै दिशामा बाँडियेर सीताजीको खोज गर सो खोजी गर्नाका निमित्त अङ्गद, हनुमान्, नल, नील, जाम्बवान्, आदि बुद्धिमान् र बलवान् अफिसरहरूले आफनू आफनू सैन्य लियेर दक्षिण दिशा तिर जानू, अरू साधारण सैन्यले अरू दिशामा जानू."

सुग्रीवका आज्ञानुसार वानरहरू तत्तद्दिशामा जान भनी सन्नद्ध ( तयार ) भये. तेस वेला रामचन्द्रले आफनू नाम लेखियेको औंठी झिकेर "कतै सीताजी सँग भेट भयो भने परिचयका निमित्त दिनू" भनी हनुमानूका हातमा दिनू भयो. सो औंठी लिई हनुमान् समेत जाम्बवान्, अङ्गद, आदि धेरै वानरहरू दक्षिण दिशा तिर हिंडे. यस्ता प्रकारले रामचन्द्र सँग बिदा भई हिंडेका हनुमान् आदि वीर वानरहरू सीताजीलाई खोजदै जाँदा जाँदा दक्षिण समुद्रका किनारमा पुगे. उनी हरू वहाँ पुगदा एक महिना बितन पनी दुई तीन दिन मात्र बाँकी थियो.

सीताजीको कतै पत्ता लागेन. यस उसले साराका मनमा खलबल पऱ्यो. अन्त्यमा वालीका छोरा अङ्गदले वानरहरूका साथ सल्लाह गरेर भने, "हामीलाई सुग्रीवले महिना दिन भित्रमा आई पुगनू, न आये तिमीहरूको ज्यान जाने छ भन्ने उर्दी दियेका हुन. महिना दिन बितनलाई अब एक दुई दिन मात्र बाँकी छ. अहिले सम्म सीताजीको कतै केही पत्ता लाउँन शाकियेन. यसै जाऊँ भने अवश्य हामीलाई सुग्रीवले मारनेछन. उनको स्वभाव अति क्रूर छ. उसमा पनी उनको श्रीरामले पक्ष गरनू हुन्छ. बरू

त्यहाँ गयेर बेइज्जती भई मरनू भन्दा यसै समुद्रका किनारमा मरनू बढिया छ." अङ्गदका यसकुरामा सबै सहमत भये. उनीहरूले यही निश्चय गरी तहीं प्रायोप्रवेश व्रत लियेर बसे.

दैव-गत्या अकस्मात् एक सम्पाति भन्ने जटायुका दाज्यू गिद्धले ती बानरहरूको त्यो अवस्था देखी भने, "तिमीहरू किन मरदछौ? तेस्तो के काम पर्‍यो? भन, मबाट हुने सम्म तेसको प्रतीकार गरूँला. पहिले यो कुरा ता भन कि तिमीहरू को होउ? के कुराका खोजमा हिंडेका छौ? सबै यथार्थ बताऊ." सम्पातिका ई कुरा सुनेर वानरहरूले पनी रामचन्द्रले सुग्रीवका साथ मित्रता गरी वालीलाई मारेर आफूहरूलाई यता पठाये सम्मको वृत्तान्त विस्तारपूर्वक उनलाई सुनाये. सो वृत्तान्त सुनी सके पछी सम्पातिले आश्वासन-पूर्वक वानरहरूलाई भने, "सीताजीको पत्ता म बताई दिन्छू. जसको सामर्थ्य छ गयेर भेट गर. सीताजी अहिले लङ्कामा रावणको भित्री बगैंचा (अशोक वन) मा छन. उनलाई रावणले लगी राम्ररी राखेको छ. तेस लङ्कामा जानलाई चार शय कोश समुद्र नाघनू परदछ. जसले यो समुद्र तरन शकदछ उसैले सीताजीलाई भेटन शकदछ."

वानरहरूलाई सीताजीको पत्ता बतायेर सम्पाति आफना बाटा लागे. वानरहरू उहीं बसेर आफू आफूमा समुद्र तरने विषयको सल्लाह गनर थाले. अन्त्यमा जसरी हुन्छ समुद्र पार गयेर सीताजी सँग भेट नगरी हुँदैन भन्ने सबैले निश्चय गरे. उत्तिखेरै युवराज अङ्गदले अगाडी सरेर सबैलाई सम्बोधन गरी भने, "भाई हो! समुद्र पार गरने सामर्थ्य कसको छ? अगाडी सर, आफनू पुरुषार्थ देखाउने वेला

यही हो. अवसरमा नचूक. यसबाट राजाको काम र बन्धुको रक्षा दुवै हुने छ." युवराजको त्यो वचन सुनी सबैले आफूमा भये सम्म बल र पराक्रम जाहेर गरे, तर समुद्र तरने सामर्थ्य म सँग छ भनने कोही निस्केन.

अरू कुनैबाट कामको तार नलागने देखी वृद्ध जाम्बावनले हनुमान् तिर हेरेर भने, "वीर हनुमन्! तिमी वायुका पुत्र होउ. यस कारणले तिमिमा जत्तिको सामर्थ्य छ उत्तिको हामीहरू कसैमा छैन. तिमीले आँट्यौ भने यो काम अवश्य पूरा हुने छ, नत्र कठिनै देखियो." बूढा जाम्बवान्का ई कुरा सुनी हनुमान्ले लङ्कामा जानलाई कमर कसे. सो देखदा सारा वानर अत्यन्त प्रसन्न भयेर उनलाई आलिङ्गनादि गरन थाले.

जाने वेलामा हनुमान्ले आफनू शौर्य—शाली शरीर खूब फुकायेर अङ्गद सँग सोधे, "युवराज! लङ्कामा पुगेर मैले के के गरनू परदछ? चाँडै आज्ञा होस. ई म उफ्रन आँटें." यो सुनना साथ प्रसन्नता—पूर्वक अङ्गदले भने, "महावीर! तिमीले अरू केही गरनू परदैन; समुद्र तरेर खाली सीताजी सँग भेट गरी बहाँको हाल मात्र लियेर आउनू. यती गर्‍यौ भने हाम्रो ज्यान पनी बाँचद छ, श्रीरामको काम पनी बनदछ."

## किष्किन्धा—काण्ड

### सकियो



# सुन्दर काण्ड.



अङ्गद जाम्बवान् आदि वानरहरूलाई "म न आउन्ज्याल तपाईं-हरू यहीं वसी रहनू होला" भनी हनूमान्जी महेन्द्र पर्वतका ठाकुराबाट समुद्रको संमुख भई उफ्रे. तिनको वेग पनी तेस वेला वायुकै जस्तो थियो. तेसरी उडदैं जाँदा बीचमा मैनाक पर्वत देखियो. वहाँ उसले गरेको सत्कार स्वीकार गरी फेरी हनुमान् वहाँ बाट उफ्रे. केही पर पुगे पछी सुरसा नामक एक नागमाता आयेर उनलाई खाने कुरा गरन लागिन. हनूमान् ठडो युक्ति साथ वहाँ-बाट उंकेर फेरी दौडे.

साहसी वीर हनूमान् वायुवेगले आकाशमार्गबाट जाँदै थिये. कोही छायाग्रहले उनको छाया पक्रेर गतिमा विघ्न पाऱ्यो. उनले उसलाई पनी जबर्दस्ती हटायेर आफनू बाटो लिये, उनको वेग भङ्ग हुन पायेन. केही कालमा शक्तिशाली हनुमान् विद्युद्गर्भ मेघ झैं समुद्र पारी प्रलम्बन पर्वतमा पुगे. उताबाट लङ्काका वरी परीको सारा जङ्गल देखिन थाल्यो. रमणीय लङ्का पनी वहाँबाट स्पष्टै देखिन्थ्यो. वहाँ भित्तामा रत्न जडियेका ठूला ठूला सुवर्णको घर-हरू झकाझक देखिन्थे; सारा संहर रथ हात्ती घोडाहरूले खचाखच

भई रहेको थियो. ध्वजा पताकाले शोभित भयेका सफा सडक हरूमा विचित्र शोभाले मन हरण गरद्थ्यो; उत्तम फल-फूलले पूर्ण भयेका बैंगचाहरू पनी लङ्कामा लाखौं थिये; बीच बीचमा सुन्दर धारा, तलाऊ, जङ्गल, केलिकुञ्ज, आदि सुख सामग्री पनी अनन्त थिये; लङ्काको कारीगरी यहाँ सम्म छ भन्ने सीमा थियेन; झट्ट हेरदा यो लङ्का दोस्रो अमरावती नै हो कि भन्ने भान हुन्थ्यो.

तेस वेला कतै गन्धर्वहरूको गीतवाद्यादि भई रहेको थियो. कतै ठूला ठूला जनावर हरूले अरू जनावरलाई लुछन लागेको देखिन्थ्यो. कतै हाँस—खेलको तमाशा थियो. ठाउँ ठाउँमा भयङ्कर राक्षसहरू पहरा दिन्थे. तेस लङ्का भित्र साहसा कोही पनी छिरन शकदैनथ्यो, सर्वत्र तालिमी फौजका छाउनी देखिन्थे. वहाँ कुनै कुराको कमी थियेन. त्यो तमाशा हेरदा हेरदै सूर्य अस्ताये. चारै तिर अन्धकारको सञ्चार हुन थाल्यो. चतुर हनुमान् पनी बडो योग्यता साथ सूक्ष्म रूपले लङ्काका मूल ढोकामा पुगे.

लङ्का भित्र पसूँ भनी आँटेका हनुमान्‌लाई देखी ढोकामा पहरा दिई बसेकी कोही राक्षसीले भनी, "यो भित्र जानेको हो ? म यस ढोकाको पहरा दिई बसेकी छू भन्ने तँलाई थाहा छैन र नटेरी भित्र पसन लागिस ?" यस्ता गर्वले भरियेका तेसका कुरा सुनेर हनुमान्‌ले तेस राक्षसीलाई एक घुस्सा दिई जमीनमा गिराये, आफू सरासर भित्र पसे.

वहाँ पछी सीताजीलाई खोजदै उनले रावणको दरबार एक एक गरी घूमे. तै पनी उनले कहीं सीताजीको पत्ता लाउन

शकेनन. अन्त्यमा उनी दरबारको समीपवर्ती एक बगैंचामा पसे वहाँ अशोक—वृक्षका तल तिर अनेक राक्षसी हरूले घेरियेकी, अत्यन्त दुब्ली, विरहिणी र साक्षात् लक्ष्मी झैं देदीप्यमान स्वरूप भयेकी एकली स्त्रीलाई देखे. सबै तरह बाट विचार गरदा उनलाई "सीताजी इनै हुन" भन्ने निश्चय भयो. तेस वेला विरहातुरा सीताजीको रामनाम सिवाय शरण अर्को केही थियेन, मनसा वाचा वहाँ रामैको स्मरण गरनू हुन्थ्यो.

कसैले चाल नपाउने गरेर हनुमान् उही अशोकका वृक्षमा चढी पातका अन्तरमा लुकेर राक्षसी हरूका कुरा सुनन लागे तेसै. वेला अचानक रावण पनी धेरै स्त्रीहरूका साथ वहाँ आयेर सीता-जीलाई अनेक प्रकारले फुल्याउन थाल्यो. धैर्यवती सीताजीले उसका दुर्वचन सुनेको न सुन्यै गरनू भयो. वहाँको हृदय सागर ज्यौंका त्यौं रह्यो. उसमा कुनै दुस्तर्क—तरङ्गले आघात गरेन. अन्त्यमा तहाँ वसेका राक्षसीहरूलाई रावणले अह्रायो "हे राक्षसी गण ? जसरी हुन्छ इनलाई समझाउनू. केही गरे पनी इनले मानिनन भने आजका एक महिनामा इनलाई तर्कारी बनायेर मेरा समीपमा उपस्थित गराउनू र खुशी साथ म खानेछू." यती भनी हताश भयेर रावण दरबार तिर फर्क्यो.

रावणका हुकूमले राक्षसीहरू पनी सीताजीलाई दुश्चेष्टा देखाउन थाले. कोही फकाउँछन, कोही गाली गरछन, कोही यसलाई म काटदछु भनेर अगाडी सरछन. तेस वेला तिनका क्रूर व्यवहारको

पारावार थियेन. बिचरी मलिनमुखी सीताजी चुपचाप उँधो मुख लायेर वसनू भयेको थियो. आखीरमा वहाँले भननू भयो, " बरू तिमीहरू मलाई यहीं मारछौ भने चाँडै मार. यसमा म कत्ती खेद मानदीन. अरू कुराले मेरो मन न दुखाओ. म रामचन्द्र बाहेक अरूलाई मनसा, वाचा, कर्मणा कुनै जन्ममा पनी समझने छैन. "

सीताजीको त्यो दृढ प्रतिज्ञा सुनी ती दुष्ट राक्षसीहरू झन रिसायेर अनेक त्रास देखाउन लागे. तेस वेला ती राक्षसीहरूमा एक त्रिजटा भन्ने शान्त-स्वभावकी राक्षसी पनी थियी. तेसले सबै राक्षसीहरूलाई भनी, " बहिनी हो ! अब तिमीहरू इनलाई व्यर्थ डर नदेखाओ. आफनू कल्याण होस भन्ने छ भने राम्रा तरह सँग इनको सेवा गर. आज सम्म भनेका दुर्वाक्यको क्षमा गराओ. किन भने, आज राती स्वप्नामा रावणले तेल घसी गोबरका कुण्डमा फाल हालेको, रामचन्द्रले यहाँ आई सारा राक्षस कुललाई नाश गरेको, इत्यादि धेरै कुरा देखेकी छू. तसर्थ अब रावणको नाश हुने दिन नगीचै आयेको छ, सारा राक्षसहरूपनी नाश हुनेछन. इनलाई रामचन्द्रले अवश्य नलगी छोडने छैनन. यस कारण मैले भनेको मान. इनीलाई व्यर्थ दुःख दियेर तिमीहरूको कल्याण कदापि हुने छैन. पछी हामी सवैले इनका आज्ञामा रहनू परने छ. " यती भनेर त्यो त्रिजटा चूप लागी. अरू राक्षसीहरू पनी चूप चाप भयेर मुखामुख गरदै यताउती लागे.

बिचरी सीताजी रामचन्द्रलाई संझेर फेरी रुन लागनू भयो. रुँदा रुँदै वहाँका मुखार विन्दबाट यस्ता बोली निस्के, " हे नाथ !

मलाई यस राक्षसका फन्दाबाट कहिले छुटाउनू हुन्छ ? हा दैव ! मैले यो दुःख भोगनू कती बांकी छ ? दीन दयालो ! मेरो चांडै रक्षा गरनू होस." यसो भनदा भनदै छिन छिनमा सीताजीका हृदयमा शोकको वेग बढदै गयो.

समयले भयङ्कर रूप धारण गऱ्यो. विरहविधुरा सीताजी शोकका मारे आफनै चूल्ठाको पाशो लगाई अशोक वृक्षमा झुण्डिनलाई तयार हुनू भयो. सीताजीको त्यो अवस्था देखी हनुमानले पनी अब बिगार परन आँट्यो भन्ने विचार गरेर रामचन्द्रले दिई पठायेको औंठी सीताजीकै काखमा परनेगरी खसाली दिये. त्यो रामनामाङ्कित औंठी अकस्मात् आफना काखमा गिरेको देखदा सीताजीलाई आश्चर्य लाग्यो. त्यो औंठी हातमा लियेर वहांले मन मनै भननू भयो, "अहो ! ! यो उनै प्राणाधार रामचन्द्रका करकमलमा रहने औंठी हो. आज यसलाई कसले यहां ल्यायेर फयांकी दियो ? न जाने राक्षसको माया हो कि सत्य कुरा हो ?" सीताजीका मनमा तेसवेला अनेक तर्क वितर्क उठे; तर आखीरमा केही निश्चय भयेन र सीताजीले बडो उत्सुकता साथ भननू भयो, "यो औंठी यहाँ कसले फयाँकेको हो ? त्यो व्यक्ति मेरा अगाडी खडा भयेर यथार्थ बताओस."

यती भनेर सीताजी हडबडाउँदै यताउती हेरन लागनू भयो. हनुमान् पनी वृक्षबाट रामका गुण गाउँदै सीताजीका अगाढी आयेर प्रणाम–पूर्वक निवेदन गरन लागे.

## श्लोक

" म हूँ श्रीरामको दूत, वहींबाट पठाउँदा;
आयें सागर नाघेर, झूटो छैन कुनै कुरा. १
औंठी चिन्ह दिनू भन्ने, आज्ञा श्रीरामको थियो;
चढायें आज सो माई, ! काम मेरो पुरा भयो. " २

हनुमानका ई वचन सुनी सीताजीले आश्चर्य साथ भनन् भयो, " तिमी वानर, रामचन्द्र मानीस, वानर र मानीसको सम्बन्ध कसरी भयो र वहाँले तिमीलाई यो औंठी दियेर पठाउनू भयो ? यस कुरामा मलाई पत्यार लागदैन. यो ता खाली मलाई धोखा दिनाका निमित्त राक्षसले माया फैलायेको जस्तो लागदछ. "

सीताजीले आफना कुरामा पत्यार नगरदा हनुमान् एक छिन चूप भये. फेरी उनले, रामचन्द्रले सुग्रीव सँग मित्रता गरेको, वाली-लाई मारेको र वानरलाई दिशा दिशामा पठायेको सारा वृत्तान्त बताये. सो सबै कुरा सुनी सके पछी ई साँच्चै नै रामचन्द्रका दूत रहेछन भन्ने पत्यार पऱ्यो र सीताजीले अत्यन्त खुशी भयेर भनन् भयो, " हनुमन् ! तिमीले मेरो प्राण बचायौ. आज तेत्रो चार शय कोशको समुद्र नाघी श्रीरामचन्द्रको समाचार ल्यायेर मलाई सुनायौ. यस कुरारूपी शिशिर जलले मेरा मनको विरहाग्नि शान्त भयो. धन्य तिम्रो काम, धन्य तिम्रो बलवैभव. यस उपकारको प्रत्युपकार मबाट हुन शकदैन. यसको प्रतीकार म के गरूँ. त्रैलोक्य नै दिये पनी यसको बराबरी हुन शकदैन.

यस प्रकार सँग सीताजीले आफनू धेरै प्रशंसा गरेको सुनदा हनुमान्‌को उत्साह बढ्यो. उनी वहाँका अनुमतिले अशोक–वनमा पसे. वहाँ उनले धेरै मीठा मीठा फलहरू खाई असल वृक्षहरू उखेल्दै यता उती फ्याँकेर सारा त्यो वनै उज्जार पारी दिये. त्यो देखी तेस वनका रखवालाहरूले रावण सँग यो सब कुरा जाहेर गरे. रावणले पनी तेस वानरलाई मारी आऊ भनी फौज पठायो. हनुमान्‌ले पनी एक्लै लडी सम्पूर्ण तेस फौजलाई मारी दिये. फेरी रावणले अत्यन्त रिसायेर आफनू कान्छो छोरो अक्षयकुमारलाई धेरै फौजका साथ हनुमान् सँग लडन पठायो. उनले पनी तेसलाई सबै फौजका साथ मारी दिये.

कान्छो छोरो मरेको र धेरै राक्षसका फौजको पनी नाश भयेको देखी रावण रीसले छटपटाउँदै आफैं गयेर तेस वानरलाई मारदछू भनी हिंडन तयार भयो. तेस वेला उसको इन्द्रजित् भन्ने छोराले अघी सरेर विनति गर्‍यो, “ पिताजी ! म छँदा छँदै हजूरले कष्ट पाउनू परदैन. म एक्लै गयेर तेसलाई मारी आउँ छू. ” पुत्रको त्यो उचित साहस देखी रावण खूशी भयो; उसले इन्द्रजितलाइ वानर-वधका निमित्त बिदा दियो.

रावणको आज्ञानुसार इन्द्रजित् अनेक सैन्यका साथ अशोक वनमा आयेर हनुमान् सँग लडन लाग्यो. तेसले जती बाण हान्यो उतीलाई हनुमान्‌ले रोके, फेरी उनले उहींको, पर्यांकी रहेको एक चैत्यप्रासादका लोहदण्डले ठोकदै इन्द्रजित्‌का साथमा आयेका फौजलाई मारी दिये, इन्द्रजित्‌लाई पनी–खूब वीरताका साथ लडेर–थकित

गरायें. जब इन्द्रजित्‌ले यो वानर साधारण रहेनछ भन्ने बुझेथ्यो अनी हनुमान्‌का उपर अस्त्रहरूको प्रहार गरन लाग्थ्यो. हनुमान्‌ले पनी तेसले प्रहार गरेका अस्त्रलाई अरू अस्त्र प्रहार गरी हटाये- यस्तै तरहले युद्ध हुँदा हुँदा इन्द्रजित् थाक्यो. अन्त्यमा यस वानर सँग लडी साध्य रहेनछ भन्ने विचार गरेर उसले हनुमान्‌का उपर ब्रह्मास्त्रको प्रहार गऱ्यो. अस्त्रको मर्यादा राखनू परछ भन्ने र रावण सँग भेट पनी गरनू परछ भन्ने अभिप्रायले हनुमान् पनी बद्ध जस्ता भये, इन्द्रजित्‌ले उनलाई समाती सरासर रावणका सभामा लगेर खडा गरायो.

सभामा पुगना साथ हनुमान्‌ले त्रैलोक्य विजयी रावणलाई रत्नासनमा वसेको देखे. उसका चारै तिर ठूला ठूला युद्धमा नाऊँ पायेका राक्षसहरू वसेका थिये. रावणको ऐश्वर्य देखेर हनुमान्‌लाई ठूलो विस्मय भयो. उनी केही वेर सम्म रावणका प्रभावले मोहित भयेर मनै मन यस्तो विचार गरन लागे, कि "यस राक्षसराजको बडो आश्चर्यको रूप, धैर्य, सत्व र तेज देखिन्छ. यस उसले यो अधर्मी नहुँदोहो ता सारा संसारको मालिक हुन योग्य थियो. यसको प्रताप र तेज अझ कंती भयेको ता देखिदैन. तर ऐश्वर्यका मदमा परेर यसले सदाचार आदि गुणको त्याग गरेको बुझिन्छ. खेद यही छ कि यस्ता ठूला पदमा पुगेका यसको अधःपात हुने वेला भयो. व्यसनीलाई कसले बचाउन शकछ?" यस्ता मनका उच्च तरङ्गमा हनुमान् मग्न थिये. यसै वेला बाँधियेका हनूमानलाई देखर रावणले फूर्ती साथ भन्यो—

### श्लोक.

"रे रे मर्कट ! दुष्ट सागर तरी आयेर सारा वन,
नाशी वृक्ष उखाडि खाडि सरि नै पारेर झाडीकन;
मेरो पुत्र समेत फौज उतिको मारीस तैले किन ?
यो सम्पूर्ण बता पठाइ कसले आईस के के लिन ?" ३

रावणको यो क्रोधपूर्ण गर्जना सुनेर हनुमान्‌ले पनी खूब धृष्ट भयेर भने—

"रे रे राक्षसराज ! आज जसकी पत्नी हरी चोर झैं,
भागी, घोर समुद्र तारि तिमिले ल्यायौ यहाँ गुप्त भै;
सोही श्रीरघुनाथको म हनुमान् भन्ने कुनै दूत हूँ,
सीता भेटि यहाँ कुरा गरु भनी आयें अरू के कहूं ? ४
पाकेका फल मूल देखि बहुतै इच्छा भयो खानमा,
बच्चा वानरको थियें रुख चढें उफ्रेर उद्यानमा,
ठूलो सैन्य मलाई मारन भनी आयो र मारी दियें,
आत्मत्राण गरें सवै सँग लडी दोषी म के ले भयें ? . ५"

यस्ता प्रकारले आफनू हाल वतायेर उनी रावणलाई शान्तिपूर्वक समझाउन लागे, "राजा रावण ! श्री राम सँग विरोध न गर. अझ केही बिग्रेको छैन. सीताजीलाई आदर-पूर्वक लगी सुम्पी देऊ. आफुले गरेका अपराधको क्षमा गराऊ. व्यर्थ आफनू र सारा राक्षसकुलको नाश किन गराउँछौ ? श्रीराम दयालु हुनू हुन्छ. वहाँ बाट शरणको मरण कदापि हुने छैन. जाऊ पौछा पर."

काल नजीकै आई पुगेको विपरीत बुद्धि–दुष्ट राक्षसका हृदयमा हनुमान्‌को उक्ति वज्र जस्तो लाग्यो. झन रिसायेर उसले उत्तिखेरै यस वानरलाई "लौ काट" भन्ने आज्ञा दियो. तेसै सभामा बिभीषण आदि धर्मात्माहरू पनी बसेका थिये. उनीहरूले अर्काको दूतलाई मारनू राज नीतिमा निषिद्ध छ भन्ने कुरा समझाये. तेसमा रावणको चित्त बुझ्यो. उसले आज्ञा दियो कि उसो भये तेसका पुच्छरमा आगो लगाई पुछर ठूटो पारेर छोडी देऊ. किन भने वानरका पुच्छरैमा मान हुन्छ, पुच्छर डढे पछी आफैं यो मुर्दा बराबर बनदछ अनी लिंडो पुच्छर लियेर आफना मालिक कहाँ जाओस.

रावणको आज्ञा पाउना साथ तहाँ बसेका राक्षसहरूले हनुमान्‌को पुच्छरमा कपडा बेह्रेर घिऊतेलमा भिजाई आगो सल्कायेर छोडी दिये. हनुमान्‌ले पनी त्यो बल्दो पुच्छर हल्लाउँदै लङ्का–राजधानीका छाना छानामा उफ्रेर सीताजी राज भयेको अशोक बाटिका र विभीषणको घर बाहेक सारा राक्षसहरूका घर घरमा आगो लगाई दिये. तेस आगाले गरदा सारा लङ्का शहर बलन लाग्यो. राक्षस मण्डलीमा बडो हाहाकर पऱ्यो; कोही भागन लागे; कोही बालबच्चालाई बचाउन लागे; कोही धन संपत्ति जल्यो भनी छट पटाऊन लागे; कोही आगामा परी पाकन लागे; कोही रुन लागे; कोही कराउन लागे.

यस्ता प्रकारले त्यो वेला राक्षसको प्रलयजस्तो देखियो. यती गरदा पनी हनुमान्‌लाई कसैले पक्रन शकेन. वहाँ पछी हनुमान्‌ले समुद्रका पानीले पुच्छरको आगो निभाये. केही बेर थकाई मारी

सीताजीका समीपमा गयेर उनले सबै लङ्का जलायेको हाल विस्तार गरे. सो सुनदा सीताजी पनी अत्यन्त प्रसन्न हुनू भयो.

यस पछी हनुमान्‌ले सीताजी सँग "बिदा पाऊँ" भनी बिन्ती गरे. सीताजीले उनलाई बिदा दियेर भनन् भयो, "उपकारी महाबीर! मेरो हाल तिमीले देखे सम्म श्रीरामचन्द्रका हजूरमा सब विनति चढाये. जसरी हुन्छ चाँडो गरी मलाई यस राक्षसका हातबाट छुटाउने उद्योग गराये. तिमी यहाँ आई म सँग भेट गरेको श्रीरामलाई सहसा पत्यार होवैन. यस निमित्त म यो आफना शिरको चूडामणि तिमीलाई दिन्छू. फेरी यौटा रहस्य कुरा पनी म बताउँछू. 'एक दिन चित्र-कूटमा रामको र मेरो एकान्त थियो, तेस वेला यौटा कागले मेरा गोडामा ठुँगी रगत निकाल्यो. सो देखी करुणामूर्ति श्रीरामले एक तृण लियेर तेस कागलाई हानन् भयो. तेस तृण बाट बचन भनी त्यो काग चौधै भुवन घुम्यो, तै पनी शरण लिने कोही नपाउँदा वहींका चरणामा परी क्षमा माग्यो र आफना वासमा गयो. सोही करुणा लिई मलाई लगी बक्सिन्यैछ.' यो कुरा पनी बिन्ती गरी दिये. ई दुई कुराबाट वहाँलाई अवश्य पत्यार हुनेछ." यती भनी सीता-जीले हनुमान्‌लाई आफनू शिरो-मणि दिनू भयो. त्यो मणि लियेर सीताजीका पाउमा दण्डवत् गरी हनुमान् पनी तेताबाट फरके.

यता, अङ्गद आदि वानरहरू पनी समुद्रका किनारमा हनुमान् कहिले आउलान भनी उतै तिर एक दीठ गरेर हेरी रहेका थिये, जब हनुमान् आफनू काम सिद्ध गरी तहाँ आई पुगे थे, अनी

सारा वानर उनको मुख देखदैमा इनले काम सिद्ध गरी आये भन्ने बुझी, खुशी हुँदै, कोही नाचन र कोही उफ्रन लागे, कोही हनुमान्को पुच्छर चुम्बन गरन लागे. ती आफना साथीहरू खुशी भयेको देखी हनुमान्ले उनीहरूलाई लङ्काको सारा वृतान्त बताये. यसले उनीहरू झन खुशी भये.

तहाँ पछी अङ्गद, हनुमान्, जाम्बवान्, आदि सारा वानरहरू समुद्रका किनारबाट फरके. उनीहरू मधुवन नाउँ गरेको सुग्रीवका बगैंचाको फलफूल खाँदै रामचन्द्र भयेका ठाउँमा आई पुगे. त्यो सबै फौज खुशी हुँदै फरकेको देखदा श्रीरामले कार्य सिद्ध भयेको जानी अत्यन्त हर्ष प्रकट गरनू भयो. तेसै वेलामा हनुमान्ले रामचन्द्रका पाउमा दण्डवत् गरेर सम्पूर्ण वृतान्त सुनाये. सीताजीले दिई पठायेको चूडामणि पनी उनले श्रीरामलाई अर्पण गरे. त्यो देखँदा रामचन्द्रलाई यस्तो हर्ष भयो कि वहाँले तत् क्षणैमा अघीका सबै दुःख विर्सनू भयो र झटपट हनुमान्लाई प्रेमले अङ्कमाल गरी भननू भयो, "प्रिय वत्स! तिम्रो बल, बुद्धि र साहसलाई धन्यवाद छ. आज म तिमी देखी अत्यन्त प्रसन्न भयें. यसको बदलामा बक्सिस दिने कुरा अहिले म सँग केही छैन. तिमी चिरञ्जिवी भये, तिम्रो कल्याण होस." धन्य हनुमन्! वीर—शिरोमणि तिमी नै रहेछौ. तिमीले आज सारा रघुकुलको उद्धार गर्‍यौ.

**सुन्दर काण्ड सकियो.**



# युद्ध काण्ड.



हनुमान् द्वारा सीताजीको पत्ता लागे पछी सुग्रीवका सल्लाहले असंख्य वानरको सैन्य लियेर लङ्कामा चढाँई गरन भनी रामचन्द्रले प्रस्थान गरनू भयो. बाटामा शुभ शकुनहरू देखिन लागे, तेसबाट कार्यसिद्धिको अनुमान गरदै जाँदा जाँदा सारा सैन्य समेत श्रीराम समुद्रका किनारमा पुगनु भयो. वहाँ सबैको समुद्र तरने विषयमा सल्लाह हुन लाग्यो. उसमा श्रीरामले सुग्रीवलाई प्रेमपूर्वक भननू भयो, "मित्र ! यस ठाउँमा सबैले अप्रमत्त भयेर वसनू परद्छ, तपाईं सैन्यको प्रवन्ध सब ठीक ठीक मिलाउनू होस."

उता, रामचन्द्र असंख्य वानरको सेना लियेर लङ्कामा चढाँई गरनलाई समुद्रका किनारमा आई पुगेको खबर लङ्काभरमा फैलियो. तेसले राक्षसहरूमा पनी बडो खल बल परन लाग्यो. गल्ली गल्लीमा, घर घरमा रामचन्द्रको अनेक चर्चा हुन लाग्यो. कोही भनद्छन कि जसको यौटा दूतले सारा लङ्कालाई निर्धक्क सँग खरानी पाऱ्यो; तेस वीरका सैन्य मा त्यो दूत भन्दा बलीया कति चतुर योद्धा होलान ? सैन्य कस्तो होला ? तेस सैन्यका सेनापतिहरूको कस्तो पराक्रम होला ?

स्वयं रामचन्द्र कत्तीका पराक्रमी होलान ? अब उनले हामीलाई केही गरे पनी छोडने छैनन. यस दुर्बुद्धि रावणले गरदा सारा राक्षस—कुलको नाश हुन आँटयो अब यसको उपाय केही छैन, इत्यादि कुरा मात्र लङ्कावासी राक्षसहरूका मुखबाट निस्कन्थे. रावणका दरबारमा पनी यो समाचार पुग्यो, सो सुनेर लङ्केश्वर रावणले ठूलो सभा गऱ्यो. प्रहस्त, महापार्श्व, आदि बडा बडा सेनापतिहरूले उसको अभिप्राय अनुसार वानरको सैन्यका साथ लडन कम्मर कसे. सबै तिर युद्धको तयारी हुन थाल्यो.

एकदिन मौका पारेर मन्दोदरीले आफना पति रावणसँग भनिन " आर्यपुत्र ! सीताका लोभले गरदा हजूरले सारा लङ्काको नाश गराउन आँटनू भयो. यस दुराग्रह लाई छोडी सीतालाई रामचन्द्रका हातमा सुम्पी दिनू होस. हुजूरका निमित्त देवता दानवादिका हजारौं दिव्यकन्या मिलन शकदछन भने तेस झुत्री मानुषीलाई राखनाले हाम्रो कल्याण अवश्य हुने छैन. " रावणले मन्दोदरीका ई कुरा सुनदै सुनेन. रामचन्द्र आये भने उनी सँग नलडी छोडदिन, देवताहरूलाई ता मैले जितेको छू भने जाबो मानीसले मलाईके गरदछ भनदै रावण झन वीरता प्रकट गरन लाग्यो. बिचरी मन्दोदरीको केही जोर चलेन र उनी चूप लागिन.

एकदिन बेहान आफनी आमाले पठायेका विभीषण रावणका राजसभामा आये. वहाँ उनले सबैका अगाडी रावणलाई संझायेर भने, " महाराज ! हजूरले सीताजीलाई ल्याउँदा सारा लङ्काभरका राक्षसहरूको संहार हुन आँट्यो. समुद्रका किनारमा अनेक वानरको

सैन्यका साथ वैरी रामचन्द्र आईसके, उनी बडा वीर छन भन्ने सुनिन्छ. लडाईंमा केही गरी हारियो भने हामी सबैको सर्वनाश हुने सम्भव छ. फेरी लडाईंमा सधैँ विजय नै हुन्छ भन्ने पनी निश्चय छैन. युद्धमा धेरै मिलेर यौटालाई मारदछन; यौटाले पनी धेरै लाईमारद छ. यस कारण रामचन्द्र सँग वैरभाव नराखनू होस. पर-स्त्री हरण गरना ले ठूलो पाप लागदछ. अधर्मी काममा प्रवृत्त हुनू यो कुनै वीरता होयिन. यस निमित्त जसरी हुन्छ सीताजीलाई रामचन्द्रका समीपमा पुऱ्याई दिनू होस. उनी बडा क्षमाशील छन. भन्ने सुनिन्छ. यस उसले आजसम्म भयेका कुरामा उनी विशेष ध्यान दिने छैनन."

विभीषणका ई कुरा सुनी रावणले रिसायेर भन्यो, "विभीषण बडो बुद्धिमान् छ भन्ने मेरो विश्वास थियो, तर यो बडो कातर रहेछ, सोकराको आजै थाहा भयो. यो अत्यन्त खेदको कुरा छ कि मेरो भाईले पनी गाइनेको झैं रामैको प्रशंसा गरनू. शत्रुले घेरेका बेलामा भाईले ता युद्धको बन्दोबस्त गरी वैरी सँग लडेर उसको नाम पनी रहन दिनू हुँदैनथ्यो, यो ता झन उल्टो वैरीका नै शरणमा जा भनी उपदेश दिन लागी रहेछ. हे मूर्ख! के तँलाई थाहा छैन कि रावण आफनू टेढिन लागेको भाग्यलाई पनी आफना खड्गका धारले सोझो तुल्याउन शकदछ? धिक्कार पाजी! तँ जस्ता भाईबाट मेरो केही काम हुँदैन. तँ शत्रुको पक्ष:लियेर मलाई धोका दिन आयेको रहिछस. अरू भये अहिले नै मारी दिने थियें, परन्तु भाई भइस के गरू? अब तैंले यहाँ वसनू पनी परदैन तेरा महात्मा रामचन्द्रका साथमा जा." यती भनेर उसले विभीषणलाई एक लात दियो.

बिचरा साधु महात्मा विभीषणले दाज्यूलाई कुमार्गबाट हट्या-उनाका निमित्त उचित सल्लाह दिंदा उल्टो लात खानू पऱ्यो. यस कारण उनी साह्रै खिन्न भये. अन्त्यमा राक्षसकुलको कतैबाट कल्याण नहुने देखी उनले रावण सँग भने, "महाराज! मेरा कुरा न-सुनी हजूरले मलाई उल्टो लात दिनू भयो, तर मेरा वचन पछी गला लागने छन. हजूरको कल्याण होस. हजूरका आज्ञानुसार म आज उनै भक्तवत्सल शरणागतप्रतिपालक रामचन्द्रका शरणमा जान्छू. म बसनाले हजूरको बिगार हुन्छ भने भई गयो. हजूरका चरणमा मेरो अन्तिम दण्डवत् छ."

यती भनेर आफना चार मन्त्रीलाई साथमा लिई बिभीषण राम-चन्द्रका शरणमा आये. रामचन्द्रले पनी तेसरी आफनू शरणमा आयेका विभीषणलाई आदरपूर्वक नगीचमा राखी उनको वृत्तान्त सोधनू भयो. विभीषणले पनी भक्ति-पूर्वक रामचन्द्रका पाऊमा प्रणाम गरी आफनू वृत्तान्त बतायेर विन्ती गरे, "मेरो शरण लिनू होस. हजूरको जे काम गरनू परछ उसमा तयार रहनेछू. म हजूरको दास हूँ. मेरो रक्षा गरनू होस. वैरीको भाई हो पछीबाट मलाई यसले धोका देला भन्ने शङ्का ममाथी नरहोस. मेरा उपर विश्वास गरनू होस."

विभीषणको यस्तो कातर प्रार्थना सुनेर इनलाई लिनाले मेरो लाभै हुनेछ भन्ने विचार गरी शरणागतवत्सल रामच-न्द्रले उनलाई स्वीकार गरेर भननू भयो. "भयातुर बिभीषण! मैले तिम्रो शरण लियें, रावणको डर नमान. केही दिनमा रावणलाई

मारेर लङ्काको राज्य समेत तिमीलाई नै दिलाउँला." यस्तो श्रीरामको प्रतिज्ञा सुनेर उनी हर्षित भये. तेस दिन देखी उनी रामचन्द्रकै साथमा रहन लागे.

यहाँ पछी रामचन्द्रले नल, नील, सुषेण, आदि वानर द्वारा समुद्रमा पूल बाँधनू भयो. सो तयार भये पछी तेतैबाट सारा वानरको फौज अगाध समुद्रलाई पार गरी लङ्का शहरमा पुग्यो. अब लङ्कामा आई पुग्यौं भन्ने ठानेर सारा वानरहरू प्रसन्न हुन लागे. तेस वेला तिनीहरूको भारी आनन्दको कोलाहल मच्चियो. त्यो सबै सुनदा राक्षसहरूले रावणका अगाडी गयेर असङ्ख्य वानरको फौजका साथ रामचन्द्र समुद्र तरी लङ्कामा आई पुगेको समाचार सुनाये.

यो खबर पाउना साथ रावणले फेरी सभा गऱ्यो र सबैका अगाडी भन्यो, "आज यो बडो लज्जाको कुरा छ कि ऐश आराममा आसक्त र प्रमत्त भयेका तिमीहरूले बढन लागेका शत्रुको गति रोकेनौ, अगाडी नै दोष निवारण गरने उपाय कुनै भारदारले मलाई बतायेनौ, फेरी तिमीहरूले आफनू नूनको सोझो पनी गरेनौ." यो सुनेर वीर इन्द्रजित्ले भन्यो, "महाराज! हामीलाई वनचारी वानरको डर छैन. जसदेखी देवता पनी डराउँछन उनलाई वानर र मानीसको के डर?, हामी सहजैमा वानरका सैन्यको ध्वस्त गरन शकदछौं. यसमा हजूरले केही पनी संदेह माननू परदैन."

यस पछी फेरी सभाका बीचबाट उठेर अतिकाय भन्ने बुद्धिमान् राक्षसले "रावणलाई सीता त्याग गरनूहोस र देशको रक्षा गरनूहोस

भन्ने प्रार्थना गऱ्यो," तर अभिमानी रावणले तेसका वचनमा वास्तै राखेन. उसले शुक र सारण भन्ने दुई राक्षसलाई रामका फौजको गुप्त हाल ल्याउनू भनी पठायो. ई दुई गुप्तचर वानरका छाउनीमा पकडिये. अन्त्यमा श्रीरामले दया गरी दुवैलाई छोडी दिनू भयो. ती दुई गुप्तचरले आयेर रावणलाई असंख्य वानर–सैन्यको व्यवस्था आदि सब बताये, फेरी रामचन्द्रको दया पनी बताये. श्रीरामले आज्ञा गरनू भयेको यो कुरा पनी बताये कि–" हे रावण! तैंले जुन पुरुषार्थका बलले मेरी महारानीको अपहरण गरीस, त्यो पुरुपार्थ र सो बल सारा फौजा समेतलाई लियेर मलाई देखाउन आयिज."

यती भये पछी रावणले आफना अफिसरहरूलाई फेरी जम्मा गऱ्यो र राजसभामा वस्यो. यसै वेला रावणको बूढो मन्त्री माल्यवान्ले उसलाई भन्यो, " हे लङ्केश्वर! राजाले सधैं हितवादी पण्डितहरूको वचन सुननू परछ. मैले हजूरको धेरै कालदेखी सेवा गरेको छू. हजूरको कल्याणमा नै मेरो पनी कल्याण छ. म हजूरैको शुभाचिन्तक हूँ. मेरा विचारमा अहिले राम हजूर भन्दा धेरै बलीया छन. अहिले उनी सँग सन्धि गरनू नै योग्य छ. रामको धर्म पक्ष र हजूरको केही अधर्म पक्ष छ. सज्जन र धर्मात्माहरू रामैको विजय चाहन्छन. यस्त वेला राम सँग लडाई गरन उचित परोयिन. हजूर विवेकी हुनू हुन्छ, यसमा पूरा विचार गरनू होस." माल्यवान्का ई वचन सुनी रावण क्रोधले पूर्ण भयेर उसलाई भनन लाग्यो, " हे माल्यवान्! तिम्रो सत्व केही रहेनछ. अब तिमी ज्यादा बूढा भई सकेछौ. यसैले

तिमी कुनै कुराको पनी निर्णय गरन शकदैनौ. तिम्रो परामर्श मलाई चाहिंदैन. जाऊ घरमा राम्ररी वस. वहाँ गयेर बराबर हाम्रा जीतबाजीको समाचार सुने." यती भनेर किल्लाको रक्षाका निमित्त रावणले अफिसरहरू लाई खटायो.

यता समुद्र तरेका दिन सारा फौज लङ्का बाहिरै वस्यो. भोली-पल्ट रामचन्द्रले सुग्रीव, अङ्गद, हनुमान्, आदि वीर वीर वानरहरू सँग कर्तव्य कुराको सल्लाह गरनू भयो. तेसमा सबैको यही निश्चय भयो कि पहिले अङ्गद्लाई दूत बनाई रावणका समीपमा पठाऊँ. उनीले हाम्रो मन्तव्य रावणलाई संझाउन. तेसमा ऊ के जबाब दिंदो रहेछ, अनी जें गरनू परने गरौंला. सबैको राय अनुसार अङ्गदलाई रावणका समीपमा पठाउने निश्चय भयो. रामचन्द्रबाट अङ्गद्लाई बोलाई भननू भयो, "हे वीर! रावणकाहा गयेर तिमिले योकुरा भननू कि— हामीहरू नभयेको वेला पारी तैले मेरी महारानीलाई चोरेर ल्यायिस, तेसको उचित दण्ड दिनालाई म यहाँ आयेको छू. अझ पनी तँ सोझो भयेर म कहाँ आई शरण परदछस भने म सब तरफबाट तँलाई माफी दिन्छू. मेरी महारानीलाई तुरुन्त लियेर आयिज. यदि तँ लडना लाई नै उद्यत छस भने मेरा हातमा धनु तयार छ. सब आफना भाई छोरा हरूलाई समेत साथमा लियेर लडनालाई अघी सर, यो तेरो पुरुषार्थ देखाउने समय उपस्थित भयोकोछ.

रामचन्द्रको आज्ञा पाउना साथ युवराज अङ्गदजीले लङ्कामा गयेर रावणलाई श्रीरामको विचार सब सुनाये, तर उसले उनका

कुरामा विशेष ध्यान दियेन. अङ्गदले रामचन्द्रका समीपमा आयेर वहाँको सबै हाल बताये. तेसबाट सबैलाई अब रावणसँग नलडी हुँदैन भन्ने पक्का निश्चय भयो. सारा वानरहरू परखाल नाघी लङ्कालाई चारै तिरबाट घेरदै ढोका ढोकामा गई अनेक उपद्रव मच्चाउन लागे.

वानरले यस्तो उपद्रव गरेको देखी रावणले पनी तिनीहरू सँग लडनाका निमित्त धेरै सैन्य पठायो. दुवै पक्षमा तुमुल युद्ध हुन लाग्यो. यसै वेला सूर्य पनी अस्ताये. केही बेर पछी अन्धकारको छटा सारा युद्धभूमिमा फैलिन लाग्यो. रणभूमिमा उठेका धूलाले अली अली देखिने ताराहरू पनी ढाकिये. म राक्षस हूँ, म वानर हूँ, खडा होऊ, भन्ने वीर सिपाही हरूको ललकार लडाईमा चारैतिरबाट सुनिन लाग्यो. श्रीरामका शरले काटियेका राक्षसका टाउकाले युद्धभूमि खचा खच भरिन थाल्यो. जता रामका बाणको टङ्कार हुन्थ्यो उताको युद्धस्थल राक्षस–शून्य हुन्थ्यो. यस्तो भयंकर संग्राम धेरै बेर सम्म भयो. यसै बीचमा बुद्धिमान् इन्द्रजित् आफना वीर सिपा-हीका साथ रणभूमिबाट भाग्यो. सो भागेको देखी रावणले अनेक कुराबाट उत्साहित गराई फेरी उसलाई लडाईमा पठाउने काम गऱ्यो. तेस वेलामा लक्ष्मण र इन्द्रजित्को दारुण युद्ध भयो. इन्द्रजित्ले बडो कूटनीतिका हिसाब सँग लड्यो. अन्त्यमा असङ्ख्य प्रहारले लक्ष्मणलाई आहत गऱ्यो. फेरी राम सँग लडी वहाँलाई पनी युद्ध भूमिमा, व्यथित गरायो. वहाँ पछी ठूलो जय ध्वनि गराउँदै इन्द्रजित् आफना वासस्थान तिर गयो.

दुवै भाई आहत भयेर युद्ध—भूमिमा गिरेको देखी सुग्रीव आदि सारा वानरहरू शोकार्त र दीन भये. समुद्रका बीचमा जहाज फुटँदा यात्रीहरूको जे हाल हुन्छ उही हाल इनीहरूको भयो. केही बेर पछी दुःखले व्याकुल भयेका सुग्रीवलाई आश्वासन दिंदै विभीषणले भने "हे वीर ! लडाईंमा हडबडाउनू योग्य छैन. वीरहरूका गति दुवै मात्र हुन्छन; लडाईंमा विजय वा मरण. हे मित्र ! एक छिन परखनू होस. रामचन्द्र चाडैनै सचेत हुनू हुनेछ. अहिले तपाईंले ज्यादा शोक गरदा पल्टन बिग्रला तेसको बचाऊ गरनू होस." विभीषणका ई वचनले सुग्रीवको मन शान्त गरायो. केहीबेर पछी श्रीराम सचेत हुनू भयो र निश्चेष्ट भाईलाई देखेर अनेक प्रकारले विलाप गरन लागनू भयो.

यसै वेला बिभीषण श्रीरामका समीपमा पुगे. उनलाई इन्द्रजित् भन्ने ठानेर सारा वानर सैन्य यत्र तत्र भै भागन लाग्यो. पल्टनमा खलबल हटाउनाका निमित्त सुग्रीवले अगाडी बढेर सिपाहीहरूलाई संझायेर भने, " हेर ई विभीषण हुन. तिमीहरू कातर जस्ता भयेर किन डराउँछौ ? शरीरधारी भयेर जन्मे पछी मरण अवश्य हुन्छ. घरमा, वनमा, रणमा, जहाँ भये पनी देहीहरूले एक ठाउँमा पक्का मृत्युवश हुनू परदछ." सुग्रीवका ई बचनले पल्टनमा पनी शान्ति फैलियो. केही बेर पछी दुवै भाईजस्ताका तस्तै भये. यो खबर पाउँना साथ राक्षसेश्वर रावण फेरी युद्धको तयारी गरन लाग्यो.

राम, लक्ष्मण र सारा वानर सैन्यलाई ध्वस्त गराई रावणको जय गराउनाका निमित्त धूम्राक्ष र अकम्पन दुई वीर सेनापतिहरू

युद्धभूमिमा पालै सँग आयेर लडन थाले. उनीहरूका पराक्रमले गरदा वानरको फौज तितर बितर हुन लाग्यो. यसरी धूम्राक्षले र उस पछी अकम्पनले सारा वानरको फौज फाँडेको देखी हनुमान् अगाडी बढेर लडन लागे. अन्त्यमा उनले एक एक गरी ई दुवै राक्षसलाई चूर्ण पारेर समरमा गिराये. ती दुई गिरेको देखी राक्षसहरू आफ्नू ज्यान बचाउनाका निमित्त दौडे.

धूम्राक्षर अकम्पन एक एक गरी लडाईमा गिरेको खबर सुनी रावण क्रोधले व्याकुल भयो. पछीबाट यसले लडाईमा विजय प्राप्त गरन शकछ भन्ने ठानी आफनू खास दाहिने हात जस्तो वीर प्रहस्त लाई ठूलो सैन्यका साथ रणभूमिमा पठायो. सारा युद्ध भूमि फेरी राक्षस-सैन्यले पूर्ण भयो. राम र रावणका निमित्त प्राण छोडन तयार भयेका वानर र राक्षसहरूको भयङ्कर लडाई पऱ्यो. वानरको सेना राक्षसहरूका खड्गमा प्रतिविम्बित हुनाले हजार गुना ठूलो देखिन्थे. वानरका प्रहारले पीडित भयेर पनी अभिमानी राक्षसको सेना संग्रामबाट हटेन. मरेका हाती घोडा र सिपाही हरूका रगतले ठूला ठूला नदीहरू बनन थाले. यसै गरी लडाई हुँदाहुँदै वानरका सेनापति नीलले प्रहस्तलाई मारे.

सेनापति प्रहस्त मरे पछी समस्तसामन्तहरूका साथ स्वयं रावण लडाई गरन आयो. तेसको ठूलो फौज आफू तिर आउँन लागेको देखी श्रीरामले विभीषणलाई सोधनू भयो, "हे सौम्य ! अहिले हामीसित लडन अग्रसर भयेको यो को हो !" यो रामको

वचन सुनी विभीषणले भने, "हे राम! यो ठूलो सैन्य रावणको हो. उनै विश्वविजयी तपाईं सित लडन आउन लागेका छन." यो सुनेर श्रीराम पनी युद्धका निमित्त सन्नद्ध हुनू भयो.

फेरी संग्रामको प्रारम्भ भयो. रावणका तीक्ष्ण शरले वानरको फौज ध्वस्त हुन लागेको देखेर सुग्रीव रावणका उपर जाई लागे. रावणले पनी तीखा शरले सुग्रीवलाई घायल गरायो. सुग्रीव घाइते भये पछी वीर लक्ष्मण रावण सित लडन अग्रसर भये, तर यसै बीचमा हनुमान् रावण सँग लडन लागे. रावणले उनमाथी आफनू पुरुषार्थ देखाउँन बाँकी राखेन. अन्त्यमा हनुमान्ले रावणका हातको धनुर्बाण ठोक्रो खोसी टुक टुक पारेर फाली दिये. अनी उनी दुईको बाहु युद्ध (पहल मानी) चल्यो. रावणले पनी हनुमान्लाई एक ठूलो मुष्टि प्रहार गऱ्यो. यस प्रहारले हनुमान् एक छिन काँपे. उनले पनी रावणलाई एक बद्धमुष्टि जमाये. यस वज्रमुष्टीले रावण एक छिन व्याकुल भयो र हनुमानका वीरताको प्रशंसा गरन लाग्यो. यस पछी रावणको फेरी नील सँग युद्ध पऱ्यो. अन्त्यमा नील रावणका आग्नेयास्त्रले पीडित भई रणभूमिमा गिरे.

यस पछी धनुर्धारी लक्ष्मणले रावणलाई आफू सित लडन हाँक दिये. दुवैको धेरै बेर सम्म लडाई भयो. ठूला ठूला अस्त्र शस्त्र दुवै तर्फबाट प्रयोग गरिये. यसै बीचमा श्रीराम स्वयं अगाडी सरेर रावणसित लडन लागनू भयो. फेरी रामबाण रावणका उपर घूमन लागे. अन्त्यमा श्रीरामले रावणको

रथ राम्रै गरी ध्वस्त गराउनू भयो, तै पनी रावण वीरताका साथ लडदै थियो. तेसै वेला रावणका किरीट र धनु पनी जमीनमा गिरे. यो देखेर श्रीरामले उसलाई भनन् भयो, " हे राक्षस–राज ! लडाईंबाट तिमी थाक्यौ जाऊ, एक छिन घरमा विश्राम गरेर मन्दोदरी सँग केही कुराकहानी गरी फेरी लडन आऊ." यो वीरता गर्भित तिरस्कारयुक्त वचन सुनेर पनी रावण लडन उत्सुक भयेन. जुन रावणले कुनै लडाईमा आफनू पीठ फरकायेको थियेन, आज उही रावण रामका अगाडी खडा रहन नशकी मलिन मुख लायेर घर तिर फरक्यो.

यसरी आफनू गर्व भंग भयेको देखी रावण अत्यन्त दुःखी भयो. उसले दरबारमा पुगना साथ कुम्भकर्णलाई घोर निद्राबाट उठाउन सेवकहरूलाई पठायो. कुम्भकर्णको सहायता पाये पछी अवश्य राम–लक्ष्मणलाई जितदछू भन्ने रावणको पक्का विश्वास थियो, तर कुम्भकर्ण अत्यन्त निद्रालु हुनाले उसलाई उठाउन बडो कठिन पऱ्यो. अन्त्यमा धेरै उपायले उसको निद्रा भंग भयो. उठना साथ कुम्भकर्ण आफना दाज्यूकहाँ गयो. वहाँ गयेर उसले सम्पूर्ण लडाईको हाल एक एक सुनी रावणलाई भन्यो, " दाज्यैज्यू ! सीता हरेर तपांईले लङ्काको नाश गराउने उपाय गरनू भयेछ अगाडीबाटै यसको बचावटका निमित्त मन्त्रणा गरनू योग्य थियो. " कुम्भकर्णले भनेको यो अप्रिय वचन सुनी रावणले अत्यन्त क्रुद्ध भयेर भन्यो, " भाई ! तिमी वीर–व्रतबाट भ्रष्ट भयेछौ, नत्र यस्तो

कातर वचन किन गरदथ्यौ ? तिमीलाई लडन मन छैन भने गयेर फेरी सुत.

रावणको यस्तो वचन सुनी कुम्भकर्णले भन्यो, “ अब जे भये पनी भई गयो. म लडाईंमा नै जान्छू, तपाईं निश्चिन्त भयेर बसनू होस. एकलो कुम्भकर्ण गयेर सारा दुश्मनको सेनालाई फ्याँकेर आउँनेछ. यती भनेर ठूलो यौटा त्रिशूल हातमा लिई कुम्भकर्णले रणभूमि तिर प्रस्थान गर्‍यो.

उता ठूलो शरीर भयेको कुम्भकर्णलाई देखेर सारा वानरको फौज पनी खुशी हुँदै लडन भनी जमजमाउन लाग्यो. तर पर्वत समान तेस राक्षसका शरीरले धेरै वानरहरू पिंधिये. भयङ्कर कुम्भ-कर्णले सारा वानरको सैन्यलाई मथन गर्‍यो. वानरहरू तेसका अगाडी अडन नशकेर भागन थाले. फौजको यो अवस्था देखी वीरा-भिमानी अङ्गदले सारा सैन्यलाई ललकारेर भने, “ वीरहो ! तिमी-हरूले स्त्री झैं डरायेर भागनू उचित छैन. यस क्षण—विध्वंसी शरीरका निमित्त तिमीहरूले आफनै हातबाट अक्षय्य यश गुमाउन लाग्यौ. मन दृढ गेरर चाँडै फरक. शूरहरूको जीवन केवल कीर्तिका निमित्त मात्रको हुन्छ. खड्गै खड्गले खडा गेरको सिँढीबाट मुक्तिको द्वार खोलनू वीर पुरुषको कर्तव्य हो. पुण्यवान्‌ले मात्र युद्धमा शरीर फ्याँकन पाउँछन. श्रीराम र सुग्रीवका अगाडी तिमीहरूले जो प्रतिज्ञा गरेका छौ सो पनी पूरा गरनू परछ. ” यस्तो अङ्गदको वीर वचन सुनी सारा वानर-सैन्य फरकेर फेरी राक्षसहरूका साथ भयङ्कर युद्ध गरन लाग्यो.

कुम्भकर्ण अत्यन्त बलवान् र शूर वीर थियो. फेरी तेसले रण-भूमिमा वानरहरूलाई मूढे बलले पेलदै मत्ता हाती झैँ उपद्रव मच्चाउन थाल्यो. तेसको छाँट काँट देखेर यस दुष्टले धेरै वानरलाई मारन आँट्यो भन्ने भयले रामचन्द्र आफैं अघी सरी तेस सँग लडन लागनू भयो. कुम्भकर्ण पनी आफना सामर्थ्यले भेटे सम्म अनेक शस्त्र अस्त्रको प्रहार गरी धरै बेर सम्म लड्यो, तर आखीरमा रामचन्द्रका एक अमोघ बाणका चोटले फेरी नउठने गरी जमीनमा गिऱ्यो.

कुम्भकर्ण मरेको सुनी रावण शोक र सन्तापले अत्यन्त खिन्न भई धेरै विलाप गरदै भनन लाग्यो, “हे भाई ! तिमी विना मलाई संसार शून्य लागदछ, तिमी सामान्य मानीस द्वारा मारियौला भन्ने मलाई शङ्कै थियेन. तिमीले पनी मलाई छोड्यौ भने अब मेरा निमित्त संसार शून्य भयो. अब मलाई बाँचनाको प्रयोजन भयेन. भाई भनेको ठूलो धैर्यको रूप हो. उही पनी गयो भने अब बाँचेर के गरनू छ ?.”

रावणको विलाप सुनेर उसको वीरपुत्र त्रिशिरा लडन तयार भयो. उसका साथमा देवान्तक, नरान्तक, महोदर, र अतिकाय, इत्यादि ठूला ठूला वीर राक्षसहरू पनी हिंडे. इनीहरूले शरवृष्टि गरेर वानरी सेनालाई व्याप्त गराये. ठूलो युद्ध भयो. राक्षस राक्षसै द्वारा पिधिये. राक्षसहरूले आफनू र पराई चिन्हेनन. अन्त्यमा वालीपुत्र अङ्गदले नरान्तकलाई दलेर मारे. हनुमान् द्वारा देवान्तक र त्रिशिरा ई दुवै वीर मारिये. नीलले पनी ठूलो पराक्रम गरेर महोदरको बध गरे. अब महोत्साही अतिकाय लडन तयार भयो. यो बडो धर्मात्मा र

बुद्धिमान् भनी रावणका दरबारमा प्रख्यात थियो. यसका बाणवृष्टि-ले वानरको फौज अत्यन्त उद्विग्न भयो. यो देखेर स्वयं लक्ष्मण यस सँग लडन लागे. दुवैको ठूला ठूला अस्त्रद्वारा युद्ध भयो. अन्त्यमा लक्ष्मणका ब्रह्मास्त्र द्वारा यो ठूलो वीर पनी मारियो.

यसरी थोरै कालमा आफना धेरै अफिसर मरेको खबर सुनदा अत्यन्त रिसायेर रावणले ·आफनू छोरो इन्द्रजित्‌लाई लाखौं सैन्यका साथ लडन पठायो. इन्द्रजित् खूब वीर र पराक्रमी थियो. उसले तीखा तीखा बाण हानेर धेरै बानरलाई सोतर पाऱ्यो. तेसरी मेघनादले आफनू सैन्यलाई गिरायेको देखी लक्ष्मणलाई साह्रै रीस उठ्यो. उनी लाल लाल आँखा गरी धनुको टङ्कार गरदै तेसका अगाडी खडा भये. तिनलाई देखी मेघनादले गर्जेर भन्यो, हे मूर्ख! के तँ “कोशलदेशका राजा दशरथको छोरो होस? तेरो दाज्यू रामचन्द्र कहाँ छ? तेरा प्रसिद्ध वीर भ्रातृद्रोही सुग्रीव र बिभीषणहरू कहाँ छन? ई सबैलाई आज म एकलै मारूँला भन्ने इच्छा छ. जा चाँडै नै इनीहरूलाई डाकेर ले. उसमा पनी पहिले ता दुष्ट विभीषणलाई नै मारदछू. त्यो राक्षसकुलको शत्रु हो जो शत्रुपक्षमा गयेर मिल्यो.”

यती भनेर उसले लक्ष्मण लाई हजारौं तीखा विषालु बाणको प्रहार गऱ्यो. उनले पनी ती बाणलाई आफना बाणले बीचैमा काटेर उसमा थी आफना बाणको वर्षा गराये. तेसरी लक्ष्मणका बाण आफू तिर आई लागेको देखी. उसले पनी ती बाणलाई बीचैमा काटी अरू बाण थपेर लक्ष्मणको शरीर घायल गरायो. रगतले

मुछियेका लक्ष्मण फुलेको पलाश जस्ता देखिये. क्रोधले चूर भयेका लक्ष्मणले पनी उसमाथी यौटा यस्तो बाण हाने कि जुन बाण लागना साथ उसको पीडा खपन नशाकी मेघनाद् भईमा पछारियो. तेसै वेला फेरी चार बाण हानी लक्ष्मणले तेसका घोडा र सारथिलाई गिराई रथै समेत चूर्ण पारी दिये. यस्तो देखी अब यसले मलाई बाँकी राखने छैन भन्ने ठानेर मेघनादले लक्ष्मणलाई वीर–घातिनी शक्तिको प्रहार गर्‍यो. तेस शक्तिका चोटले बिचरा लक्ष्मणजी ढुन मुनिदै जमीनमा गिरी मूर्च्छित भये. सारा समरभूमिमा हाहाकार हुन लाग्यो. विस्तार विस्तार सन्ध्याको समय आये को हुनाले तेस दिनको युद्ध बन्द भयो.

सबै जना आफना वासमा आयेका र लक्ष्मणजी नआयेका हुँदा रामचन्द्रलाई उनको विशेष चिन्ता परन गयो. बाहिरी अन्धकारका साथ वहाँका मनमा पनी अन्धकारको पर्दा पर्‍यो. केही बेर पछी मूर्च्छित भयेका लक्ष्मणलाई आफना पीठमा बोकी हनुमान् रामचन्द्रका अगाडी आई पुगे. उनले मूर्च्छित लक्ष्मणलाई विस्तारै सुख शय्यामा राखेर सारा दुर्घटनाको वर्णन गरे. भाईको त्यो अवस्था-देखदा रामचन्द्रलाई ठूलो शोक पर्‍यो. अरू सारा वानरहरू रामचन्द्रले शोक गरेको देखी परस्परमा अनेक तर्क वितर्क गरन लागे. आखीरमा सञ्जीविनी बूटी खोजनका निमित्त हनुमान्लाई हिमालयमा पठाउनू परदछ भन्ने सबैको निश्चय भयो र श्रीरामले पनी यस कुराको भार हनुमान्लाई दीनू भयो ।

रामचन्द्रको आज्ञा पाउनाका साथ हनुमान् हिमालय तिर दौडे बीचमा विघ्नकारी कालनेमि नामक राक्षसले उनलाई अलमल्याउने यत्न गरन लाग्यो, सो कुरा बुझेका दूरदर्शी हनुमान्ले उसलाई तहीं मारेर सञ्जिविनी बूटी नचिन्हेका हुनाले हिमालयको यौटा वनस्पति—पूर्ण थुंको नै बोकेर ल्याये.

यता धेरै बेर सम्म पनी हनुमान् नआई पुगदा लक्ष्मणलाई बचाउने अर्को उपाय केही नदेखी शोकले व्याकुल भयेका रामचन्द्र यसरी विलाप गरन लागनू भयो—

### श्लोक.

बित्यो रात आधा हराये कपीश,
    अहो! भाइको यो दशा भै रहेछ;
सहूँ हा! विपत्, के गरी आज यस्तो?,
    गयो भाई तिम्रो कहाँ शील उस्तो?.
पछी लागि मेरा सबै छोडि आयौ,
    परे घेर आपत् ठुलो कष्ट पायौ;
अधि प्रेम तिम्रो ममाथी थियो जो,
    हरे! आज भाई! सबै त्यो कहाँ गो?,
छुट्यो देश, सीता हऱ्यो रावणैले,
    तिमी लोटि हाल्यौ, कहाँ जानु मैले?;
अभागी रहेंछू बडो दुःख मायें,
    सबै जीवनाधार मैले गुमायें.

ढल्यौ आज भाई तिमी प्राण जस्ता,
कतै छैन यो रामलाई सुविस्ता;
अयोध्याविषे के गरी फर्कि जाऊँ ?,
वहाँ माइलाई म केले बुझाऊँ ?

यस्ता प्रकार सँग रामचन्द्रले विलाप गरेको देखी सुग्रीव आदि सारा वानरहरू पनी आँशूका धारा बगाउन लागे. अकस्मात् तेसैवेलामा हनुमानले एक पर्वतको थुंको नै ल्यायेर रामचन्द्रका अगाडी राखी दिये. तेसबाट मृतसञ्जीविनी बुटी झिकी सुषेण भन्ने एक वानर वैद्यले लक्ष्मणका नाकमा सुँघाई दिये. तेसको गन्ध पाउना साथ "दुष्ट राक्षस ! तँ कहाँ भाग्छस ? परखी परखी" भनदै लक्ष्मणजी उठे.

लक्ष्मण उठना साथ वानरका सैन्यमा हर्षको ठूलो ध्वनि भयो. आनन्दमा वानरहरू परस्पर अङ्कमाल गरन लागे. प्रफुल्लित वानरहरू सुग्रीवको आज्ञानुसार राति राँको लियेर लङ्कामा पसी आगो लाउन लागे. ठूला ठूला दरबार आगाले भस्म भये. अग्निले प्रदीप्त सारा लङ्का समुद्रका तटमा सुवर्णको पहाड जस्तो देखिन लाग्यो.

वानरहरूका उपद्रवले गरदा राक्षसराज रावण रीसले चूर भयो. उसले कुम्भकर्णका छोराहरू कुम्भ र निकुम्भलाई रातिमा नै पल्टनका साथ लडन पठायो. ई दुवै वीर सँग वानरी सेना को घनघोर संग्राम भयो. अन्त्यमा सुग्रीवले कुम्भलाई र हनुमान्‌ले निकुम्भलाई रणभूमिमा गिराये.

यस पछी, खरको पुत्र मकराक्ष शरका धाराले वानरको पल्टन-लाई भगाउंदै रणभूमिमा श्रीरामका अगाडी उपस्थित भयो. श्रीरामले राक्षसको शरवृष्टि रोकेर उसको सारथि र धनुलाई काटनू भयो. राक्षसले रामलाई हानेको शूल पनी व्यर्थ भयो. अन्त्यमा श्रीरामले आग्नेयास्त्रद्वारा तेस राक्षसको वध गरनू भयो.

मकराक्ष मरे पछी कपटी इन्द्रजित् फेरी लडन भनी आयो. यस लडाईका बीचमा उसले मायामयी सीता बनायेर उनलाई आफनू तरवारले दुई टुक्रा गरायो. यो देखेरे सारा वानरहरू शोकले विह्वल भये, श्रीराम पनी यो दशा देखेर मूर्छित हुनू भयो, तर बिभीषणले वहाँलाई यो राक्षसी छल हो भनी संझाये र वहाँको शोकेवगलाई हटाये.

यसै बीचमा इन्द्रजित्‌ले लडाईमा अजेय हुनलाई होमको आरम्भ गऱ्यो. सो बुझेर बिभीषणले रामलाई होमको अर्थ बताये. श्रीरामले तुरन्त राक्षसको यज्ञविध्वंस गरेर तेस सँग लडन भनी लक्ष्मणलाई पठाउनू भयो. लक्ष्मणले पनी झटपट गयेर राक्षसका यज्ञमा विघ्न पारे.

मेघनाद अघी लक्ष्मणलाई गिराई आयेको हुनाले मैले ठूलो काम गरें भन्ने घमण्डमा मस्त थियो. यस उसले फेरी लक्ष्मणलाई आफनू सामने आयेको देखी केही राक्षस-सैन्यका साथ त्यो रणभूमिमा आयेर अनेक फूर्ती देखाउँदै ई कुरा गरन लाग्यो, "आओ, म सँग को लडन शकछ ? हे लक्ष्मण ! ज्यानको आशा छ भने अहिल्यै भागेर जा. छैन भने आफनू बल पुरुषार्थ देखायेर म सँग लड के अघी मेरा

हातको चोट खायेको बिर्सिस? तेरो जीवन आजै सम्मको रहेछ. अब तेरा जीवनमा मेरा चरणको धक्का लागनेछ."

यसरी इन्द्रजित् कड्केको सुनदा लक्ष्मणको छाती क्रोधले बलन थाल्यो. उनले झट अगाडी सरेर भने, "हे राक्षस! धेरै फूर्ती देखाउनाले मात्र के हुन्छ? कुम्भकर्ण यस्तै फूर्ती देखाउँदा देखाउँदै मर्‍यो. अरूपनी धेरै राक्षसहरूले प्राण छोडे. आज तेरो पनी यही हाल हुनेछ." यती भनेर लक्ष्मणले उस माथी वाँणको वृष्टि गरन लागे. अघी आफूलाई गिरायेको संझी उनी क्रोधले तेस वेला पूर्ण थिये. यस कारण उनी बाँण पनी भयङ्कर हानदथे. निमेष भरमा उनले इन्द्रजितको शरीर छिया छिया पारे. इन्द्रजि-तूले पनी उनी लाई रक्तमय गरायो. यस्ता प्रकार सँग दुवै वीर धेरै बेर सम्म लडे. आखीरमा लक्ष्मणले एक अमोघ बाँण हानेर इन्द्रजित्‌लाई गिराई दिये. तेस चोटले गरदा त्यो उठन पनी शकेन. रावण–पुत्र इन्द्रजित् गिरेको गिर्‍यै भयो.

यसरी मेघनाद् मरेको देखदा वानरहरू हर्षले कोही नाचन, कोही कूदन र कोही उफ्रन लागे. श्रीरामका सारा फौजमा आनन्द फैलियो, उता महाप्रतापी इन्द्रजित् लडाईमा मरेको सुनी रावण अत्यन्त शोकाकुल भयेर विलाप गरदै मूर्छित भयो. अन्त्यमा होश हुना साथ क्रोधपूर्ण भई स्वयं रावण इन्द्रजित्–बधको मूल कारण सीताजी समझेर वहाँलाई मारन भनी दौड्यो. यसै बीचमा वृद्ध-राक्षस सुपार्श्वले:—"सत्वशाली हजूर जस्ता पुरुषले स्त्रीबधमा उद्यत हुनू

हुँदैन वरू यसको मूल कारण रामलाई नै चँवाडै सिध्याउनू परदछ" भन्ने इत्यादि कुराले समझाई रावणलाई तेस क्रूर कर्मबाट हटायो.

सुपार्श्वको हितवचन सुनेर रावणले अब अरूबाट केही भयेन, आफैं जान्छू भन्ने विचारले कवच र शस्त्रादिले सुसज्जित भई रथमा चढेर रणभूमि तिर प्रस्थान गऱ्यो. वहाँ पुगेर उसले खूब उच्च स्वर सँग गर्जदै भन्यो, "कोशल देशका राजकुमारहरू कहाँ छन ? हनुमान् सुग्रीव आदि वानर कता गये ? चण्डाल विभीषण कहाँ छ ? लौ आओ, तिमीहरूको संहार गर्ने त्रैलोक्य विजयी रावण आई पुग्यो, शकछौ भने लड."

यती भनेर रावण वानरहरू माथी बाणको वर्षा गरन लाग्यो. तेसका झोकमा परी धेरै वानरहरू मरे; कोही भागन लागे; कोही पछारिन लागे; कोही आकुल व्याकुल भयेर छटपटाउन लागे. यस्ता प्रकारले आफना सेनालाई छिन्न भिन्न गरायेको देखेर रामचन्द्र आफैं अघी सरी रावण सँग लडन लागनू भयो. पहिले रावणले खूब फूर्ती साथ रामचन्द्रका शरीरमा बाणका धेरै घाऊ गरा-यो. पछी रामचन्द्रले पनी फूर्ती साथ रावणका शिरलाई भकुण्डो फ्याँके झैं काटदै फ्याँकदैं गरनू भयो. यता रामचन्द्र र रावणमा यस्तो युद्ध भई रहेको थियो, उता अरू वानर र राक्षसहरूमा पनी तुमुल संग्राम हुन लाग्यो. वीर वीर वानरका हातमा परी धेरै राक्षसहरू मरे, हुँदा हुँदा यस्तो घमसान युद्ध भयो कि दुवै तिरका सेना छिन्न भिन्न भये. आफनू बिरानू पनी

थाहा हुन छोड्यो. रामचन्द्र र रावणका युद्धको ता बयानै छैन. जसको उपमा दिन नपाउँदा बडा बडा कविले पनी भनेका छन कि "रामरावणयोर्युद्धं रामरावणयोरिव" अर्थात् राम र रावणको युद्ध राम र रावणैको जस्तो भयो. आजसम्म तेस्तो युद्ध कुनै वीर पुरुषको पनी भयेको थियेन.

यसरी लडदा लडदा रावणले श्रीरामका उपर यस्तो एक बाण छोड्यो कि जुन बाण लागना साथ रामचन्द्र मूर्छित भयेर जमीनमा गिरनू भयो. तेस वेला विभीषणले अग्नी सरी गदा उठायेर रावणका छातीमा ठोके. आफनू भाईले आफूलाई तेसरी हानेको देखदा रावण रीसले चूर भयेर विभीषण माथी एक अमोघ बाणको प्रहार गरन लागेको मात्र थियो, सहसा मूर्छाबाट ब्यूंझेका रामचन्द्रले तेसका हातको त्यो भयङ्कर शस्त्रलाई एकै बाणले काटी दिनू भयो. फेरी उसको सारथि र घोडा समेतको रथ पनी श्रीरामले चूर्ण पारी दिनू भयो. रामचन्द्रले आफनू सारथि, घोडा सहितको रथ चूर्ण पारेको देखी रावण झन रिसायेर लडन लाग्यो. यसरी युद्ध हुँदा हुँदा आखीरमा रामचन्द्रका एक बाणले गरदा रावण परम–धाममा गयो.

यस्ता प्रकारले रावण मरे पछी सारा राक्षसहरू रणभूमिबाट भागे. वानरहरू रामचन्द्रको जयध्वनि गरदै नाचन र उफ्रन थाले. उता रावण मरे भन्ने सुनदा अन्तःपुरका सबै स्त्रीहरू पनी मूर्छित भये.

कस्तै अपराध होस ता पनी भ्रातृस्नेहको जड अति गम्भीर हुन्छ. यसैले आफनू दाज्यू विक्रमशाली लङ्केश्वरलाई वीर गतिमा प्राप्त भयेको देखेर विभीषणलाई बडो अपशोच भयो. उनी अनेक तरहले

विलाप गरन लागे:—"हा वीरशिरोमणे! आज मैले के यस्तो देखनू पर्‍यो ? अघी सम्म अमूल्य कुसुमशयनमा आनन्द पूर्वक रहने तपाँईको शरीर आहिले यस भूमि—तलमा गिरेको छ; ई रत्नजडित अङ्गदहरूले भूषित भयेका तपाँईका लामा लामा बाहू निश्चेष्ट पडी रहेका छन; सूर्य जस्ता देदीप्यमान मुकुट पनी जमीनमा पडी रहेकाछन. हाय ! मैले अघी यसो नगरनू होस, सीताजीलाई रामचन्द्रका जिम्मा लगाई दिनू होस भनी धेरै संझाये थे; सो कुरा नमानदा आज तपाँईको यो गति भयो. दुर्बुद्धि प्रहस्त, इन्द्राजित्, आदिका दुर्विचारको र तपाँ-ईका निरर्थक घमण्डको परिणाम आजै समाप्त भयो. तपाँई नै यस भूतलमा गिरनू भयो भने अब निःसत्व प्रजाको के बाँकी रह्यो ? हाय ! रामचन्द्ररूप प्रचण्डपवनका वेगमा परेर राक्षस—राजवृक्षको अका-ण्डमा पात भयो, सारा राक्षस—कुल अनाथ भाई रहेछ. हा वीर भ्रातः ! यस विभीषणलाई भ्रातृ—विहीन गरी तपाँई कहाँ जानू भयो ? अब तपाँईलाई म कहाँ पाउँला ?"

विभीषणले यसरी विलाप गरेको देखी श्रीरामले आश्वासन दियेर उनलाई भननू भयो, "भ्रातृ-भक्त विभीषण ! अझपनी तिमीलाई दाज्यूका उपरको प्रेम छुटेको छैन ? अघी उनले दियेका लातको चोट बिर्स्यौ ? अथवा उनलाई शोचनीये संझन्छौ भने पनी महाप-राक्रमी रावणलाई तिमी मरेको नसमझ. संग्राममा उत्साह पूर्वक प्राण दिनेहरू शोचनीय हुँदैनन; उनीहरू अमर पदवीमा प्राप्त हुन्छन. यो कुरा विचार गरेर तिमी यस शोकलाई परित्याग गर.

अहिले शोक गर्ने वेला छैन. नीति-पूर्वक प्रजाको पालन गर्नू परदछ. यस कारणले अब वीर—गतिमा प्राप्त भयेका दाज्यूको संस्कारादि कर्म गर. अन्तःपुरका राजपरीवारहरूलाई पनी सान्त्वना गर. यती गरेर आफनू राज पाठ चलाऊ. ”

रामचन्द्रले यसरी समझाउँदा विभीषणको शोकवेग हट्यो, तर उनलाई दाज्यूले गरेका निन्दित कर्महरूको संझना हुनाले, फेरी रावणका उपरको घृणा उठन लाग्यो. यसैले विभीषण फेरी श्रीराम सँग भनन थाले, “ हे राघव! धर्मव्रत देखी रहित यस क्रूर, निर्लज्ज, कृतघ्न र परदारासक्त दाज्यूको सत्कार गरन मेरो मन चाहँदैन. उनले गरेका काम्ले उनको सत्कार गरन यो दिल घृणा गरदछ. म केही गरे पनी तिनको यो अन्त्य क्रिया गरन अग्रसर हुन्न. ”

विभीषणको यस्तो विचार बुझेर श्रीरामले उनलाई फेरी भननू भयो, ‘ धर्मज्ञ विभीषण ! ’ आफनू शत्रु ठूलो अथवा दीन होस तापनी मरे पछी उस माथी राग द्वेष गरनू हुँदैन. गुणी हुन अथवा निर्गुणी हुन; यदि ती आफना पदबाट भ्रष्ट भयेका आफना ज्ञाति रहेछन भने पनी तिनीहरूको उचित क्रिया र तिनिहरूका दुःखमा तिमीले सहानुभूति गरनै परदछ. यस उसले तिमी आफनू दाज्यूको कुलोचित संस्कार गर. मरेका दाज्यू सित रीस गरनू योग्य हुँदैन. इनको प्रेतसंस्कार गरनू तिम्रो कर्तव्य छ. यस्ता कुराले तिमीलाई शोभा दिदैन. ” श्रीरामका यस्ता युक्ति-पूर्वकका वचनले विभीषणको चित्त बुझ्यो. उनी आफना दाज्यूको दाहादि संस्कार गरन गये.

तहाँ पछी रामचन्द्रले आफना भाई र बुद्धिमान् सुग्रीव आदि वानरलाई बोलायेर भनन् भयो, " हे वीरहो ! तिमीहरूका सहायताले आज मैले रावणलाई मारें. अब अघी विभीषणलाई लङ्काको राज्य दिउँला भनी मैले गरेको प्रतिज्ञा पूरा गराउनू परदछ. तेस कामलाई म जाऊँ भने पिताजीका आज्ञाले चौध वर्ष नपुगी मैले शाहरमा पसन् हुँदैन. तसर्थ तिमीहरू लङ्कामा गयेर चारै समुद्रका जलले अभिषेकगरी विभीषणलाई लङ्काको राजगद्दीमा बसाओ."

रामचन्द्रको आज्ञा पायेर वानरहरूका सरदारहरू लङ्कामा गयेर विभीषणलाई ठूलो उत्सवका साथ राजगद्दीमा बसाली आये. तेस दिनदेखी लडाईमा बाँकीं रहेका राक्षसहरू सबैले विभीषणलाई राजा माने. विभीषण बडा धर्मात्मा थिये. यसैले उनका दुनियाँ राक्षस पनी धार्मिक हुँदै गये. किन भने 'यथा राजा तथा प्रजा, अर्थात् जस्तो राजा हुन्छ दुनियाँ पनी उस्तै हुँदै जान्छन.

वहाँ पछी रामचन्द्रको शासन अनुसार हनुमानले सरासर लङ्कामा प्रवेश गेरेर सीताजीलाई रावण-बधादि विजय वृत्तान्त बताये. सो कुरा सुनदा सीताजी अत्यन्त खुशी हुनू भयो. वहाँका मनको शोक पनी सबै गयो. सीताजीले तेत्तीका दिन सम्मको दुःख पनी एकै छिनमा बिर्सनू भयो. सीताजी यसरी खुशी भयेको देखी वीर हनुमानले वहाँ सँग निवेदन गरे, " देवि ! रामचन्द्रबाट हजूरको खबर लियेर आऊ भन्ने आज्ञा पायेर म यहाँ आयेको हूँ. हजूरलाई प्रसन्न देखदा मलाई शाय गुना हर्ष भई रहेको छ. अब वहाँ गयेर

यही कुरा श्रीरामचन्द्र सँग बिनति गरदछू." यती भनी हनुमान् फरकन लागे. उसै अवसरमा सीताजीले उनलाई भनन् भयो, "हनुमन्! अब जसरी हुन्छ चाँडै मलाई रामचन्द्रका समीपमा पुऱ्याउने कामगर. रामचन्द्रको दर्शन पाउनामा मैले एक छिन पनी परखन् नपरोस." सिताजीले यती भने पछी हनुमान् तहाँ-बाट बिदा भये.

यसरी सिताजीको खबर लिई आयेर हनुमान्ले सबै कुरा श्रीरा-मका समीपमा जाहेर गरे. रामचन्द्रले पनी उसै वेला सीताजीलाई लियेर आऊ भनी हनुमान् बिभीषणादिलाई फेरी पठाउनू भयो. उनीहरूले स्नानादि कृत्यले र उत्तम उत्तम वस्त्र र गहनाले शोभा-यमान गराई सीताजीलाई पालकीमा राखी लङ्काबाट लियेर आये.

तेस वेला आज हामीले महाराज रामचन्द्रकी धर्मपत्नी सीताजी को दर्शन गरनू बढिया छ भनी बाटै देखी धेरै वानरहरू पछी लागेका थिये, तर सीताजी पालकीमा पर्दा भित्र वसनू भयेको थियो. यसले उनीहरूलाई सीताजीको दर्शन गरने अवकाश मिलदैन-थ्यो. आफना फौजको त्यो आशय बुझेर रामचन्द्रले सीताजीलाई पैदलै ल्याउनू. सबैले हेरन पाउन भन्ने आज्ञा दिनू भयो. तेही आज्ञानुसार सीताजी पैदल हिंडन लागनू भयो. सबै जनाले वहाँको दर्शन पाये ।

सीताजी आउना साथ ससम्भ्रम रामचन्द्रका पाऊमा दण्डवत् गरी वहाँका नगीचै गयेर वसनू भयो. यसै अवसरमा तहाँ भये जती वानर र राक्षसहरूले सीतारामको दर्शन पाये.

यती भये पछी श्रीरामचन्द्रले सीताजीका मुखमा हेरेर भनन् भयो, " सीते ! मैले बिभीषणलाई लङ्काको राज्य दिउँला भनी प्रतिज्ञा गरेको थियें, सो आज पूरा भयो. तिमी पनी राक्षसका बन्धनबाट छुट्यौ. अब तिमि जहाँ मन लागछ वहाँ जाऊ. किन भने, यतीका दिन सम्म राक्षसका घरमा रहेकी तिमीलाई म कसरी लिऊँ ? तेसो गरनाले मलाई इक्ष्वाकुवंशी राजकुमार भयेर पनी राक्षसले हरी लगेकी स्त्रीलाई फेरी लियो भनी लोकले निन्दा गरनेछ. यस कारणले म यो लोक–विरुद्ध काम गरदिन.

रामचन्द्रका पूर्वोक्त वचन सुनदा सीताजीको मुख मलिन भयो. वहाँले जबाब पनी केही दिन शकनू भयेन. तेस वेला सीताका मनमा यस्तो पऱ्यो कि अब मलाई लिनाले रामचन्द्रलाई लोकनिन्दा हुन्छ भने मैले यस संसारमा रहेर केही काम छैन. यो विचार गरेर सीताजीले दाउरा मगाई चिता तयार गरन लाउन् भयो. जब आगो बलन लाग्यो अनी सीताजी तेही चितामा प्रवेश गरनू भयो; परन्तु निर्दोष पतिव्रता सीताजीलाई अग्निले केही गरन शकेनन, सीताजी झन झन प्रकाशमान हुनू भयो.

यस्तो प्रत्यक्ष प्रमाण पाउँदा तहाँ आयेका सारा ऋषिमुनिहरूले श्रीरामका अगाडी भने, " सीताजीको केही दोष छैन. आज सम्म उनले आफनू पातिव्रत्य–धर्मलाई छोडेकी छैनन. यस कारण तपाईंले सीताजीलाई त्याग गरनू हुँदैन, लिनै परदछ. यसमा हाम्रो पूरा विश्वास छ. " यस्तो सबैको सम्मति पाये पछी रामचन्द्रले सीताजीलाई ग्रहण गरनू भयो.

यहाँ पछी रामचन्द्रले सुग्रीव आदि वानरहरूलाई बोलायेर भननू भयो, " कपीश्वर हो ! तपाईंहरूको सहाय पायेर मैले रावणलाई मारें, प्राणप्रिया सीताजीलाई पनी पायें. मेरा निमित्त तपाईंहरूलेई आज सम्म ठूलो कष्ट सहनू पऱ्यो. यसमा म माथी क्षमा राखनू होला. अब तपाईंहरू आफना घर गयेर विरह—व्याकुल परिवारलाई सानन्द गराउनू होस. "

रामचन्द्रका यस्ता वचन सुनी सबै वानरहरूले श्रीराम सँग प्रार्थना गरेर भने, " विजयी राम ! हामी सबैलाई अयोध्यामा हजूरको राज्याभिषेकोत्सव हेर्ने अभिलाषा छ. हजूरले हाम्रो उत्कण्ठा पूरा गराउनु परदछ. " वानरको यस्तो वचन सुनी श्रीरामचन्द्रले तिनीहरूलाई अयोध्या लैजाने निश्चय गरनू भयो.

यसै बीचमा राम—भक्त विभीषणले ! लङ्काबाट पुष्पक विमान लियेर आये. त्यो अति विचित्र र सबै सुखको सामग्रीले सुसज्जित थियो. कोठा बैठक बगैंचा, अन्न जल, फल फूल, उत्तम उत्तम वस्त्र आदि सबै चीज तेस विमानमा तयार थिये, यो विमान ठूलो हूनाले यसमा धेरै मानीस बसन लायक फराक ठाउँ पनी थियो. त्यो सारा सुनै सुनले बनेको र बीच बीचमा बहुमूल्य रत्नादिले जडियेको हुनाले सबैको अत्यन्त स्पृहणीय थियो. तेस आकाशगामी विमानमा पहिले सीता र लक्ष्मणसहित श्रीराम चढनू भयो, अनी अरू सारा सुग्रीवआदि वानरहरू र बिभीषण आदि राक्षसहरू पनी चढे. विस्तार विस्तार विमान आकाश—मार्गले उत्तर दिशा तिर उड्यो.

बीच बीचमा जती राम्रा राम्रा ठाउँ विमानबाट देखिन्थे, ती सबै-को नाउँ प्रेम पूर्वक सीताजीलाई बताई रामचन्द्र वहाँको चित्त विनोद गराउनू हुन्थ्यो. केही काल पछी विमान किष्किन्धामा पुग्यो. वहाँ सीताजीले राम सँग आज्ञा मागी सुग्रीवकी पत्नी सँग भेट गरनू भयो. विमान फेरी तहाँबाट उडेर ऋष्यमूकपर्वत माथी पुग्यो. वहाँ पनी श्रीरामले सुग्रीव सँगको मित्रता र वालिबध आदि सम्पूर्ण काम यहीं भयेको हो भनी सिताजीलाई सुनाउनू भयो.

यस्तै तरहले गोदावरी नदीमा आफूले गरेको शोक, कबन्धलाई मारेको, रावणले जटायुलाई गिरायेको ठाउँ देखाउँदै श्रीराम विमान द्वारा पञ्चवटीका उपर पुगनू भयो. वहाँ श्रीरामले आफनू अघीको पर्णशाला र गोदावरी नदीको वर्णन गर्दैमा विमान चित्रकूटमा पुग्यो. तहाँ पनी आफूलाई भरतले फरकाउन आयेको कुरा श्रीरामले सीताजीला समझाउनू भयो. यमुनाको तीरवर्ती भरद्वाजका आश्रममा पुगे पछी श्रीराम विमानबाट उत्रनू भयो.

मुनिवर भरद्वाज आफना शिष्यका साथ अग्निहोत्र कर्ममा लागी रहेका थिये. उनलाई देखना साथ श्रीरामचन्द्रले सादर प्रणाम गरनू भयो. केही बेर पछी वहाँले मुनि सँग अयोध्या तिरको खबर सोधनू भयो. त्यो सुनी भरद्वाजले भने; "हे रामचन्द्र ! अयोध्याको खबर सबै बेस छ. भरतले राम्रा तरहले प्रजाको पालन गरेका छन, तर उनी रात दिन हजूरैलाई समझी रहन्छन. उनी शहर बाहिरैबाट गुरु र मन्त्रीहरूका सल्लाहले हजूरका खराऊका

आधारमा राजकाज चलाई बसेका छन. चौध वर्ष पूर्ण भयेका दिन हजूरको दर्शन पायेनन भने उनी प्राण त्याग गर्नें छन. यस्तो उनको दृढ प्रतिज्ञा छ. यस कारण अब तपाईंले पनी ढीलो गरनू उचित छैन. चाँडै नै अयोध्यामा गयेर भक्त भरतलाई र सारा अयोध्यावासीहरूलाई आफनू दर्शनले सानन्द गराउनू नै तपाईंको मुख्य कर्तव्य छ. सबै सवारी कहिले फिरला भनी उत्सुक भई रहेका छन, अब चैाध वर्ष पुगनलाई पनी एक दुई दिन मात्र बाँकी छ. ''

भरद्वाजका ई कुरा सुनेर श्रीरामले भनन् भयो, "मुनीश्वर! तपाईंको आज्ञा सत्य हो. मेरा मनमा पनी यही लागेको थियो. जसरी भये पनी भोली म अयोध्यामा अवश्य पुगदछू." यती भनेर रामचन्द्रले फेरी हनुमान् तिर फरकी भनन् भयो, "महावीर! तिमी अहिल्यै शृङ्गवेरपुरको बाटो गरी गुहजीलाई म आयेको खबर देऊ र अयोध्यामा जाऊ. वहाँ भरतलाई भोली सुग्रीव बिभीषण आदि सैन्यका साथ म आई पुगनेछू भन्ने खबर सुनाये र वहाँको पनी हाल खबर सबै बुझेर आये. कदाचित् तिमीलाई यही बँस भनी भरतले फरकन दियेनन भने उहीँ बसनू. हामी सबै भोली तिम्रा पछी पछी आई पुगनेछौँ."

यस्तो रामचन्द्रको आज्ञा पायेर हनुमान्जी तेताबाट हिंडेर शृङ्गवेरपुरमा पुगे. वहाँ उनले गुहजी सँग भेट गरेर उनलाई रामचन्द्रको हाल बताये. तेताबाट फेरी हनुमान् अयोध्या बाहिरको न्दग्रनामि

भन्ने ठाउमाँ पुगे. वहाँ भरतजी जटा पाली मृगको छाला ओढेर आफना गुरु मन्त्रीहरूका साथ गद्दीमा पूजा गरी राखेका रामचन्द्रका खराऊका नगीचैमा वसेका थिये.

जटा–बल्कलादि चिन्ह द्वारा हनुमान्लाई भरत इनै हुन भन्ने निश्चय भयो. तिनको त्यो शान्त भेष देखेर प्रणयपूर्ण भयेका हनुमान्ले उनलाई प्रणाम गरी अगाडी सरेर भने, " महाराज! हजूर जुन रामचन्द्रको ध्यान गरनू हुन्छ उनै महात्मा श्रीराम आफनू प्रतिज्ञा र सकुटुम्ब रावण–कुल समेत समाप्त पारी लक्ष्मण, सीता, सुग्रीव, बिभीषण र अरू अनेक वानर–सैन्यका साथ हिजो भरद्वाजका आश्रममा प्राप्त हुनूँ भयो. यहाँ श्रीरामको भोली सवारी हुनेछ. हजूरलाई आफू आई पुगेको समाचार बताउनाका निमित्त वहाँले मलाई पठाउनू भयेको हो.

हनुमान्का कुरा सुनेर एकदम हर्षले गद्गद भयेका भरतजी आसनबाट उठेर उनलाई अंकमाल गरी भनन लागे, " प्रियवत्स! यस आनन्द-दायक समाचार सुनायेको बदलामा म तिमीलाई के दिऊँ? आज तेस्तो चीज म सँग छँदै छैन जुन दिनाले. तिम्रा यस उपकारको प्रत्युपकार हुन शकोस. हेर दाज्यैज्यूको वनमा सवारी भयेको चौध वर्ष भयो. आज सम्म रात–दिन वहाँकै चिन्तनामा मैले दिन बितायेको थियें. आज दाज्यैज्यू फरकेको खबर पाउँदा मलाई कती आनन्द भई रहेछ. यसको सीमा छैन. धन्य मेरो भाग्य! आज तिम्रा मुखबाट यो शुभ समाचार सुनन पायें." इत्यादि

कुरा हनुमान्सग गरेर भरतजीले उत्तिखेरै रामचन्द्र भोली अयोध्यामा आई पुगनू हुन्छ, शहर सब सफा गरनू, ठाऊँ ठाऊँमा उत्सवहरू पनी गरनू भन्ने उर्दी दिये.

वनवासबाट फरकेका श्रीराम भोली यहाँ आई पुगनू हुन्छ भन्ने समाचार पायेर सारा अयोध्यावासीहरू पनी खूशी भये. दरबारमा पनी यो खबर फैलियो. प्रिय--पुत्र रामचन्द्र, सीता र लक्ष्मणका साथ आराम-पूर्वक आई पुगे भन्ने हर्षले मुग्ध भयेका कौशल्यादि रानीहरू पनी शहर बाहिरै भरत वसेका ठाऊँमा आये. उनीहरू दरबारबाट निस्के पछी सारा अयोध्यावासीहरू पनी शहरबाट बाहिर आई बाटा बाटामा वसे. तेस वेला भरतजीका आज्ञानुसार ठाऊँ ठाऊँमा मङ्गलोत्सवका बाजाहरू पनी बजन लागे.

उता रामचन्द्र पनी भरद्वाज मुनि सँग बिदा भयेर अयोध्या तिर हिंडनू भयो. बाटामा गुहजी वहाँ सँग भेट गरन आये. उनलाई पनी साथ लियेर श्रीराम अयोध्याका नगीचै आई पुगनू भयो. तेस वेला हर्षका साथ आयेका वानरहरूलाई बोलायेर रामचन्द्रले भननू भयो, " हेर ! हाम्रो राजधानी अयोध्या यही हो. रामचन्द्रका यस्ता बचन सुनी सारा वानरहरू अयोध्या तिर हेरदै खूशीले नाचन र उफ्रन थाले.

रामचन्द्र कुन वेला आई पुगनू होला भनी एक दीठ गरी भरतजी उतै तिर हेरी रहेका थिये. हेरदा हेरदै रामचन्द्र सीता, लक्ष्मण र सुग्रीव विभीषण आदि फौजले पूर्ण भयेको पुष्पक विमान नगीचै

आई पुग्यो. त्यो देखी हर्षले लोट पोट हुँदै झटपट भरतजी विमानका सम्मुख गये. विस्तार विस्तार लक्ष्मणादिसहित श्रीराम विमानबाट ओर्लहनू भयो. तेसै वेला भरतले रामचन्द्र र सीताका पाऊमा दण्डवत् गरे. लक्ष्मणले पनी भरतलाई दण्डवत् गरे. यस्तै शत्रुघ्नले पनी राम सीता र लक्ष्मणका पाऊमा परी दण्डवत् गरे. यति गरेर रामचन्द्रले भरत—मिलापको आनन्द परिपूर्ण गरनू भयो.

तेती भये पछी रामचन्द्रले भरत र शत्रुघ्नलाई आलिङ्गन गरी प्रेमले सोधनू भयो, " भाई ! तिमी आनन्दित छौ ?, माताजीहरूलाई आराम छ ? के प्रजाहरू पनी निर्विघ्न छन ?, गुरुजी पनी आराम साथ हुनू हुन्छ ?," यो सुनी भरतले हात जोडेर भने "दाज्यैज्यू ! हजूरका आशीर्वादले सब कुशल छौं. आज हजूरको दर्शन पाउँदा यतीञ्जेल- सम्मका कष्ट, शोक, विरह जती सब अहिल्यै हराये."

भरतका कुरा सुनी रामचन्द्र अत्यन्त प्रसन्न हुनू भयो. तेसै वेला कुल-गुरु वशिष्ठ र कौशल्या, सुमित्रा, कैकयी, आदि सब राजपरीवारहरू तहाँ आई पुगे. रामचन्द्रले र लक्ष्मणले गुरू र माताहरूलाई दण्डवत् प्रणाम गरनू भयो. सीताजीले पनी शाशूहरूका पाऊमा परी प्रणाम गरनू भयो. फेरी रामचन्द्रले आफू सँग आयेका सुग्रीव, विभीषण, हनुमान्, आदि सबलाई ई फलाना हुन, ई फलाना हुन, भनी एक एक गरी चिन्हाउनू भयो. आफूले वनवासमा गरेका कामहरूको सारा वृत्तान्त पनी सबका अगाडी संक्षेपले सुनाउनू भयो. सो सुनी सारा अयोध्यावासीहरू अत्यन्त विस्मित भये.

तहाँ पछी रामचन्द्रले सारा वानरहरूलाई साथमा लिइ अयोध्याको परिक्रमा गरनू भयो. उनीहरूपनी अयोध्याको अपूर्व शोभा देखी खूशी भये.

यती भये पछी वशिष्ठ र मन्त्रीहरूका सल्लाहले रामचन्द्रको अत्यन्त उत्सवका साथ राज्याभिषेकोत्सव भयो. उसमा सुग्रीव आदि वानर र विभीषण आदि राक्षसहरूलाई रामचन्द्रले भारी पारितोषिक दिनू भयो.

युद्धकाण्ड सकियो.





# उत्तर-काण्ड.



राज्यमा अभिषक्त श्रीरामलाई जय-शब्दले अभिनन्दन गरनाका निमित्त अगस्त्य, विश्वामित्र, असित, भृगु, अङ्गिरा, अत्रि, आदि मुनीश्वरहरू राज-सभामा उपस्थित भये. श्रीरामले पनी उनीहरूको यथोचित सत्कार गरनू भयो. अनी श्रीराम र ऋषीश्वरहरूले परस्परमा कुशल प्रश्नादि गरे.

धेरै बेर पछी, अगस्त्यमुनिले श्रीराम तिर हेरेर भने, "आज हामीलाई मात्र होयिन कि तीनै लोकलाई आनन्द भयेको छ. कारण, रावण र कुम्भकर्णादि दुराचारी राक्षसहरूको तपाईँले संहार गरी दिनू भयो. अब ती दुष्टहरूबाट हुने उपद्रवको सम्भावना कतै छैन. रावणादिको वधभन्दा पनी इन्द्रजित्को वध बडो आश्चर्यजनक छ. यसले गरदा अब सारा देवता-वृन्द पनी सानन्द भये."

अगस्त्यका कुरा सुनेर श्रीरामले विस्मय-पूर्वक सोधनू भयो, "ऋषीश्वर! महा-पराक्रमी रावणादिको वध भन्दा इन्द्रजित्को वध प्रशंसनीय हुनाको कारण के हो? सो कुरा मैले बुझन शकिन. विस्तारले आज्ञा भये मनको सन्देह हटने थियो."

श्रीरामको प्रश्न सुनेर अगस्त्यले भने, "महाराज! उहिल्यै ब्रह्म-पुत्र पुलस्त्यऋषि सुमेरुको प्रान्तवर्ती राजर्षि तृणबिन्दुका आश्रम नेर तप गरन लागी रहेका थिये. वहाँ प्रतिदिन देव गन्धर्वादिका कन्याहरू पनी गान बजान गरदै खेलदथे. ती कन्याहरूका हाँस खेलले पुलस्त्यको तपो-नियम भङ्ग हुन लाग्यो. एक दिन उनले क्रुद्ध भयेर कन्याहरूलाई भने, "आज़देखी जो स्त्री मेरा आश्रममा आउली त्यो सहसा गर्भिणी होली."

ऋषिको त्यो शराप सुनेर ती कन्याहरू अत्यन्त डराये. तेसै दिन देखी तिनीहरूले तहाँ जान छोडे. यो कुरा तृणबिन्दुका कन्यालाई थाहा भयेनछ. उनी एक दिन घूमदै फिरदै उनै पुल-स्त्यका आश्रममा आयिन. थोरै कालमा उनका देहमा गर्भ—चिह्न देखिन लाग्यो. राजर्षि तृणबिन्दुलाई समेतपुत्रीको त्यो अवस्था ज्ञात भयो. अन्त्यमा उनले छोरी गर्भिणी हुनाको कारण पत्ता लगायेर उनै पुलस्त्य सँग उनको विवाह समेत गरी दिये.

केही काल पछी उनबाट विश्रवा नामक पुत्र पैदा भये. उनी पनी बाबू जस्तै सुशील र तपस्वी थिये. विश्रवाको शील स्वभावले प्रसन्न भयेका भरद्वाजले आफनी कन्या देववर्णिनी उनलाई दिये. ती भरद्वाजकी पुत्रीमा विश्रवाका वैश्रवण नामक सुपुत्र जन्मे. वैश्रवण पनी केही काल सम्म तपस्यामा प्रवृत्त भये. उनका तपस्याले प्रसन्न भयेका ब्रह्माजीले उनलाई धनाधीश पदवी दिये. त्यो पायेर उनी खुशी साथ आफना पिताजीका समीपमा आये. आफना

बाबू विश्रवालाई तपस्याबाट प्राप्त भयेको सबै कुरा वर्णन गरेर उनले भने, “ पिताजी अब कोही हिंसा–रहित सुरक्षित स्थान पाये देखि उसमा आनन्दपूर्वक वसेर काल–क्षेपण गर्ने थियें. ” छोराको यो निवेदन सुनेर विश्रवाले भने, “ बाबू ! दक्षिण समुद्रका बीचमा लङ्का नामक एक द्वीप छ. तेसमा अघी ठूला ठूला विजयी राक्षसहरू वसद्थे, तर त्यो हालमा शून्य छ. कारण, देवताहरूका डरले सारा राक्षस पातालमा गई सके. अब तहाँ उनीहरू फरकने सम्भावना पनी छैन. अहिले लङ्का जस्तो उत्तम नगर अन्यत्र पाउनू पनी कठिन छ. यस उसले अब तिमी उहीं गयेर वस. ”

बाबूको यस्तो आज्ञा पायेर वैश्रवण लङ्कामा वसे. वहाँ उनले सारा दिन सुखैमा बितायेका थिये. एक दिन सुमाली नामक राक्षस आफनी कैकसी नाउँ गरेकी कन्यालाई साथमा लियेर पृथ्वीतलमा आयेको थियो. उसले लङ्कामा वैश्रवणको बढती कला देखेर विचार गऱ्यो कि अहो ! राक्षसहरूको यस्तो उन्नति अब फेरी कहिले होला ? यो विचार गरेर उसले आफनी छोरीलाई भन्यो, “ छोरी ! तिमी गयेर विश्रवा सँग ऋतु–दान माग. तेसो भये तिम्रा पनी वैश्र-वण जस्तै पुत्र जन्मेर राक्षस–कुलको गौरव बढाउनेछन. ”

कैकसीले बाबूको उपदेशलाई लज्जा–पूर्वक स्वीकार गरिन. उनले विश्रवा मुनिका समीपमा पुगेर साँझमा ऋतु–दान मागिन. सन्ध्यासमयमा गर्भाधान भयेको हुनाले उनका रावण र कुम्भकर्ण नामक भयङ्कर पुत्र जन्मे. तिनीहरू जन्मना साथ लोकमा अनेक उत्पात

हुन थाल्यो. केही काल पछी फेरी शूर्पणखा नाम भयेकी पुत्री पनी जन्मी. तदनन्तर नीतिज्ञ विभीषण जन्मे. इनीहरू दिन दिन विश्रवाका आश्रममा बढदै गये. उनीहरूले नाना प्रकारका उपद्रव पनी गरन थाले.

एक दिन आफना बाबूको दर्शन गरनलाई वैश्रवण पुष्पक विमान-द्वारा लङ्काबाट मेरु-प्रान्तमा आये. उनको त्यो उन्नत अवस्था देखेर कैकसीले आफना पुत्रहरू सँग भनिन, " बाबूहो ! हेर, वैश्रवणको रवाफ कस्तो छ ? तिमीहरू पनी एकै बाबूका छोरा होऊ; तस्मात् तिमीहरू पनी धनाधीश जस्तै प्रभाव-शाली हुने यत्न गर. "

आमाका कुरा सुनेर सबैले तेस्तै हुने स्वीकार पनी गरे. रावणादि तीनै भाइ उसै दिनदेखी तपस्यामा प्रवृत्त भये. पछी उनीहरूले तपस्या-द्वारा आफनू शक्ति खूब बढाये केही दिनमा उनींरुरू वैश्रवणलाई लङ्काबाट निकालेर आफैं वहाँ राज्य गरन थाले. दिन परदिन उनीहरू सर्वत्र विजयी हुँदै गये.

पछी रावणको मन्दोदरी नामक पत्नीमा एक पुत्र जन्म्यो. उसले जन्मना साथ मेघका जस्तो नाद ( शब्द ) गरेको हुनाले उसको ' मेघनाद ' भन्ने नाम रह्यो. त्यो प्रतिदिन बाबू रावण झैं प्रतापशाली हुँदै आयो. केही कालमा उसले इन्द्रलाई समेत जितेर बन्दी ( कैदी ) गरायो. यसैले फेरी उसको ' इन्द्रजित् ' भन्ने नाऊँ प्रसिद्ध भयो. तेसलाई कसैले हेरन पनी शकेको थियेन. यसैले इन्द्रजित्को बध पनी अधिक प्रशंसनीय भयेको हो. "

रावणादिको पूर्व–वृत्तान्त सुनायेर ऋषिहरू आफना आफना आश्रममा गये. श्रीराम पनी प्रसन्नताका साथ राजकाजको निरीक्षण गरन लागनू भयो. वहाँको राज्य–प्रबन्ध देखदा आश्चर्य भयेका सुग्रीवादि वानर र विभीषणादि राक्षस आनन्द–पूर्वक केही दिन सम्म आयोध्यामै वसे.

एकदिन रामचन्द्रले सुग्रीवादि सबैलाई भनन् भयो, "जङ्गल देखी अहिले सम्म तपाईंहरूले मेरो ठूलो सहायता गरन् भयो. तपाईंहरूका सहायताले नै मैले सीताजीलाई पनी पायें, अहिले पनी पैतृक-राजगद्दीमा वसेको छू. यो सब तपाईंहरूका सहायताको फल हो. तपाईंहरूले घरबार छाडेको धेरै दिन भयो. यस कारण आज म सविनय अनुमति दिन्छू कि अब तपाईंहरू आफना आफना घर गयेर धेरै काल सम्म वियोगले सन्तप्त भयेका अफना परिवारको ताप छुटाई आनन्दपूर्वक वसनू होस.

रामचन्द्रको यस्तो आज्ञा भयो ता पनी प्रेम–वश उनीहरूको रामचन्द्रलाई छोडी फरकने मन थियेन, तर रामचन्द्रका अनुरोधले गरदा वानरहरू बडा कठिन सँग बिदा भयेर आफना आफना घर तिर फरके. तिनीहरूलाई, फरकने वेलामा रामचन्द्रले अनेक पुरस्कार दिनूभयो. परन्तु हनुमान् श्रीरामचन्द्रका अत्यन्त भक्त र आबाल ब्रह्मचारी हुनाले रामचन्द्रै सँग अयोध्यामा रहन लागे.

यती भये पछी श्रीरामचन्द्र आनन्द-पूर्वक प्रजाको पालन गरी राजकाज चलाउन लागनू भयो. तस वेला ( राम-राज्य चलेका समय ) मा दुनियाँको यो हाल थियो कि

## श्लोक.

रामले राज्य गरदा, तीनै लोक विषे सबै;
थिये प्रसन्न शोकादि, हरूबाट विहीन नै.
वैर-भाव कतै केही, थियेन दुनियाँ भर;
राम-प्रतापले सारा, थिये मित्र परस्पर.
वर्णाश्रम स्वधर्मादि, वैदिकक्रमले गरी;
चले रोग र शोकादि, हऱ्यो सारा जगत् भरी.

यती मात्र होयिन कि रामचन्द्रका राज्यमा स्त्रीहरू सबै पतिव्रता थिये, विधवा कोही थियेनन. छोरो मऱ्यो भन्ने शोक कसैलाई पनी परदैनथ्यो. दुर्भिक्षको नाम मात्र पनी कहीं थियेन. चोरी असत्य, जूवा, मद्य इत्यादि खराब कामको नाम तक पनी कसैले जानेको थियेन. जहाँ श्रीराम जस्ता धर्मात्मा न्यायी प्रजा-रञ्जक राजाले राज्य गरेको थियो वहाँ दुःख, शोक, भय, उपद्रवहरू दुनियाँलाई किन परद्थे."

यस्तै तरहले सारा दुनियाँलाई सबै तरहबाट आनन्दित गरायेर रामचन्द्र सुखपूर्वक राजकाज चलायेर वसनू भयो.

तेस्तैमा केही काल पछी सीताजी पनी गर्भिणी हुनू भयो. सो गर्भिणी भयेका सातौं महिनामा एक दिन रामचन्द्रले कुनै गुप्तचर—द्वारा दुनियाँका मुखबाट सीताजीका विषयमा आफनू निन्दा सुननू भयो. सो लोकापवादलाई सहन गरन नशकी श्रीरामले " सीतालाई तपोवनमा लगी छोडी आऊ " भनेर लक्ष्मणलाई पठाउनू भयो. उनले पनी दाज्यूको

आज्ञा नाघन नशकी विलाप गरदै बडो कठिन सँग गर्भिणी भाउज्यूलाई तपोवनवर्त्ती वाल्मीकिको आश्रमका निकट लगेर छोडी आये.

जङ्गलमा एकलै रोई रोई हिंडेकी सीताजीलाई वाल्मीकिले आफना आश्रममा लगेर छोरी झैं पाले. तीन महिना पछी तेसै आश्रममा सीताजीले दुई पुत्र पैदा गरनू भयो. वाल्मीकिले पनी ती दुई बालकहरूको संस्कारादि कर्म सब गरी लव र कुश भन्ने नाऊँ राखेर अत्यन्त प्रेमले पाले. उनले तिनीहरूलाई शस्त्रास्त्रविद्या र सम्पूर्ण शास्त्रहरू पनी आफैंले पढाये, लव र कुश पनी सो सब विद्यामा पूरा भई प्रवीण भये. यत्ती मात्र होयिन कि महर्षि वाल्मीकिले ती दुई कुमारलाई स्वरचित रामायणात्मक आदि काव्य पनी पढायेका थिये. उनीहरू त्यो काव्य गानका सूरमा मिलायेर समेत गाउन जानद्थे. यसैले गरदा उनीहरू संपूर्ण ऋषि—मुनिहरूका अतिशय प्रिय थिये. तिनीहरू ब्राह्मणका आश्रममा जन्मी बढे ता पनी चल, चालन, स्वभाव, आकार, आदि सबै कुशले राज—कुमारै जस्ता देखिन्थे.

उता एक दिन ऋषिमुनिहरूका मुखबाट रावणको जन्म कर्मादि वृत्तान्त सुनेर मैले ब्रह्मवध गरेंछू भन्ने तापले सो ब्रह्मवधको प्रायश्चित्तका निमित्त श्रीरामचन्द्रलाई अश्वमेध यज्ञ गरने विचार भयो. परन्तु स्त्रीविना त्यो यज्ञ गरनू हुँदैनथ्यो. सीताजी वनमा हुनूहुन्थ्यो. यस कारण सबै गुरु, भारदार र मन्त्रीहरूलाई राखी श्रीरामले मन्त्रणा गरनू भयो. उनीहरूले रामचन्द्रलाई " अर्को विवाह गरनू परछ " भन्ने सल्लाह दिये, तर तेसमा रामचन्द्रले भननू भयो

कि " म दोस्रो विवाह सर्वथा गर्दिन. सो गरनाले मेरो एक-पत्नी-व्रत नष्ट हुन्छ. बरू यज्ञका निमित्त कोही उपायान्तर छ भने बताओ. म तेसमा सहमत छू " तेस अवसरमा वशिष्ठजीले सुवर्णकी सीता बनाउने अनुमति दिये. गुरूको आज्ञानुसार सुवर्णकी सीता साथमा राखेर रामचन्द्र यज्ञ गरने यत्नमा लाग्नू भयो.

अर्कोतिर तपोवनमा बसेका सीतजीका दुवै कुमार एक एक ऋषि मुनिहरूका आश्रमामा गयेर यो काव्यको गान गरद्थे. एक ता मर्यादा पुरुषोत्तम महाराज रामचन्द्रको परम पवित्र चरित्र, 'दोस्रो आदि कवि महर्षि वल्मीकिको रस—पूर्ण कविता, तेस्रो दुई कुमारले एक स्वर गरी गायेको रसवती मनोहारिणी वाणी, यती भये पछी फेरी के चाहियो ?. इनीहरूले गरेका गानाको उपमा दिनलाई कोही पनी शकदैनथे. ठीक हो, सुवर्ण र सुगन्धको एकत्र समावेश भये पछी तेसको उपमा दिन योग्य वस्तु लोकमा के पायिन्छ, अर्थात् इनी हरूको गाना अनिर्वचनीय थियो. जुन समय ई दुई भाई एक स्वर गरी यस काव्यको गान गरद्थे, उस समय मानीस ता के चाहियो साह्रा पशु पक्षी हरू समेत मोहित हुन्थे, यती मात्र होयिन कि इनी हरूको गान सुनदा सुनदै प्राणीमात्र चित्र—लिखित जस्ता हुन्थे. इनीहरूको मनोहर गान सुनेर ऋषि मुनिहरू प्रसन्नता साथ इनलाई नाना तरहका पारितोषिकहरू दिन्थे.

एक दिन महर्षि वाल्मीकि आफना आश्रममा आनन्दपूर्वक बसेका थिये. यसै वेलामा एक राजदूत आयेर उनका कर—कमलमा महाराज रामचन्द्रको हस्ताक्षर भयेको एक पत्र समर्पण गर्‍यो. महर्षि

वाल्मीकिले सो पत्र दुइ कुमारलाई बाँचन दिये, गुरुका आज्ञानुसार तेस पत्रलाई लव र कुशाई दुई कुमारले खोलेर बाँचे. तेसमा महाराज रामचन्द्रले शिष्य—वर्ग—सहित महर्षि वाल्मीकिलाई निमन्त्रण गरेको वृत्तान्त लेखेको थियो; यो सुनना साथ महर्षि वाल्मीकिले सम्पूर्ण शिष्यवर्गलाई साथमा लियेर हर्ष—पूर्वक अयोध्या तिर प्रस्थान गरे. तेस शिष्य—मण्डलीमा लव र कुश ई दुई कुमार पनी थिये. अयोध्यामा गयेर ई दुई कुमारले जहाँ तहीं रामायणको गान आरम्भ गरे. महर्षिले अघीबाटै इनीहरूलाई यस कुराको सूचना दियेका थिये कि यदि महाराज रामचन्द्रबाट तिमीहरूको गाना सुनन चाहनू भयो भने तिमीहरूले वहाँ पनी प्रसन्नता साथ गान सुना उनू, फेरी तिमीहरूलाई वहाँबाट केही धनहरू पारितोषिक दिनू भयो भने तेस वेला तिमी हरूले यही विनति गरनू कि हामी फल मूल खोजीखाने वनवासी तपस्वी होउं, हामीलाई द्रव्यको केही प्रयोजन छैन. फेरी वहाँ बाट तिमी हरूको परिचय ( पहिचान ) विषयक प्रश्न गरनू भयो भने, तिमी हरूले यत्ती मात्र भननू कि हामी हरू महर्षि वाल्मीकिका शिष्य होउं. हेर, राजा भनेका सबैका पिता हून, यस उसले वहांका अगाडी तिमीहरूले बहुतै सभ्यताका साथ गान सुनाउँनू.

आफना गुरु वाल्मीकिको कथनानुसार लव र कुश ई दुई कुमार जनसमूहमा गयेर जहाँ तहाँ रामायणको गान सुनाउँन लागे. जो इनी हरूको गान सुन्थ्यो, ऊ मोहित हुन लागदथ्यो. फेरी जुन

ठाऊँमा इनी हरूले गानको आरम्भ गरथे उस ठाऊँमा हजारौं स्त्री-पुरुषको भीड जम्मा हुन लागदथ्यो.

यस्तैमा महाराज रामचन्द्रबाट पनी इनीहरूका गानको वर्णन सुनन् भयो. सो गाना सुननाका निमित्त वहाँले पनी ई दुई कुमार-लाई आफना राज–सभामा बोलाउनूभयो. वहाँको आज्ञानुसार उनी-हरूले पनी अत्यन्त योग्यता साथ रामायण काव्यको गान प्रारम्भ गरे. उनीहरूको गाना सुनन् ता परै रहोस इनको सौन्दर्य र इनमा आफना शरीरको समानता देखी महाराज रामचन्द्रको हृदय प्रेमले पूर्ण हुँदै आयो. उनीहरूलाई देखदैमा वहाँको नेत्रका सामने नै सीता देवीको मूर्ति प्रत्यक्ष नाचन थाल्यो, यती मात्र होयिन कि वहाँका मनमा ई दुई कुमार पक्का सीताजी कै पुत्र हुन भन्ने यस्तो निश्चय समेत भयो. यसैले मुनिवेशमा रहेका ती दुई कुमारलाई देखेर रामचन्द्रका नेत्रमा अश्रुमण्डलले व्याप्त गऱ्यो. वहाँले आफनू प्रेम-प्रवाहलाई केही गरेर पनी रोकन शकनू भयेन. उत्तिखेरै वहाँले तेस दिनको सभा विसर्जित गरेर ती दुई कुमारलाई भनन् भयो, " आज-लाई तिमीहरूको गाना बन्द गर र अहिले तिमीहरू जाओ. फेरी फुर्स-दमा एक दिन तिमीहरूको गान सुनौंला " यती भनेर फेरी श्रीरामले इनीहरूका गान–शैलीको प्रशंसा गरदै आफनू कोशाध्यक्ष (खजान्ची) लाई आज्ञा दिनू भयो कि इनी हरूले मागे जती ऐश्वर्य पुरस्कार दियेर पठाऊ. परन्तु रामचन्द्रको तेस्तो आज्ञा भयो ता पनी ती कुमार-हरूले महर्षिको आज्ञानुसार वहाँबाट मिलेको धन लिने स्वीकार

गरेनन. तिनी हरूको तेस्तो निर्लोभता देखेर रामचन्द्र झन विस्मित हुनू भयो. यसै अवसरमा वहाँले ती कुमारहरू संग उनको परिचयप्राप्तिको इच्छा प्रगट गरनू भयो. तर उनीहरूले यत्ती मात्र विनयपूर्वक निवेदन गरे "महाराज ! हामी महर्षि वाल्मीकिका शिष्य होऊँ" इनी हरूको यो उक्ति रामचन्द्रलाई सन्देह–जनक भयो. वहाँले केवल इनीहरूलाई वाल्मीकिका शिष्य मात्र संझनू भयेन कि वहाँका मनमा सब तरहबाट ई जानकीका पुत्र हुन भन्ने पूरा निश्चय भयो. रामचन्द्रलाई मात्र होयिन कि भरत, लक्ष्मण, शत्रुघ्न र कौशल्या आदि राजपरिवार हरूमा पनी यही कुराको निश्चय भयेको थियो,

आफनू विचार र अरू सारा परिजनको समेत यही निश्चय देखेर श्रीरामले महर्षि वाल्मीकिलाई फेरी बोलाउँन पठाउँनू भयो. उनी आउना साथ वहाँले भननू भयो, कि भगवन् ! यदि जानकी शुद्ध छन र आफना सच्चरित्रताको प्रत्यक्ष परिचय दिन शकद्छिन भने शीघ्र यहाँ आयेर मलाई लोकापवादरूप कलङ्कबाट मुक्त गराउन.

रामचन्द्रको आज्ञा पायेर महर्षि वाल्मीकि पनी सीताजीलाई लिन भनी गये, महर्षिले सीताजीलाई लियेर आये पछी भोली पल्ट फेरी सीताजीका विषयमा रामचन्द्रले सभा गरनू भयो. वहाँ अनेक ऋषि मुनिहरू र राजाहरू समेत उपस्थित थिये. यज्ञोत्सवको समय हुनाले सुग्रीव विभीषण आदि मित्रवर्ग पनी अघीबाटै देखी निमं-

त्रित भयेर आयेकै थिये. उनीहरू समेत सब तेस सभामा विराज—मान भये. सारा सभागृह सभासद्का पारस्परिक आलापले गुञ्जित हुन थाल्यो. यस्तै अवसरमा महर्षि वाल्मीकिले पनी सीताजी र वहाँ का दुई कुमारलाई पछी पछी लियेर तेस सभागृहमा प्रवेश गरे. तेसवेला जानकी काषाय वस्त्रधारिणी ( गेरुवा पोसाक पहिरेकि ) हुनू हुन्थ्यो. यद्यपि वहाँ को पवित्र कलेवर स्वामी—विरह र तपश्चर्याले गरदा बहुतै कृशतर थियो, तथापि वहाँका मुख—मण्डलमा पातिव्रत्य धर्मको तेज झल्की रहेको थियो. वहाँको यो अवस्था देखेर सारा सभासद्का निमेषोन्मेषमा अश्रुप्रवाहले बाधा पारन थाल्यो. सम्पूर्ण सभासद्गण सीता देवीका मुखमण्डलमा टकटकी बाधेर हेरन लाग्यो.

सभामा पुगेर अभ्युत्थानादिका अनन्तर महर्षि आदिकवि वाल्मीकिले श्रीरामचन्द्रसंग निवेदन गरे. " महाराज ! हजूरकी पतिव्रता पट्टमहिषी सीताजी इनै हुन. हजूरको आज्ञा हुना साथ इनी आफना सच्चरित्रताको प्रत्यक्ष परिचय दिनाका निमित्त दृढ सङ्कल्प भयेकी छन. इनवाट पैदा भयेका हजूरका पुत्र—रत्न पनी इनै हुन. इनीहरूको जातकर्मादि सारा संस्कार मेरै आश्रममा भयेको छ. ई दुई कुमार सकलविद्याका निधान छन. धनुर्विद्यामा पनी इनी-हरू पारङ्गत छन. म आफना आजन्मको धर्मलाई लियेर शपथ गरन शकद छू कि सीता देवी सर्वथा निर्दोष छन. इनलाई हजूर शुद्ध संझेर ग्रहण गरनू होस. वास्तव मा हजूरले इनलाई त्याग

गरेको कारण केवल लोकनिन्दाका भयले मात्र हो, इनको शील स्वभाव र आन्तरिक विचार पनी हजूरमा सब जाहेरैछ. म के बिन्ती गरूँ.

वाल्मीकिको कथनानन्तर श्रीरामले भनन् भयो. " भगवन् ! तपाईँको कथन यथार्थ हो. जस्तो तपाईँ आज्ञा गरनू हुन्छ सीताजी उस्तै छन. अघी पनी लङ्काविजयका अन्त्यमा मैले सारा लोकका समक्षमा इनका सच्चरित्रताको परिचय दिये थें. परन्तु के गरूँ तपाईंलाई विदितै छ कि लोक–निन्दा प्रबल छ. यसै कारण मैले इनलाई फेरी वनवासको आज्ञा दियाको हूँ. तेसमा अरु कारण केही थियेन. यो कुरा अघी तपाईंबाट पनी आज्ञा भयो, तर अब पनी इनलाई निर्दोष जानेर पनी लोक–निन्दाका भयले नै म ग्रहण गरन सङ्कुचित हुन्छू.

महर्षि वाल्मीकिका साथ श्रीरामचन्द्रको सम्भाषण द्वारा सीताजीलाई पूर्णतया ज्ञान भयो कि अब यस असत्य लोकापवादका भयले शुद्ध ठहराये पनी मलाई श्रीरामचन्द्रले अवश्य ग्रहण गरनू हुने छैन. यस्तो निश्चय बुझेर सीताजीले विचार गरनू भयो, अब मैले यस संसारमा रहने काम केही छैन. यस भौतिक देहलाई आज यहीं विसर्जन गरदछू. यही विचारलाई दृढ गरी सीताजी सम्पूर्ण सभासद्का अगाडी रामचन्द्रका समीपैमा अधोमुख भयेर पृथिवी माता सँग यो प्रार्थना गरन लागनू भयो:–

" हे माता ! भूमिदेवी ! तपाईं मेरी जननी हुनू हुन्छ. तपाईं बाट नै मेरो शरीर संवर्धित भयेको हो. आज सम्म पनी मैले तपाईंकै अङ्क-मण्डलमा विचरण गरेर नै यो जीवन बितायें. अब म यस निरर्थक विचरण देखी विरत हुनाको इच्छा गरदछू. यसै कारण मेरो अन्तिम प्रार्थना तपाईंका चरण-कमलमा यही छ कि मेरो यो देह तपाईंका विराटरूपमा लीन होस. हे माता ! मेरा स्वामीले नै मलाई परित्याग गरनू भयो भने म सबतिरबाट परित्यक्त भई सकें, अब मेरो तपाईं सिवाय अर्को आश्रय कोही छैन. यस अवस्थामा प्राप्त भयेकी आफनी प्रिय-पुत्रीको शरण लिनू नलिनू तपाईंका इच्छामा छ. तर मलाई पूर्ण विश्वास छ कि मेरो शरीर सदाका निमित्त तपाईंको अन्तरात्मामा अवश्य मिलनेछ.

हे पाञ्चभौतिक देह ! अब तँ किन विलम्ब गरदछस ? मलाई बिदा दे, तँ जर्जर भई सकिस. तेरो र मेरो सम्बन्ध अबलाई सुहाउँदैन, आजैदेखी चिरानुभूत सम्बन्धको बन्धन तोडनू परदछ.

हे परमात्मन् ! तिमी अन्तर्यामी छौ, यदि म निर्दोष रहेछू, यदि मैले श्रीरामचन्द्र बाहेक अरू कुनै परपुरुषको ध्यान मात्र पनी कहिल्यै मनमा राखेकी रहिनछू, यदि श्रीराममा मेरो सच्चा भक्ति रहेछ भने, हे विश्वम्भर ! हे विश्वसाक्षी ! तिमीहरूलाई मेरो नमस्कार छ. अहिल्यै यस दुःख—जालदेखी मलाई मुक्त गराओ. "

सती—शिरोमणि सीता देवीले यसरी प्रार्थना गरदा गरदै जमीनमा धाँदो फाटन थाल्यो. वहाँको प्रार्थना पूरा हुँदा नहुँदा अकस्मात्

तेस धाँदाका बीचबाट सिंहासनाकार तेजो—मण्डल निसक्यो. तेसैमा विराजमान भयेर जगत्पूज्या सती—शिरोमणि सीताजी श्रीरामचन्द्र र अरु अरु सारा समसद्हरूका समक्षमा आफनी जननी जन्म—भूमिका अन्तरात्मामा सदाका निमित्त लीन हुनू भयो.

भगवती परमपावनी सीता देवीको लीला-सम्बरण देखेर महाराज रामचन्द्र चकित हुनू भयो. संपूर्ण सभ्य—मण्डली पनी आश्चर्य र शोक—सागरमा निमग्न भयो.

सीता देवी लोकान्तरित भयेका केही दिन पछी महाराज श्रीरामचन्द्र पनी, सारा राज्य—भार पुत्र हरूमा राखी, आफना भाईहरूका साथ स्वधाममा प्राप्त हुनू भयो. वहाँका पुत्र पौत्रादिहरू पनी आनन्द पूर्वक राजकाज चलाउन थाले. यही श्रीरामचन्द्रका चरित्र—चक्रको संक्षिप्त सूत्र हो.

यस विशाल संसार—क्षेत्रमा महाराज श्रीरामचन्द्र जस्तो धीर, वीर, धर्मज्ञ, सत्यसन्ध, प्रजा—रञ्जक, गो—ब्राह्मण—सेवक, पितृ—भक्त, नीतिज्ञ, गुणी, कृतज्ञ, दृढव्रत, सच्चरित्र, परोपकारी, विद्वान्, समर्थ, प्रियदर्शन, जित—क्रोध, तेजस्वी, पृथिवी समान क्षमाशील, कुबेर सदृश दानशौण्ड र समुद्र जस्तो गंभीर बुद्धिमान् पुरुष कोही अवतीर्ण भयेन. यस्ता जगत्पूज्य, कीर्त्तनीय चरित्र, श्रीरामचन्द्रको प्रतिक्षण भक्ति-पूर्वक चिन्तना गरेर सम्पूर्ण लोकले निज—चरित्रलाई सुधारनामा सदा प्रयत्नवान् हुनू परदछ, यसैले समस्त संसारको कल्याण हुनेछ.

### श्लोक.

राज्यश्री सुखभोगने समयमा छोडी अयोध्या पनी,<br>
जानू जंगलमा रूनू उहिं पनी कान्ता-वियोगी वनी;<br>
लाखौं कष्ट सहेर सिंहल पुगी श्रीजानकी ल्याउनू,<br>
ल्याई फेरि जनापवाद्–भयले त्यागी वियोगी हुनू.<br>
यस्ता आपद् राममा पनि परे प्रत्यक्षनै देखियो,<br>
दुःखैको अखडा रहेछ, बुझियो, निःसार संसार यो;<br>
राखी धैर्य तसर्थ विज्ञजनले थामी विपत्मा मन,<br>
आनन्दी रहनू, प्रमत्त न हुनू, यै भन्छ रामायण.

उत्तर–काण्ड सकियो.



१ लंका.

१९७० साल पौष २९ गते रोज २का दिन

यस समितिलाई भयेका खड्गनिशानाको

दफा २ बमोजीमको

# सूचना.



असलपाठ्य पुस्तक सम्बन्धी कुनै लेख कसैले लेखेको छ र सो लेख यस समितिमा चढाउन इच्छा गरेको-छ भने, यस समितिका अध्यक्ष, नायब सुब्बा पण्डित राम-मणि आ. दी. सँग भेट गरी आफनू अभिप्राय बताउनू. यदि सो लेख उपयुक्त ठहरीयो भने, समितिले जाँची मंजूर गरने छ. सो मंजूर भये पछी लेखकको इच्छा अनु-सार यस समितिले छापने अथवा लेखकैले आफनू तर्फबाट छापने दुई कुरामा एक कुराको बन्दोवस्त हुनेछ. यदि लेख-कले नै छापने भयो भने तेसको दाम पनी यति राखनू भन्ने समितिले व्यवस्था गरी दिनेछ.,

# यस समितिबाट तयार भयेका पाठ्यपुस्तकहरू.



| | | | |
|---|---|---|---|
| ( १ ) गोरखा पहिलो किताब दाम.... | .... | ·।२९. |
| ( २ ) गोरखा दोस्रो किताब दाम.... | .... | ·।४०. |
| ( ३ ) गोरखा संक्षिप्त रामायण दाम.... | .... | ।७९ |
| ( ४ ) गोरखा ,, भारत दाम .... | .... | ।७९ |

अरू गणित, कोश, इतिहासहरू बराबर बनदैछन तयार भये पछी चाँडैनै छपीने छन.

समितिबाट निस्केका पुस्तकहरू पाइने ठाउंः—

**नेपाल**, यही समिति र सब पुस्तक वेचने दुकान.

**बनारस**, प्राभाकरी कम्पनी, रामकटोरा बनारस छाउनी.

**कलकत्ता**, वाइङ्ग एजन्सी आफिस आफ नेपाल.

( ६९।१ मिर्जापूर स्ट्रीट कलकत्ता. )

निवेदक,

**पं. राममणि. आ. दी..**

**नायब सुब्बा.**